# मधुपर्क

जेठ २०८०

वर्ष ५६ : अङ्क १ : पूर्णाङ्क ६४४

(VOL 56, NO 1, MAY-JUNE 2023 )



कार्यकारी अध्यक्ष
विष्णुप्रसाद सुवेदी
तथा
महाप्रबन्धक
लालबहादुर ऐरीद्वारा
गोरखापत्र संस्थानका लागि
मुद्रित तथा प्रकाशित

**गोरखापत्र संस्थान,**
**धर्मपथ, काठमाडौं**
फोन नं. ०१-५३४४४३५
पो. ब. नं. २३, काठमाडौं

## सम्पादकीय

# आमसञ्चार, सञ्चार साधन र साहित्य

आमसञ्चार, आमसञ्चार साधन र साहित्य एकआपसमा अन्तरसम्बन्धित आयाम हुन् । साहित्य सन्देश हो, आमसञ्चार यस्तो सन्देश प्रसार गर्ने प्रक्रिया हो र आमसञ्चार साधन सन्देशलाई प्रसार गर्ने परिवहन हो, साधन हो । आधुनिक परिभाषाबाट हेर्ने हो भने सञ्चार प्रक्रिया पूर्ण हुन आवश्यक विभिन्नमध्ये सन्देश र साधन महत्त्वपूर्ण तत्त्व हुन् । सञ्चार प्रक्रियाको एक तत्त्व सन्देशलाई साहित्य भन्नुपर्छ । मानिसका बोलीचाली, सङ्केत, प्रतिसङ्केत र प्रतिक्रिया साहित्यको बृहत् परिभाषाभित्र पर्छन् ।

नेपालमा शिलालेख, ताम्रपत्र, भोजपत्र, पुस्तक, पत्रिका, अखबार, पर्चा हुँदै बाजा तथा ध्वनियन्त्र, नाट्यशाला, रेडियो, टेलिभिजन, चलचित्र, वृत्तचित्र, अनलाइन (मल्टिमिडिया) जस्ता सञ्चार/आमसञ्चारका साधनले साहित्यको श्रीवृद्धिमा योगदान दिँदै आएका छन् । वैदिक साहित्यको प्रसारमा देव, ऋषिमुनिहरूले साधनकै रूपमा श्रुति र स्मृति परम्पराको बाटो भएर सञ्चार/आमसञ्चारको काम गर्दै आएका हुन् । मानिस स्वयंलाई आमसञ्चारको साधन मान्नुपर्छ । आधुनिक युगमा नेपालमा आमसञ्चार साधनको विकाससँगै साहित्यले फैलने अवसर पाएको छ ।

पूर्वगोरखापत्र, गोरखापत्र र उत्तरगोरखापत्रका सबै आमसञ्चार साधनले नेपाली साहित्यको विकास र विस्तारमा योगदान दिँदै आएका छन् । गोरखापत्र र यसको भगिनी प्रकाशन मधुपर्कले साहित्यिक प्रकाशनको हैसियतमा नेपालको समग्र वाङ्मय क्षेत्रमा यथेष्ट योगदान दिएको सर्वविदितै छ । समय समयमा विविध विषय केन्द्रित सामग्री प्रकाशन गर्दै आएको मधुपर्कले यस पटक आमसञ्चार र साहित्य विषयमा विशेषाङ्क प्रकाशन गरेको छ । आमसञ्चार र साहित्य भनिए पनि आमसञ्चार साधन पनि यस सन्दर्भमा स्वाभाविक रूपमा जोडिन पुग्छ । साधनबिना सञ्चार पूरा हुन्छ तर आमसञ्चार पूरा हुँदैन । सन्देशबिना पनि सञ्चार पूरा हुँदैन । सन्देश भन्नु साहित्य पनि हो । यी सबै विषयमा सम्बन्धित क्षेत्रका जानकारका विचार पाठकसम्म सम्प्रेषित गर्नु मधुपर्कको उद्देश्य हो ।

आमसञ्चार साहित्यभन्दा नयाँ अवधारण हो तर साहित्यभन्दा पुरानो छ सञ्चार । आजभन्दा ३५ हजार वर्षअघि गुफाका भित्तामा बनाइएका चित्रले सञ्चारको काम गरे । करिब १० वर्ष पहिलेबाट भाषाको प्रचलन भएपछि साहित्यको औपचारिक यात्रा सुरु भएको मानिन्छ तर मानव अनुभूति र अभिव्यक्ति नै साहित्य भएकाले मानव उद्विकाससँगै साहित्यको विकास भएको स्वीकार गर्नुपर्छ । प्राविधिक रूपमा भाषा प्रचलित भएपछि साहित्य अस्तित्वमा आएको हो भन्न सकिन्छ तर मानिसले बोल्न जानेदेखि नै साहित्यको उपयोग तथा उपभोग भएको सत्य बिर्सन हुँदैन ।

सूचना प्रविधिको विकास तथा विस्तार, डिजिटल पुस्ताको निर्णायक उपस्थिति, लेखन र पठन संस्कृतिमा देखिएको ह्रासोन्मुख अवस्थाको आँधीबेरीबाट साहित्यलाई सुरक्षित गर्दै नूतन पुस्तामा हस्तान्तरण गर्नु वर्तमान युगको चुनौती हो । ■

**E-mail : madhuparkmonthly@gmail.com,**
**website : www.gorkhapatraonline.com**

मूल्य रु. २५।-
वार्षिक २५०।-

पूर्णाङ्क ६४३ / २०८० वैशाख अङ्क

मधुपर्क

## मधुपर्कलाई धन्यवाद : वनमालीजीलाई बधाई

१. मधुपर्कको २०७९ वैशाख अङ्क (पूर्णाङ्क ६४३)मा लेखक वनमाली निराकारजीले सडक कविता क्रान्ति २०३६ माथि एक संस्मरण लेख प्रकाशन गरेर नेपाली कविता साहित्यको एक ऐतिहासिक आन्दोलनलाई पुनर्ताजगी दिने उल्लेख्य काम गर्नुभएको छ ।

२. वास्तवमा यो कविता क्रान्तिमाथि थोरै मात्र तथ्यहरू बाहिर आएका छन् । आए पनि ती पूर्ण सत्य नभएर अर्धसत्यजस्ता मात्र भएका छन् । कतिपयले त यस क्रान्तिलाई बिर्सेका पनि छन् । धेरैले सडक कविता क्रान्ति २०४६ सालमा भएको भनेर कताकति बोलिएका कुरा पनि सुनिएकै हुन् ।

तर नेपाली कवितामा समसामयिक धाराको बीजारोपण गर्ने काममा र नेपाली कवितालाई आम पाठकबीच पनि लानु पर्छ, समसामयिक विषयमा सरल र सम्प्रेष्य कविताहरू पनि लेखिन सक्छन्, हुन्छन् भन्दै पहिलो पटक कविहरू अभिव्यक्ति स्वतन्त्रताको पक्षका सडकमा कवितामार्फत क्रान्तिमै होमिएका हुन् । यो क्रान्ति राजनीतिकजस्तो क्रान्ति नभएर चेतना र विचारको क्रान्ति थियो, पञ्चायती शासन व्यवस्थाले कवि लेखकहरूलाई एउटा अँध्यारो कालखण्डमा दबाएर राखेको लेखन स्वतन्त्रताको विष्फोटन पनि थियो । त्यो बेला कवि लेखक स्रष्टाहरू एक ढिक्का भएर जनमत सङ्ग्रहको एक पक्ष बहुदलीय व्यवस्थाको पक्षमा खुलेरै कवितामार्फत क्रान्तिमा होमिएकै थिए । त्यो बेलाको परिवेशमा त्यो लरतरो आँट र साहस थिएन ।

त्यसैले त्यो खुला समयमा पनि राज्य सत्ताले निराकारजीले उल्लेख गरेझैँ ज्यानका धम्कीलगायत ती कविहरूलाई अनेक तरहले दबाउने प्रयास भने गरेकै हुन् । कतिपय जागिरे कविहरूले आन्तरिक रूपमा प्रशासनिक कारबाही भोगेका कुरा त सामान्य नै थिए । यो लेखक पनि जागिरबाट भाग्यकै कारणले त्यसबेला बचेकै हो ।

३. मूल कुरा यहाँ स्मरणयोग्य र छुटाउनै नहुने तथ्य के हो भने नेपाली साहित्यसित जोडिएर आएका जेजति पनि वैचारिक आन्दोलनहरू छन् ती कुनैले पनि क्रान्ति शब्द जोडेका छैनन्, जस्तो मकै पर्व, लाइब्रेरी पर्व, सुक्ति सिन्धु, हलन्त बहिष्कार आन्दोलन, झर्रोवादी आन्दोलन, आयामेली आन्दोलन, बुटपालिस अभियान, अमलेख, राल्फा, तरलवाद, रङ्गवाद, भयवाद आदि आदि । सडक कविता क्रान्ति २०३६ यस अर्थमा पनि अलग थियो । यसको अलग्गै मूल्याङ्कन आवश्यक छ । निराकारजीले, संस्मरण नै सही, सडक कविता क्रान्ति २०३६ सम्बन्धी धेरै तथ्यबाहिर ल्याउनुभएकामा उहाँलाई बधाई छ । साथै यस्ता विषयलाई स्थान दिएकोमा मधुपर्क पत्रिकालाई पनि धन्यवाद छ । ■

**कृष्ण प्रधान**
**मञ्जरी भिलेज**
**इमाडोल, ललितपुर**

## सडक कविता क्रान्ति सम्झाइदियो

मधुपर्कको २०८० सालको वैशाख अङ्कमा वनमाली निराकारले आजभन्दा चवालीस वर्ष पहिले भवानी घिमिरेले नेतृत्व गर्नुभएको सडक कविता क्रान्ति-२०३६ लाई फेरि एक पटक ताजा बनाएर पाठकसमक्ष प्रस्तुत गर्नुभएकोमा हार्दिक बधाई ।

त्रिभुवनचन्द्र वाग्लेले नेपालका विद्यालय र क्याम्पसहरूको नाम र नेपालमा हुने विभिन्न साहित्यिक

वा अन्य समारोहहरूमा अन्तर्राष्ट्रिय शब्द प्रयोग कत्तिको सार्थक र सान्दर्भिक छ भनी उठाएको प्रश्नले सबैलाई सोच्न बाध्य पारेको। जुन देशको विद्यालय वा क्याम्पसमा आफ्नै देशको पाठ्यसामग्री र नागरिकलाई पढाइन्छ, त्यो कसरी अन्तर्राष्ट्रिय हुन्छ ? त्यसैगरी जहाँ एउटा छिमेकी देशका साहित्यकारहरूलाई भेला गराएर साहित्यिक गोष्ठी गरिन्छ भने त्यो पनि कसरी अन्तर्राष्ट्रिय हुन्छ र ? त्यसैले अन्तर्राष्ट्रिय शब्दको महत्त्व र गरिमालाई मनन गरी अब उप्रान्त उपयुक्त अवस्थामा मात्र यसलाई प्रयोग गर्नु न्यायोचित हुन्छ।

गीतकार किरण खरेलले नेपाली आधुनिक गीतमा दिएको अति महत्त्वपूर्ण योगदानको जति प्रशंसा गरे पनि त्यो थोरै नै हुन्छ। उहाँका कालजयी गीतहरू जस्तो कि– हिमालको काखमा छ मेरो सानो गाउँ, पर्वतकी छोरी हुँ म पार्वती हो नाउँ... यो हो मेरो प्राणभन्दा प्यारो माइतीघर माइतीघर... आदि गीतहरूले देश प्रेमको भावनालाई जागृत गराइरहन्छ युगयुगसम्म। गीतकार किरण खरेल र स्तम्भकार जय भट्टराईप्रति आभार प्रकट गर्दछु।

सत्यलाई हृदयस्पर्शी र मार्मिक ढङ्गबाट सरल शैलीमा संस्मरण प्रस्तुत गर्नुहुने माधव काफ्लेलाई हार्दिक बधाई र धन्यवाद ! ■

**टीकाथली, ललितपुर।**

## मधुपर्क अझ लोकप्रिय बनोस्

२०८० वैशाखको मधुपर्क समयमै पढ्ने अवसर मिल्यो। वैशाखको मधुपर्क निकै राम्रो लाग्यो। माधवप्रसाद घिमिरेको वैशाख शीर्षकको कविता निकै नै मन पऱ्यो। साम्ब ढकालले लेखेको ब्लुजमा वैशाख शीर्षकको कविता दोहोऱ्याएर पढेँ। वनमाली निराकरले लेखेको मेरो स्मृतिका झिल्काहरू शीर्षकको संस्मरण निकै नै पढ्नयोग्य रहेछ। जानु घितालको पुलिस शीर्षकको लघुकथा पढ्दा मेरो मन रमायो। प्रमोद प्रधानले लेखेको फरक स्वादको उत्कृष्ट जीवनी पुस्तक पढेपछि पारिजातलाई सम्झिन मन लाग्यो। कुन्दन शर्माको राधेश्याम शीर्षकको कविता र प्रकाश सायमिको भीडमा हराएको त्यो मान्छे शीर्षकको कविता ज्यादै नै मन पऱ्यो।

वियोगी बुढाथोकीको चैते हुरी शीर्षकको कविता राम्रो छ। अमृता स्मृतिको तिमीसँग जान मन छ शीर्षकको कविता पढ्दा मेरो मन रोयो। भूपिनको रङ अवतार शीर्षकको कविताले मेरो मन छोयो। गुप्तबहादुर श्रेष्ठ मुक्तकमा जमेका छन्। जय भट्टराईले लेखेको गीतमै छ दशक पढेपछि गीतकार दाजु किरण खरेलका गीतहरू रेडियो नेपालमा सुनिरहँदाको याद आयो। पवन आलोकको बेलायतमा रल्लिँदाका दिन शीर्षकको यात्रासंस्मरण निकै राम्रो रहेछ।

हिरण्यकुमारी पाठकको पेसा शीर्षकको कथा ज्यादै नै मार्मिक छ। रोशन थापा नीरवको दुःखको मेला शीर्षकको कथा र अनुपम रोशीको आर्यपुरुषको पदचाप शीर्षकको कथा निकै नै राम्रो लाग्यो। काशीराज आचार्यको नेता, खीर र ढिँडो लघुकथा पढ्दा मेरो मन रमायो। हाइकुले भने स्थान पाउन सकेन। मधुपर्क साहित्यिक पत्रिकाको उज्ज्वल भविष्यको कामना गर्दछु। साथै मधुपर्क पाठकहरूमाझ अझ धेरै लोकप्रिय बनोस् भन्ने आशा तथा विश्वास राख्छु। ■

**– अरुणबहादुर खत्री 'नदी'**
**बूढानीलकण्ठ–४, पासिकोट, काठमाडौँ**

## लेखक तथा पाठकमा अनुरोध

मधुपर्क तपाईं–हाम्रै साझा चौतारी हो। यसलाई सबैको माया जरुरी छ। अतः मधुपर्कका लागि यहाँहरूबाट कथा, कविता, नाटक, निबन्ध, गजल, मुक्तक, हाइकु लगायत सिर्जना र कला तथा वाङ्मयसम्बन्धी आलेख आह्वान गरिन्छ। प्रीति फन्टमा टाइप गरी छरितो, सम्प्रेष्य र शुद्धाशुद्धि परीक्षण गरी पठाइएका रचनाले पहिलो प्राथमिकता पाउने छन्। प्रेषित रचना एक वर्षभित्र प्रकाशित हुन सक्ने हुनाले त्यस अवधिभित्र ती रचना अन्यत्र नपठाउन अनुरोध छ। साथै मधुपर्कमा प्रकाशित सामग्रीबारे आफ्ना सटिक प्रतिक्रिया पठाउन पनि लेखक तथा पाठक वर्गलाई अनुरोध छ।

लेख–रचना तथा प्रतिक्रिया पठाउने ठेगाना–

**मधुपर्क मासिक**
गोरखापत्र संस्थान
धर्मपथ, काठमाडौँ
अथवा
पोस्ट बक्स नं : २३, काठमाडौँ।
madhuparkmonthly@gmail.com




# यस अङ्कमा

## प्रवेश



## आमसञ्चार र साहित्य विशेष



## कविता/गजल



## कृति परिचय १०८-११२

# केही विद्वान्हरूको सम्झनामा

◆ भैरव अर्याल




.........“३० वर्षसम्म गोरखापत्रमा दिनहुँ जस्तो केही न केही लेखियो तर लेखियो गयो; देखिने कुरा त यिनै २, ४ वटा पुस्तक नै भए” कुरा कुरैमा एक दिन उनले भनेका थिए । हुन पनि ३० वर्षसम्म प्रेमराज शर्माले के लेखेनन् ? सम्पादकीय, लेख, समाचार, चिठी इत्यादि अखबारका कुनै पनि विधाको माध्यम जुन बेला जे जस्तो लेख्नुपर्छ उनले लेखे । साहित्य लेखे, दर्शन लेखे, संस्कृति लेखे, राजनीति लेखे । राणा कालका वरिष्ठ बुद्धिजीवी भएकाले अखबारी लेखन र साहित्यिक लेखन जस्ता प्रकाशनीय लेखनबाहेक पनि उनले थुप्रै थुप्रै आवेदन, प्रतिवेदन, जाहेरी, मस्यौदा, भाषण, इस्तिहार– कुन्नि के के पनि लेखे हुनन् । लेख्नुभन्दा बढी जाँचे, सच्याए, कतिलाई लेखक बनाए । कतिलाई पत्रकार बनाए गोरखापत्रका कर्मचारीहरूलाई मात्र होइन र स्वयं गोरखापत्रलाई पनि उनले पटक पटक सङ्कटबाट उतारे । गोरखापत्रले अर्धसाप्ताहिक र द्विदैनिक रूप उनकै सम्पादकत्वमा लिएको थियो । ९० सालको भुइँचालो, ९७ को शहीद पर्व, ७ को जनक्रान्ति, १५ को आमचुनाव जस्ता घटना गोपका सम्पादकको निम्ति सजिला थिएनन्, जुन उनका पालामा परेका थिए त्यसैले गोप भन्छ– “..... एक कठिन कठोर र प्रतिकूल परिस्थितिमा पत्रकारको धर्म र दायित्वलाई असिधारामा अडेझैँ गरी उहाँले पूरा गर्नुभएको छ ।”

२०२८ सालमा प्रेमराज शर्माको निधन हुँदा गोरखापत्रले उक्त उद्गारका साथ नेपाली पत्रकारिताका इतिहासको एक परिच्छेद पूरा भएको ठानेको थियो । .......

**गोरखापत्रका एकसय एक निबन्ध, २०६०**

# पत्रकारिता : साहित्यको विशिष्ट विधा






◆ ध्रुवहरि अधिकारी

●●●

आमसञ्चारका माध्यमले आमनागरिकका आवश्यकतालाई सम्बोधन गर्नुपर्ने हुन्छ । दैनिक अखबारकै सम्पादकीय अग्रलेखहरू सम्पादकले औपचारिक बनाउने क्रममा केही क्लिष्ट पार्न सक्छन् । त्यस हिसाबले ती स्तम्भ, अग्रलेखहरू पनि साहित्यको कोटिमा पर्छन् ।

●●●

*खालि शक्ति त्यसै हुन्न सत्यको नलिई भर ।*
*जति चौडा भयो सत्य उति टिक्छ पुगी पर ॥*

**–महाकवि लक्ष्मीप्रसाद देवकोटा**

साहित्य र पत्रकारिता बुझाउन दुई अलग शब्दको प्रयोग गरिएबाट नै यी अलग विधा हुन् भनेर बुझ्न सकिन्छ । यद्यपि यी दुईबीच अन्योन्याश्रित सम्बन्ध रहेको पक्षलाई सधैँ, सहजै खुट्याउन सकिएको हुँदैन । जस्तो हप्ताका सातै दिन प्रकाशित हुने गोरखापत्रमा शनिबार परिशिष्टाङ्क भनेर चार पृष्ठ थपिएको हुन्छ । जसमा कथा, कविता, रङ्गमञ्चीय कला, पुस्तक चर्चा, राशिफल, पहेली आदि समावेश गरिएको हुन्छ अर्थात् त्यस दिन साहित्यिक परिकारहरू पनि पाठकलाई उपलब्ध गराइएको हुन्छ । यस्तो प्रचलन हाम्रै मुलुकका अन्य छापाहरूमा पनि पाइन्छ तर यो नेपालको मात्र अभ्यास होइन ।

बेलाइतको 'द टाइम्स' समाचारपत्रले सप्ताहान्त विशेष भनेर दैनिक प्रकाशनमा आउनेभन्दा दोब्बर पृष्ठहरू थपीकन पाठकलाई मनोरञ्जन प्रदान गर्ने गर्दछ । त्यस्तै अमेरिकाको 'द न्युयोर्क टाइम्स'ले थपमाथि थप गरी पुस्तिका आकारको 'म्यागाजिन' नै वितरणमा पठाउने गर्दछ । छिमेकको भारत र केही टाढाको अस्ट्रेलियाका पाठक पनि यस सन्दर्भमा अपवाद होइनन् । स्वतन्त्र विश्वमै पर्ने देशका फ्रान्सेली, जर्मन, स्पेनीलगायतका भाषाका छापा यस सन्दर्भका अन्य उदाहरण हुन् । खास गरेर शनिबार वितरण हुने मुद्रित संस्करणले छुट्टीको दोस्रो दिन अर्थात् आइतबारसम्मको आवश्यकतालाई धानेको हुन्छ । अखबारका डिजिटल संस्करण हेर्न अभ्यस्त पाठकले मुद्रित संस्करणका सबैजसो पाठ्यसामग्री पाएकै हुन्छन् । अनलाइन संस्करण मात्र भएका माध्यमले समेत यही परम्परा कायम राखेको देखिन्छ । रेडियो र टेलिभिजनबाट पनि कवि सम्मेलन, वार्तालाप, महोत्सवहरूको प्रत्यक्ष प्रसारण गरिने गर्दछ । कथा, उपन्यासहरूलाई वाचन गरेर किस्ताबन्दीमा सुनाउने प्रचलन पनि बढ्दो छ । स्रोता–दर्शक नहुँदा हुन् त यस्तो ढाँचाका लागि साधन–स्रोत खर्चिने थिएन होला ।

दैनिक छापाले सातामा एकपल्ट साहित्यिक पृष्ठ वा खण्ड थप्ने हुनाले मात्र साहित्य र पत्रकारिता एकआपसमा निकट भएका हुन् भनेर ठान्नु भने गलत हुनेछ । न त नेपालीमा 'पत्रपत्रिका' शब्द सँगसँगै आउने लवज भएका कारणले नै यस्तो निष्कर्षमा पुग्न मिल्दछ । यथार्थमा साहित्य त मानवीय गतिविधिका सबैजसो पक्षसँग गाँसिएर रहेको हुन्छ । पूर्वीय परिप्रेक्ष्यमा यसको एक दृष्टान्त उज्जैनका राजा भर्तृहरिद्वारा दुई हजार वर्षअघि रचित 'नीतिशतक' हुन सक्दछ । यसमा भनिएको छः– 'साहित्यसङ्गीतकलाविहीनःसाक्षात्पशुःपुच्छविषाणहीनः ।' अर्थात् जो मानिसले साहित्य, सङ्गीत र कला जानेको छैन ऊ सिङ र पुच्छर नभएको पशु समान हो । (अनुवादक मदनप्रसाद अर्यालको २०५५ सालमा प्रकाशित 'भर्तृहरिका तीनवटै शतकहरू' नामक अनूदित पुस्तकबाट)

नीति शतक दुई हजार वर्षअघि लेखिएको मानिन्छ । लेखिएको मात्र त्यस बखत हो, मानव चाहना र जिज्ञासासम्बन्धी मान्यता त त्यसभन्दा निकै अघि नै स्थापित भइसकेका हुन्; हुनुपर्छ । भर्तृहरि वनबास गएपछि उज्जैनका राजा भएका उनैका भाइ विक्रमादित्यको नामबाट चलेको संवत्सर नेपालमा प्रचलित रहिआएको हुनाले नीति शतक हाम्रा लागि बढी सान्दर्भिक हुन आएको छ ।

साहित्य मानवजीवनको नैसर्गिक पाटो मानिएकै परिप्रेक्ष्यमा पत्रकारिताको फाँटलाई नियाल्न सकिन्छ । किनभने साहित्यको फराकिलो परिधिको एक छेउमा पत्रकारिताको स्थान छ । अर्को शब्दमा पत्रकारिता पनि साहित्य हो जुन केही छिटो गतिमा अघि बढ्छ । एउटा अखबार घटना, दुर्घटनाहरूको अभिलेख पनि हो । कसैकसैले यसलाई इतिहासको पहिलो मस्यौदा पनि भनेका छन् । जे होस्, आधुनिक युगमा प्रचलित पत्रकारिताको थालनीको श्रेय लिने पश्चिमीजगत्ले पनि आखिरमा समात्ने त स्थापित शाश्वत मान्यता नै हो । 'पत्रकारिता हतारमा लेखिने साहित्य हो' (व्यगचलबष्कि ष्क ष्तिभचबतगचभ ष्ल ब जगचचथ) भन्ने उन्नाइसौँ शताब्दीका बेलाइती कवि एवं समालोचक हुन् म्याथ्यु आर्नोल्ड (:बततजभध ब्चलयमि) । पत्रकारिता पढ्ने र त्यससम्बन्धी सीप सिक्ने हरेक मानिस यस कथनसँग परिचित छ र उसले पनि यो उद्धरण बेलाबखत दिइरहन्छ ।

पत्रकारितामा प्रवेश गरेका महिला–पुरुष सबैलाई समयको चाप हुन्छ किनभने तिनले आफूले सङ्कलन गरेका सूचना तथा जानकारीलाई समाचारमा ढालेर जतिसक्यो चाँडो जनसमक्ष पुऱ्याउनुपरेको हुन्छ । ढिलो गर्दा सूचना बासी हुन पुग्छन् । भन्नै परेन, समाचार ताजा भए मात्र समाचार कहलिन्छ । त्यसैले समाचार सङ्कलन गर्ने, सम्पादन गर्ने र वितरणमा लैजाने प्रक्रियामा लागेका पत्रकारहरू सदैव हतारमा रहन्छन् । त्यसैले यदाकदा 'हतारको काम लतारपतार' हुन जान्छ । जतिसुकै चनाखो भए पनि बेलाबेलामा भाषामा वा तथ्यमा तलमाथि परेको हुन्छ; त्रुटि, गल्तीहरू भई नै हाल्छन् । त्यसैले कतिपय देशमा स्थापित अखबार र प्रसारण माध्यमहरूले 'भूलसुधार'का लागि स्थायी स्तम्भ नै राखेका हुन्छन् । आआफ्ना शैलीअनुसार आवश्यक परेका बखत मात्र पाठकहरूसँग क्षमायाचना गर्ने परिपाटी पनि प्रचलनमा छ ।

हतारमा रचिने साहित्यको दाँजोमा फुर्सदमा लेखिने वा सिर्जना गरिने साहित्य बढी परिमार्जित र आकर्षक हुन्छ । त्यसैले होला नेपालको एक राष्ट्रिय दैनिकले शनिबारको अतिरिक्त खण्डलाई नै 'फुर्सद' नाम राखेको देखिन्छ । भनौँ, बसीबिऔलो गर्न काम लाग्ने सामग्रीको पुलिन्दा । कथा, निबन्ध, कविता, गीत, समीक्षा लेख्दा लेखकले सिर्जनाशक्ति प्रयोग गर्न पाउँछ । यसो गर्दा उसलाई कल्पनाको उडान भर्दै वास्तविक संसारभन्दा टाढाटाढासम्म पुग्ने सहुलियत हुन्छ । तर पत्रकारलाई यस्तो छुट पटक्कै हुँदैन । उसले हरघडी तथ्यमा आधारित भएर मात्र काम गर्नुपर्छ; तथ्यहरूको भऱ्याङबाट खुड्किला उक्लिँदै सत्यको निरूपण गर्न सकिने तहमा पुग्नुपर्छ । उसले कथिएको कुरातिर लाग्नै हुँदैन । कथिएका कुरा प्राप्त भए भने तिनको थुप्रोबाट केलाइ–केलाइकन तथ्य–तथ्याङ्क बटुल्नुपर्छ । यसरी सङ्कलित जानकारीलाई स्रोत खुलाएर मात्र जनसमक्ष प्रवाहित गर्नुपर्ने हुन्छ । हेलचेक्र्याइँ गर्न वा भावनामा बग्न कदापि पाइँदैन । पत्रकारिता सेवाको पेसा हुनाले पेसाप्रति प्रतिबद्ध पत्रकार वा सञ्चारकर्मीले आचारसंहिता र त्यसले तोकेको अनुशासनको सीमा पनि नाघ्न सक्दैन ।

साहित्यका स्रष्टाहरूले भने लचिलो हुन पाउँछन् । तिनलाई कविशिरोमणि लेखनाथले देखाएको भाषाको विशाल चौरमा बिस्तार–बिस्तार डुल्ने, टहल्ने सुविधा प्राप्त छ । अनुभवसिद्ध कुरो हो, यसरी सिर्जित साहित्यले नै समाजका अन्य सदस्यलाई जस्तै पत्रकारलाई समेत खुराक उपलब्ध गराएको हुन्छ; गराउने अपेक्षा गरिन्छ । हो, साहित्यकार र पत्रकार दुवै अक्षरकर्मी हुन् र उही भाषाको चौरमा विचरण गरेका हुन्छन् तथापि यी दुईको बेगमा अन्तर छ । लक्षित समूह पनि फरक फरक छन् । पत्रकारिताको माध्यमबाट प्रवाहित हुने सूचना, जानकारी सादा पानी हो भने साहित्यलाई स्रोत मान्दा त्यसबाट प्राप्त हुने वस्तु मीठो सर्वत हो । पानी अनिवार्य हुन्छ, सर्वत वा जुस ऐच्छिक । तर अचेल हावाजस्तै पानी पनि प्रदूषित भएको छ । सूचना पनि प्रदूषित भइरहेका छन् । प्रदूषित पानीले शरीरमा रोग विकार गराउँछ भने प्रदूषित सूचनाले मानिसको मन–मष्तिष्कलाई असर पारिरहेको हुन्छ ।

सकेसम्म सरल भाषा र मीठो शैली पत्रकारिताका भाषिक मानक हुन् । साक्षर नेपालीले पढ्न सक्ने छापा र साक्षर हुन नपाएका अनि देश–परदेशमा छरिएका नेपालीभाषीले समेत सुनेर सजिलोसँग बुझ्न सक्ने प्रसारण सामग्री हुनु आवश्यक छ । आमसञ्चारका माध्यमले आमनागरिकका आवश्यकतालाई सम्बोधन गर्नुपर्ने हुन्छ । दैनिक अखबारकै सम्पादकीय अग्रलेखहरू सम्पादकले औपचारिक बनाउने क्रममा केही क्लिष्ट पार्न सक्छन् । त्यस हिसाबले ती स्तम्भ, अग्रलेखहरू पनि साहित्यको कोटिमा पर्छन् । तर यहाँनेर आख्यान र गैरआख्यानको अन्तरलाई यथास्थानमा राखेर बुझ्न जरुरी छ ।

साहित्यकारले आफ्ना सिर्जनालाई सुन्दर, मनमोहक र आकर्षक बनाउन ठाउँअनुसार क्लिष्ट शब्दहरू समेत प्रयोग गर्न पाउँछन् । सुवासको साथमा मिठास आओस्

भनेर मसला मिसाउन सक्छन् । फूलबुट्टा भर्न तिनलाई कसैले रोक लगाउँदैन । तर पत्रकारलाई यतातिर प्रवेश गर्ने अनुमति हुँदैन । उनीहरूले वास्तविकताको धरातल एकछिन पनि छोड्न पाउँदैनन् ।

यस कोणबाट हेर्दा साहित्य आदर्श हो भने पत्रकारिता यथार्थ । स्पष्टै छ, क्लिष्ट वा हत्पति नबुझिने शब्द वा बिम्ब उपयोग गर्ने सुविधा आख्यानतर्फ कलम चलाउनेलाई मात्र प्राप्त छ । सञ्चारकर्मीले भने तथ्यबाट दाहिने बायाँ गर्न नपाउने परिधिमा रहेर काम गर्नुपर्ने हुन्छ । पत्रकारितामा सिर्जनशील हुने ठाउँ सीमित हुन्छ । जस्तो समाचारका शीर्षक लेख्दा र छायाचित्र (तस्बिर) मुनि रहने चित्र–चित्रण (क्याप्सन)को ठाउँमा मौलिकताका लागि सानो चोटो त रहन्छ तर सावधान हुनेहरूका लागि मात्र । किनभने शीर्षक पनि शीर्षकमुनिको बेहोरा (पेटबोली)सँग नमिल्ने शब्दहरू छिराएर लेख्न मिल्दैन । प्रवाहित गर्न खोजिएको सन्देशमा विचलन आउने अथवा अर्थ बाङ्गिएर अनर्थ हुने स्थिति आउन किमार्थ दिनुहुँदैन । 'नरो वा कुञ्जरो' भनेर दोधारे शैली समात्ने अनुमति पत्रकारिताले दिँदैन । कतै श्लेष पर्नु संयोग मात्र हो ।

क्लिष्ट वा दुरुह हुन रुचाउने स्रष्टाले त्यो काम कुन हदसम्म गएर गर्न पाउँछ र त्यसमा पाठकको सिकायतले कुन तहको सुनुवाइ पाउनुपर्छ, त्यसबारे प्रोफेसर यदुनाथ खनाल (विसं १९७०–२०६१)को भनाइ यहाँछेउ सान्दर्भिक हुन आउँछ । शिक्षा, साहित्य र कूटनीति तीनवटै विधामा भएको गहिरो अध्ययन भएका विद्वान् खनालको 'जीवनी र विचार' पुस्तकमा लेखक प्रा. जयराज आचार्यले कविताको प्रसङ्गमा यो उद्धरण समावेश गरेको पाइन्छ :

'कविको नबुझिने हुन कति हक छ ?' भन्ने विषयमा यदुनाथको भनाइ यस्तो छ– 'आफ्नो अनुभव आफैँले मात्र बुझ्ने गरी कविता रचेर क्लिष्ट हुनु कविको हक छैन । आफ्नो अनुभव पाठकमा सञ्चार नगरीकन कवि हुँदैन ।' पाठकहरूले कविता बुझ्ने कोसिसै नगरी दैनिक अखबार जस्तो एकपल्ट सर्र पढ्दा बुझिएन भन्दैमा बुझिएन भनी कोलाहल गर्ने जत्तिको पाठकलाई हक छैन, त्यत्तिकै उचित चेष्टा गरी बुझ्न खोज्ने पाठकहरूले समेत नबुझ्ने गरी कविता लेख्ने कविको हक छैन ।'

यहीँछेउ, प्रा. आचार्यले लिओ टल्सटायको उक्तिको उद्धरण गर्नुभएको छ– कविको मुख्य गुण 'सञ्चार हो । जति मात्रामा कवि पाठकले बुझ्ने हुन्छ त्यति मात्रामा कवि ठूलो हुन्छ ।

माथि चर्चित खनालको उद्धरणमा दैनिक अखबारमा एकपल्ट सर्र पढ्दै बुझिने गुण (खुबी) हुनुपर्ने कुरा औँल्याइएको छ । अर्को शब्दमा, कविता चेष्टा गरेर पटक पटक पढेपछि मात्र बुझिने हुन सक्छ तर अखबारचाहिँ एकै वाचनमा बुझिने हुनुपर्छ अर्थात् सरल शब्द, छोटा वाक्य र सिधा सन्देश अखबारका आकर्षण हुन् । यसरी समालोचक खनालले कविहरूलाई लक्ष्य गरेर गरेको टिप्पणीमा पत्रकारमा कस्तो सीपको अपेक्षा गरिन्छ त्योसमेत एकैसाथ दर्साउन पुग्नु भएको छ । खनालले परराष्ट्र सचिव भएर नीति–निर्धारणको तहमा रहनुका अतिरिक्त नेपालका लागि खास महत्त्व राख्ने तीनवटा देश–भारत, अमेरिका र चीनमा राजदूतको कार्यभार वहन गर्दा सयकडौँ स्वदेशी विदेशी पत्रकारका जिज्ञासालाई सम्बोधन गर्नुभएको हुँदो हो । यस्तो विशिष्ट अनुभव सँगाल्ने अवसर र क्षमता कति जना नेपालीले पाएका होलान् !

अमेरिकी पत्रकारितामा जोसेफ पुलित्जर (सन् १८४७–१९११) चर्चित नाम हो । उनको नाममा स्थापित पुरष्कार पाउन त्यहाँका सञ्चारकर्मीहरू सदैव प्रतिस्पर्धामा रहेका हुन्छन् । पुलित्जरले तथ्यपरकता (एक्युरेसी)लाई सर्वाधिक महत्त्व दिन्थे । उनीपछिको पुस्ताका पत्रकार हरूले वस्तुनिष्ठ पनि हुन सिके । अचेल त्यताका सबै पत्रकार आफ्नो लेखाइ/प्रस्तुति स्पष्ट, कसिलो र रसिलो पार्नुपर्नेमा सजग रहन्छन् । यस हरफको लेखकले रोइटर्स समाचार समितिको नेपाल–प्रतिनिधि भएर काम गर्दा सम्पादकहरूले 'छिटोपन र तथ्यपरकता' (स्पिड एन्ड एक्युरेसी) मा सदैव जोड दिन बेलाबेलामा सन्देश पठाउने गरेको सम्झना हुन्छ । भूमिका नबाँधीकन सोझै विषय वा घटनामा प्रवेश गर्नु नै बहुधा पत्रकारहरूले अँगाल्ने शैली हो । तर शैली यस्तो अँगाले पनि प्रस्तुतिमा जाने वस्तु भनेको 'कथा' (स्टोरी) नै हो । सत्य–कथा । भन्नै परेन, कथा साहित्यकै विशिष्ट विधा हो । कथाको शैलीमा प्रस्तुत गरिएका विवरण नै मानिसले अभिरुचिका साथ पढ्छन्; सुन्छन् । यसउसले भन्न सकिन्छ– पत्रकारहरू साहित्यको फराकिलो परिवेशबाट कहिल्यै बाहिर हुँदैनन् ।

निष्कर्षमा मूल उद्देश्य समाज सेवा हुँदाहुँदै पनि पत्रकारिता र सिर्जनशील साहित्यका प्राथमिकता अलग अलग देखिन्छन् । पत्रकारिता पहिलो प्राथमिकता समाजलाई सुसूचित गर्ने र शिक्षित तुल्याउने कुरालाई दिन्छ; विशुद्ध मनोरञ्जनको पाटोलाई तेस्रो महत्त्वको विषय ठान्दछ । यता सिर्जनशील साहित्यले मनोरञ्जनलाई अग्राधिकार दिँदै त्यसकै माध्यमबाट समाजलाई उपयोगी पाठहरू उपलब्ध गराउन लागिपरेको हुन्छ । सार हो– ढुङ्गाको भर माटो, माटाको भर ढुङ्गो । अनि हेक्का गरौँ, पत्रकारितालाई हतारमा लेखिने साहित्य हो भन्ने व्यक्ति म्याथ्यु आर्नोल्ड स्वयं एक कवि अर्थात् साहित्यकार थिए ! ■

**ज्ञानोदय पुस्तकालय मार्ग**
**झम्सिखेल, ललितपुर ।**

# साहित्यभित्र फस्टाएको पत्रकारिता जगत्






◆ पी खरेल

सञ्चार समाजीकरणको महत्त्वपूर्ण माध्यम भए पनि सबै सञ्चार आमसञ्चार होइनन् । न त आमसञ्चार स्वतः पत्रकारिता हो । ठूलो सङ्ख्यामा पाठक–दर्शक–श्रोतालाई संलग्न गराउँदै पत्रकारिताले केही अनिवार्य विशेषताहरू आत्मसाथ गर्छ, जसबिना त्यसले आफ्नो विशिष्ट पहिचान गुमाउँछ । यद्यपि साहित्यका कुनै न कुनै आधारभूत विशेषताले धेरै प्रकारका सञ्चारमा स्थान पाउँछ । हुन पनि साहित्य जीवन तथा विचारको चित्रण हो ।

●●●

प्रायः लेखकहरू वर्तमानका लागि लेख्छन्, आफ्नो विचार राख्न र आफ्नो उपस्थिति जनाउन । अझै धेरै त लेखकको बथानमा आफूलाई दर्ता गराउन मात्र पनि इच्छुक हुन्छन् । आफ्ना भावना र विचार व्यक्त गर्दा पाउने आनन्दका लागि लेख्नेहरू दुर्लभ प्राणी हुन् ।

●●●

**शब्दसागर**

गोरखापत्रका पूर्वप्रधानसम्पादक गोकुलप्रसाद पोखरेलका अनुसार साधारण अर्थमा एक व्यक्तिबाट अर्को व्यक्तिसम्म सङ्केत, बोली, लिपि वा अन्य कुनै प्रकारले विचार, धारणा एवं जानकारी पुऱ्याउने कामलाई सञ्चार भनिन्छ । जब एक व्यक्तिभन्दा बढी असीमित जनसमुदायका लागि कुनै माध्यमको सहायताद्वारा कुनै पनि विषयवस्तुलाई सन्देशका रूपमा प्रसारण, प्रक्षेपण गरिन्छ तब यस्तो प्रक्रियालाई आमसञ्चार वा जनसञ्चार भनिन्छ । प्रत्यक्ष रूपमा गरिने सञ्चारको तुलनामा जनसञ्चारको कला निकै जटिल हुन्छ । किनभने विभिन्न प्रवृत्ति र धारणाका हजारौँ लक्षित समुदायलाई एकै पटक एकै किसिमका सूचनाहरू प्रवाहित गर्दा सञ्चारकर्मीले कुनै व्यक्ति विशेषका चाहनालाई मात्र पूरा गर्ने गरी सन्तुष्टि दिन सक्दैन ।

आजभन्दा हजारौँ वर्षअगाडि विद्वान्हरू आफ्नो मस्तिष्कमा साहित्य सिर्जना गर्थे, परिष्कृत पार्थे र नयाँ पुस्तालाई हस्तान्तरण गर्थे । लेखनको आगमनले विचार, नतिजा–निष्कर्ष तथा अनुभवलाई आम पाठक–श्रोता समक्ष पुऱ्याई सञ्चय गर्न र जोगाउन योगदान दिन्थे । त्यसैले स्लोआन र स्टोभल (सन् १९८९)ले लेखनलाई "मानव जातिको सांस्कृतिक विकासक्रममा सबैभन्दा क्रान्तिकारी आविष्कार"का रूपमा व्याख्या गरेका छन् । ह्यारल्ड रिग्गिन्स (सन् १९९२)का अनुसार आज विश्वमा करिब चार हजार भाषा बोलिन्छन् । दुर्भाग्यवश ती भाषामध्ये आधाजति एक शताब्दिभित्र लोप हुने देखिन्छन् ।

**कठोर जोखिम**

छापाका केही रूप चीन र कोरियामा एघारौँ शताब्दीमा विकसित भइसकेका भए पनि जर्मनीका जान गुटेनवर्गद्वारा सन् १४५० को दशकमा निर्मित हस्तसञ्चालित छाप्ने मेसिनले शीघ्र नै धेरै स्वीकार्यता पायो । माइन्स सहरका ती जर्मन आविष्कारकको मृत्यु अभावै अभावमा भए पनि उनको अविष्कार अन्ततोगत्वा व्यापक व्यावसायिक प्रयोगमा सफल रह्यो । सो आविष्कारसँगै किताब उद्योगको उदय भयो । त्यसपछि आए किताबी आकारका समाचारपत्रहरू पहिला दुई पृष्ठका अनि चार पृष्ठका ।

धेरै छापखाना सञ्चालकहरूले छापिएका समाचारप्रतिको माग पूर्ति गर्ने प्रयास गरे तर त्यो खतरायुक्त पनि थियो । इङ्ग्ल्यान्डका राजा चार्ल्स

प्रथमबारे आलोचनात्मक टिप्पणी गर्दा लन्डनवासी विलियम प्रायनलाई सन् १६३४ मा पाँच हजार पाउन्ड जरिवाना गरियो, उनको कान काटियो, उनलाई टावर अफ लन्डनमा एक वर्ष जेल सजाय दिइयो । उनको विश्वविद्यालयको डिग्रीसमेत खोसियो । राजाको अधिकार कटौती गर्न चर्चित म्याग्नाकार्टा घोषणा भएको २२५ वर्षअघि यो घटना घटेको थियो ।

आखिर करिब २५०० वर्षअघि एथेन्स राज्यका अधिकारीहरूबाट मृत्युदण्ड पाएका ग्रिसेली दार्शनिक सोक्रेटिस (इ.पू. ४६९–३९९)ले आफ्नो अभिव्यक्ति स्वतन्त्रतालाई कुण्ठित पार्नुभन्दा विष सेवन रोजे ।

सूचित गर्न र शिक्षित बनाउन शब्दहरूको अहम् भूमिका हुनाले सामाजिक एकाइहरू एकअर्कासँग जोडिन सक्छन् । शब्दहरूले विगतका स्वरहरूलाई प्रतिनिधित्व गर्ने, वर्तमानलाई डोऱ्याउने र चिरकालका लागि ज्ञानलाई सुरक्षित राख्ने काम गर्छन् । बेलायतका नामुद अङ्ग्रेजी लेखक सलमान रुस्दीले आफ्नो पन्ध्रौँ उपन्यास भिक्ट्री सिटीको गत माघमा विमोचन गर्दा भने, "शब्दहरू एक मात्र विजेता हुन् ।"

लेखन लेखकको हृदयको अभ्यन्तरबाट निक्लेको जोश हो । यसले विगतका विचारलाई वर्तमान र भविष्यसित बाँड्छ र जोड्छ । त्यसैगरी पढ्नु एक मिश्रित यात्रा हो, जसको प्रमाण पठन सामग्रीको अन्तर्वस्तु र पाठकको व्याख्यामा निर्भर हुन्छ । अङ्ग्रेजी निबन्धकार फ्रान्सिस बेकनको एक भनाइ आज पनि सान्दर्भिक छ । "केही किताबहरू चाख्नका लागि हुन्, केही निल्नका निम्ति । कति कमचाहिँ चपाउन तथा पचाउनका लागि हुन् ।" यो कुरा समाचार माध्यमका सामग्रीको हकमा पनि लागू हुन्छ ।

अङ्ग्रेजी साहित्यका सर्वोत्कृष्ट नाटककार विलियम सेक्सपियरभन्दा करिब १८०० वर्ष अगावै लेखिएको भरतमुनिको नाट्य शास्त्र सङ्गीत तथा नाटकसम्बन्धी पहिलो विस्तृत साहित्य रचना थियो । संस्कृतमा लेखिएको यस कृतिमा निर्देशक र श्रोताबीचको सम्बन्ध, नाटकको संरचना, अभिनय कला, पहिरन, सङ्गीत तथा साङ्गीतिक साधनहरू, मञ्चको साजसज्जा र दर्शकका लागि सभास्थानको व्यवस्थापकीय पक्षहरूका व्याख्या पाइन्छन् ।

नाट्य शास्त्रले समाजलाई सूचित गराउने सल्लाह, शिक्षा, मनोरञ्जन र मार्गदर्शन दिनुका साथै रङ्गमञ्चको भूमिकाबारे चर्चा गर्छ । स्पष्ट भाषा र दर्शकको चाहना तथा बुझाइको स्तरअनुसारको शब्द र संवादको प्रयोग गर्न जोड दिइएको छ । आज विश्वभरि पत्रकारिताका विद्यार्थी र पत्रकार यी सिद्धान्तसित परिचित छन् । यसलाई सर्वप्रथम व्यावसायिक औपचारिक तवरले सूत्रपत गर्ने व्यक्तिबारे प्रायः अनभिज्ञ रहे पनि ।

ह्यारी पोर्टर उपन्यास शृङ्खला लेखी प्रसिद्धि पाएकी अमेरिकी लेखक जे.के. रोलिङको पहिलो पाण्डुलिपि १२ पटक अस्वीकृत भएपछि मात्र त्यसले प्रकाशक पायो । बाँकी बन्यो बिक्री तथा सफल लेखकीय इतिहास । जम्मा १४ पटक अस्वीकृत भएपछि बल्ल प्रकाशित भएको १९औँ शताब्दीकी एमिली ब्रन्टेको विदरिङ हाइट्स अङ्गेजी साहित्यको एक कालजयी कृति बन्यो ।

सशक्त तरिकाले शब्दहरू चिरकालसम्म सदा सजग रहन्छन् । त्यसको रसास्वादन वर्तमान र भावी पुस्ताले गर्न पाउँछन् । अमेरिकी पत्रकार तथा नोबेल पुरस्कार विजेता अर्नेस्ट हेमिङ्वेले आफ्ना सुप्रसिद्ध उपन्यास अ फेरवेल टु आर्म्स्को अन्तिम पृष्ठ ३९ पटक लेखेपछि मात्र सन्तुष्ट भए । उनका लागि, "गद्य विशुद्ध कलाकारिता हो, आन्तरिक साजसज्जा मात्र होइन ।"

नेपालका सन्दर्भमा गरिएको एक अध्ययन (खरेल, १०१०) अनुसार १३ वटा 'क' वर्गका राष्ट्रिय दैनिक पत्रिकाका प्रथम पृष्ठमा छापिएका समाचारमध्ये ६९ प्रतिशत राजनीतिक विषयवस्तुमा आधारित थिए । ती राजनीतिक समाचारमध्ये ८४ प्रतिशतले काठमाडौँ मिति रेखा दिएका थिए ।

यसैगरी नेपाल प्रेस काउन्सिलको वर्गीकरणमा 'क' श्रेणीमा राखिएका १३ वटा साप्ताहिक प्रकाशनमा भने प्रथम पृष्ठमा छापिएका समाचारमध्ये ८९ प्रतिशत राजनीतिक विषयवस्तुमा आधारित थिए । ती राजनीतिक छापाहरूमध्ये ९९ प्रतिशतले काठमाडौँ मिति रेखा दिएका थिए ।

सो सामग्री विश्लेषण जेठ–असार महिनाका ३० दिनमा आधारित थियो, जसले ठूला सञ्चारमाध्यमले समाचार, विषय र क्षेत्रगत हिसाबले केकस्तो स्थान र प्राथमिकता दिन्छन् भन्ने नमुना दिएको छ ।

क्यानेडेली तथा अमेरिकी विश्वविद्यालयका प्राज्ञ हर्बट मार्सल मक्लुहनले 'विश्वग्राम' लगायतका सञ्चारमाध्यमसम्बन्धी सिद्धान्तहरूको प्रतिपादन गरे । यहाँ स्मरणीय छ, उनी विश्वविद्यालयका अङ्ग्रेजी साहित्य विभागमा थिए । वास्तवमा पत्रकारिता तथा आमसञ्चारका पाठ्यक्रमलाई सुरुका दिनमा पश्चिमा मुलुकका विश्वविद्यालयहरूमा अङ्ग्रेजी विभागअन्तर्गत राखिन्थ्यो । नेपालमा पनि सुरुमा काठमाडौँस्थित रत्नराज्यलक्ष्मी क्याम्पसको अङ्ग्रेजी विभागअन्तर्गत राखिएको थियो । पछि मात्र यो विषयले स्वतन्त्र विभाग पायो । पत्रकारिताको पठनपाठन कुनै पनि अन्य भाषाको साहित्य विभागमा हुन सक्छ– नेपाली, मैथली, नेपालभाषा आदि । यसको कारण यो हो कि साहित्य विधाका धेरै गुण सञ्चारका लागि पनि सदैव आवश्यक तत्त्व हुन्छ ।

## पत्रकारितामा विस्तार

नियमित रूपमा प्रकाशित समाचार पत्रिकाहरू पहिले जर्मनी (१६१८), फ्रान्स (१६२०), ब्रिटन (१६२१) र इटली (१६३६)मा उदय भए। अमेरिकाको पहिलो पत्रिका (१६९०) प्रथम संस्करणपश्चात् नै बन्द भयो किनकि त्यहाँका बेलायती गभर्नरलाई त्यसका आलोचनात्मक सामग्री पाच्य भएन। बेलायती औपनिवेशिक राज रहेको भारतको पहिलो पत्रिका बेंगाल गजेट १७८५ मा निक्ल्यो। नेपालमा राणा प्रधानमन्त्री जङ्गबहादुरको बेलायत भ्रमणको एक वर्षपछि १८५१ मा पहिलो छापाखाना सञ्चालनमा आउँदा भारतमा विभिन्न क्षेत्रीय भाषाहरूमा बीसौँ समाचार पत्रिकाहरू थिए। आधा शताब्दीपछि देव शमशेर जबराले आफ्नो ११४ दिने प्रधानमन्त्रित्व कालमा १९०१ मा राष्ट्रको पहिलो समाचारपत्र गोरखापत्र साप्ताहिकको प्रकाशन गरेर आफ्नो छुट्टै पहिचान बनाए। आज गोरखापत्र नेपालको एक प्रमुख दैनिकका रूपमा प्रकाशित छ।

सन् १८३० को दशकको सुरुवाती वर्षहरूतिर अमेरिकामा 'पेनी प्रेस'को आगमन भयो। पत्रिकाको बिक्री मूल्य न्यून राखी पाठक सङ्ख्यामा बढोत्तरी भई विज्ञापन आम्दानी आकर्षण गर्नु त्यस नीतिको नौलो र क्रान्तिकारी पाटो थियो। तर त्यसैले पाठकको ध्यान आकर्षित गर्न र बिक्री बढाउन पत्रिकाहरूबीच अत्यधिक अस्वस्थ प्रतिस्पर्धा पनि निम्त्यायो। अखबारले आफ्ना उद्देश्य प्राप्तिका लागि भाषालाई नै ठूलो औजार बनाए।

अमेरिकी प्रकाशक–सम्पादक एलिजा पेरिस लभजोय (१८०२–१८३७) सम्भवतः सञ्चार जगतको पहिलो शहीद हुन्। उनको पत्रिकाले कुनै पनि प्रकारको दासब्यापारको भर्त्सना गर्थ्यो। दासप्रथाको पक्षधर भीडले उनको छापाखानालाई अमेरिकाको एक नदीमा फालिदियो र अन्ततोगत्वा उनको हत्या नै गऱ्यो।

सार्वजनिक छलफल, विचारको गतिशीलता, नागरिक सक्रियता, सामाजिक उत्तरदायित्व र सञ्चारमाध्यमको विश्वसनीयता असल पत्रकारिताका चिह्न हुन्। तर 'पेनी प्रेस'ले पीत पत्रकारिता र अत्यधिक सन्सनीपूर्ण समाचारको युगको पनि आरम्भ गऱ्यो। टेब्लोइड आकारका पत्रिकाले १९औँ शताब्दीमा जन्माएको पीत पत्रकारिताको नाम पहेँलो पृष्ठभूमिमा प्रकाशित एक कार्टुन शृङ्खलाको चित्रबाट प्रेरित थियो।

पीत पत्रकारिताले अपमानजनक र झुटा सामग्री पनि पस्कन्थ्यो भने सन्सनीपूर्ण समाचारमा मात्र केन्द्रित पत्रिकाहरूले भने पीत पत्रकारिता गर्दैन थिए, उनीहरू तथ्य बङ्ग्याउँदैन थिए, लेखन र प्रस्तुति शैली भने उत्तेजनात्मक हुन्थे।

तथ्यपरकभन्दा कोरा हल्लामा आधारित बढाइचढाइ गरिने व्यवसायलाई पीत पत्रकारिता भनिन थालियो। पत्रकारितालाई इतिहासको पहिलो मस्यौदाका रूपमा पनि काम गर्ने तथा हतारमा गरिने साहित्य भनिए पनि त्यसले तथ्य र व्यावसायिक रूपमा स्थापित मूल्य–मान्यता तथा असल अभ्यासमाथि सम्झौता गर्नुहुन्न। व्यावसायिक पत्रिकारिताले तथ्यलाई बङ्ग्याउने, तथ्यको गलत अर्थ लगाउने र झुटा सूचना सम्प्रेषण गर्दैन। पत्रकारिताले गुणस्तर र विश्वासनीयता सुनिश्चित गर्न चाहिने आवश्यक तत्त्वहरू कायम गर्दै शैली तथा भाषा प्रयोगमा एकरूपतामा ध्यान दिन्छ।

शआफूलाई होइन आफ्ना पाहुनालाई स्थान दिन चाहने किङले पाहुनालाई प्रश्नका उत्तर दिने प्रशस्त मौका प्रदान गर्थे। प्रश्नबाटै उनले निम्त्याइएका पाहुनाको चित्रण दर्शक माझ पेस गर्थे। टीभी अन्तर्वार्ताकारलाई किङको सुझाव थियो, "आफू धेरै नबोल। दर्शक टीभीबाट दिक्क हुन्छन्। आफ्ना पाहुनालाई बोल्न देऊ। उनीहरू तिम्रो पाहुनालाई हेर्न आएका हुन्, तिमीले तिम्रोबारे बोलेको सुन्न आएका होइनन्।"

आमश्रोतालक्षित समाचार सामग्री सम्प्रेषण गर्दा प्रायः सबैभन्दा महत्त्वपूर्ण पाटोलाई अग्रस्थान दिई क्रमशः कम महत्त्वपूर्ण पाटाहरूलाई त्यसपछि राखिन्छ। विशेष समूहलक्षित लेखनमा अति सावधानी तथा संवेदनशीलता अपनाइन्छ।

तीस वर्षभन्दा अगाडि टाइम म्यागजिनका बेइजिङ विभाग प्रमुख रहेका व्यक्तिले आफ्नो कार्यकक्षको भित्तामा आफ्नो कुर्सी पछाडि यो लेखेर राखेको बताइन्छ, "यदि यहाँ लेखिएको कुनै कुरा हुबहु टाइम म्यागजिनमा छापिन्छ भने त्यसलाई संयोग मान्नुहोस्।" यसलाई दुई तरिकाले अर्थ्याउन सकिन्छ। अन्तर्राष्ट्रिय स्तरमा सर्वाधिक बिक्री हुने अङ्ग्रेजी समाचार साप्ताहिक पत्रिकामा हुने व्यापक पुनर्लेखन माथिको व्यङ्ग्यात्मक टिप्पणी अथवा त्यस प्रकाशनको सम्पादकीय नीति कति कडा–जोडदार थियो भन्ने सन्देश।

प्रेसलाई वितृष्णाले हेर्न थाल्ने एउटा चर्चित नाम हुन् थमस जेफर्सन, अमेरिकाका तेस्रो राष्ट्रपति। पदभार ग्रहण गर्नुभन्दा अघिसम्म उनले भन्थे, पत्रिकाबिनाको समाज र सरकारबिनाको समाजबीच चुन्नुपर्दा आफूले पत्रिकाको उपस्थिति छान्ने थिएँ। तर राष्ट्रपति निर्वाचित भएपछि एक निजी चिठीमा तिनै जेफर्सनले भने, "पत्रिकाबाहेक केही नपढ्ने मानिसभन्दा केही नपढ्ने मानिस शिक्षित हुन्छ।"

## सूचना संसार

तत्कालीन अमेरिकी राष्ट्रपति रिचर्ड निक्सनको राजीनामामा पटाक्षेप भएको 'वाटरगेट' कान्डबारे महत्त्वपूर्ण समाचारहरू (सन् १९७० को दशकमा) लेख्ने वासिङटन पोस्टका दुई पत्रकारले एक हजार जनाभन्दा बढी व्यक्तिलाई चार महिनाको समयावधिमा अन्तर्वार्ता

लिएका थिए (वर्न्स्टाइन र उडवर्ड, १९७५) ।

अस्ट्रेलियामा जन्मेका 'विकिलिक्स'का प्रकाशक–सम्पादक जुलियन असान्ज पत्रकारिताको एक जिउँदो शहीद हुन्, जो अमेरिका र बेलायतजस्ता शक्तिशाली राष्ट्रका सरकारको तारो बनेका छन् । उनको 'अपराध' : अक्टोबर २२, २०१० मा उनको संस्थाले इराकमा भएको पश्चिमा आक्रमणमा ६६, ०८१ आम नागरिक मारिएको कुरा उल्लेख भएका गोप्य दस्तावेजहरू सार्वजनिक गर्‍यो । अन्य स्रोतहरूले कम्तीमा दस लाख आमनागरिक त्यस युद्धमा मरेको दाबी गर्छन् ।

विकिलिक्ससँग सहकार्य गर्दै केही प्रमुख पश्चिमा प्रजातान्त्रिक मुलुकहरूका पाँच प्रसिद्ध समाचार संस्थाहरूले त्यसबेलासम्म गोप्य रहेको यस्तै सूचना शृङ्खलाबद्ध रूपमा प्रकाशन गर्न थाले । विश्वव्यापी रूपमा पनि समाचारमाध्यममा प्रमुख स्थान पाएका यी समाचारले भ्रष्टाचार र कूटनीतिक कान्डहरूलाई बाहिर ल्याए ।

वास्तवमा तेस्रो विश्वयुद्धपछिको समयमा यो समाचार शृङ्खला ठूलो 'स्कुप' (साह्रै महत्त्वपूर्ण र अन्य माध्यमले भेउ नपाएका) समाचारमध्येको एक थियो । विकिलिक्सका खुलासाहरूलाई आफूले पनि प्रयोग गर्ने पहिला पत्रिकाहरूले भने केही समयपछि त्यसका प्रकाशकलाई अछूतको व्यवहार गरे १२ वर्षसम्म ।

मार्च २०२३ मा द न्युयोर्क टाइम्स (अमेरिका), द गार्डियन (बेलायत), ल मन्ड (फ्रान्स), एल पे (इटली) र द स्पाइगल (जर्मनी)का सम्पादक र प्रकाशकहरूले संयुक्त रूपमा अमेरिकी राष्ट्रपति जोन वाइडेनलाई विकिलिक्सका प्रकाशक असान्जमाथिको मुद्दा रोक्न आह्वान गरे । उनीहरूले बल्ल स्वीकारे कि असान्जले अन्तर्राष्ट्रियव्यापी रूपमा रहेको भ्रष्टाचार, कूटनीतिक कान्ड र जासुसी गतिविधिहरूको खुलासा गरेर जनतालाई सुसूचित गराएका थिए ।

स्वाभाविक रूपमा प्रश्न उठ्छ, उनीहरूलाई आफ्नो कोलहालयुक्त गैरव्यावसायिक मौनता तोड्न किन १२ वर्ष पर्खन पर्‍यो ?

समाचार माध्यमले विचार–लेख र विशुद्ध साहित्य दुवै प्रकारका रचनाहरूलाई स्थान दिन्छन् । प्रायः लेखकहरू वर्तमानका लागि लेख्छन्, आफ्नो विचार राख्न र आफ्नो उपस्थिति जनाउन । अझै धेरै त लेखकको बथानमा आफूलाई दर्ता गराउन मात्र पनि इच्छुक हुन्छन् । आफ्ना भावना र विचार व्यक्त गर्दा पाउने आनन्दका लागि लेख्नेहरू दुर्लभ प्राणी हुन् । १८औँ शताब्दीका अङ्ग्रेजी कवि टमस ग्रेले लेखेका थिए, "कुनै पनि मूर्खले एक मूल्यवान पुस्तक लेख्न सक्छ, यदि उसले हामीलाई देखेको कुरा सत्यतासहित बताउँछ भने ।" यो उद्‍गार पत्रकारितामा पनि उत्तिकै लागू हुन्छ ।

इच्छा र आनन्दबाट अभिप्रेरित लेखन रमाइलो र सजिलो काम हुन सक्छ । आफूतिर ध्यानाकर्षण गर्ने मात्र उद्देश्यले लेख्ने रचनाकार अश्लीलताका ब्यापारी हुने खतरा हुन्छ । पत्रकारिता लेखनमा समयसीमा (डेडलाइन) को दबाब उच्च र प्रतिस्पर्धा तीव्र हुन्छ । समाचार सम्प्रेषण गर्ने पहिलो हुने होडबाजीमा प्रस्तुतिमा गर्न सकिने परिष्कार ओझेलमा पर्न सक्छ– छापा, अनलाइन, श्रव्य–दृश्य, सबै प्रकारका समाचारमाध्यम ।

निष्ठा नै पत्रकारिताको अन्तिम व्यावसायिक धर्म हो । यसबारे नेपालको पहिलो अङ्ग्रेजी दौनिक द कमनरका संस्थापक प्रकाशक–सम्पादक गोपालदास श्रेष्ठको (वि.सं. २०५८) भनाइ सान्दर्भिक हुन्छ, "वस्तुपरकता र विमति दुवै पत्रकारिताका महत्त्वपूर्ण पक्ष हुन आएका छन् । यी दुवैको समिश्रणले निस्पृहतालाई पनि पत्रकारितामा एक आवश्यक मानसिकता बनाइदिएको छ । जीवनका विभिन्न परिस्थितिहरूमा पत्रकारिता न त वस्तुपरक बन्न सक्दछ, न यसले असंलग्न विमतिलाई व्यवहारमा ल्याउन सक्छ । संलग्न रहेर पनि असंलग्न हुनु, विमतिमा पनि शत्रुवत् नहुनु– यी पत्रकारिताका केही यस्ता आचरण हुन्, जसको अनुपस्थितिमा बौद्धिकीकरणको व्यावसायिक प्रक्रिया पनि शुद्ध रूपमा सम्भव हुँदैन ।"

**सन्दर्भसामग्री**


बर्नस्टाइन, कार्ल र उडवर्ड, बब (१९७५) । अल द प्रेसिडेन्ट्स मेन । न्युयोर्क : साइमन र सुस्टर पेपरब्याक्स ।

भरत–मुनि (२००७) । नाट्य शास्त्र । वाराणासीः चौखम्बा संस्कृत सिरिज अफिस ।

ब्रेडी, जोन (१९७६)। (द क्राफ्ट अफ इन्टर्भ्यिुइङ । न्युयोर्कः भिन्टेज बुक्स ।

खरेल, पी (२०१०) पोलिटिकल कम्युनिकेसनः मिडिया, मेसेज एन्ड मिनिङ । काडमाडौँः सङ्गम इन्स्टिच्युट ।

पोखरेल, गोकुल (वि.सं.२०५८) । "आम–सञ्चारः सिद्धान्त र विचार ।" पत्रकारिताः हाते किताब ।

काठमाडौँः प्रेस इन्स्टिच्युट ।

पोल्लार्ड माइकल (१९९५) । जोहान गुटेनवर्ग । हैदरावादः ओरियन्ट लङ्गुमान ।

रिगिन्स, हेरोल्ड (१९९२) । एथ्निक माइनोरिटी मिडिया । न्युदिल्लीः सेज पब्लिकेसनस ।

श्रेष्ठ, गोपालदास (वि.सं. २०५८) "चुनौती र सम्भावनाहरू ।" पत्रकारिताः हाते किताबः काठमाडौँः नेपाल प्रेस इन्स्टिच्युट ।

स्लोउन, डब्लु डेभिड र स्टोमाल, जेम्स जी (२०१४) । द मिडिया इन अमेरिका ।ः अ हिस्ट्री । वासिङटन एमेजोन । ■

# साहित्य र मिडियाको सम्बन्ध






◆ युवराज गौतम

●●●

लेखक, सम्पादक र समालोचक एड्गर एलेन पो दरिद्र थिए । उनका कविता राम्रा भए पनि पारिश्रमिक दिनुपर्ने भएकाले पत्रपत्रिकाले छाप्न मानेनन् । बोस्टन सहरमा जन्मेका एड्गर एलेन पो सन् १९४९ मा ४० वर्षमै मरे । अल्पायुमै प्राण त्याग्ने मोतीराम भट्टजस्तै सानैदेखि प्रतिभाशाली थिए पो । मिडियाले मद्दत नगरेका कारण कैयौँ रात उनी भोकै सुते । उनको मृत्युपछि पत्रपत्रिकाले उनका सबै कविता छापे ।

●●●

जर्मन साहित्यको सिद्धान्त बुझेका फेडरिक किट्लरले भनेका छन्– "साहित्य र सञ्चारका पुर्खा एउटै हुन् ।" ल्याटिन भाषाबाट सुरु भएको 'लिट्रेचर' शब्द (साहित्य) 'लेखन' अर्थात् लेख्नुको अर्थमा लिइन्छ ।

कविता, आख्यान वा कथाजस्तै सञ्चार क्षेत्रले पनि सत्य उद्बोधन गर्छ । अफ्रिका, एसिया, युरोप वा अमेरिका जहाँ बसेका भए पनि त्यहाँका जनताले पत्रकारिता र साहित्यलाई समाजको बिम्ब मान्छन् । अर्थात् त्यहाँ समाज र राष्ट्रको प्रतिबिम्ब हुन्छ ।

मानवीय अभिव्यक्तिको उच्चतम शिल्प हो, साहित्य । त्यसपछि सबैले बुझ्ने सरल भाषामा सुरु भयो, पत्रकारिता । यसमा आमसञ्चार (मास कम्युनिकेसन) आयो, विविध विधाको रूपमा । पत्रपत्रिका, चलचित्र, रेडियो, टेलिभिजन आदिले सत्य कुरा जनसमक्ष पुर्‍याउँछ भन्ने विश्वास बढ्दै गयो ।

नाटक, कविता, कथा, निबन्ध, उपन्यास आदि अनेक रूपमा साहित्य लेख्ने परम्परा पूर्वीय गोलार्द्धमा वैदिक युगभन्दा प्राचीन मानिन्छ । वीरधाराकाल (वि.सं. १८२६–१८७२) मानिए पनि नेपाली भाषाको प्राचीनतम पुस्तक कुन हो भन्नेमा विवाद पाइन्छ । सुवानन्दन दास बाँडा (शाक्य) लिखित कविता पृथ्वीनारायण शाह वीरगाथामा आधारित छ । पृथ्वीनारायण शाहका राजगुरु शक्तिवल्लभ अर्ज्याल (अर्याल) 'हास्यकदम्ब' पुस्तकका रचनाकार थिए । 'बहादुर शाह वर्णनाम्' लेख्ने सुवानन्द जस्तै 'साँढ्याको कवित्त,' लेख्ने राधावल्लभ अर्याललगायतका कृतिलाई 'माइलस्टोन' मान्ने गणेशबहादुर प्रसाईलगायतका समालोचकले नेपाली साहित्यको लिखित इतिहास तीन सय वर्षभन्दा पुरानो नभएको तर्क गर्नेभएको छ । भक्तिकाल वा भक्तिधाराको कालखण्डमा सगुण र निर्गुण भक्तिधारामा कविताहरू लेखिए । इन्दिरस, विद्यारण्यकेशरी अर्याल, वसन्त शर्मा, यदुनाथ पोखर्‍याल, रघुनाथ भट्ट पोखर्‍याल, पतञ्जली गजुर्‍याललगायतले भक्तिधारालाई आधार मानेर कविता लेखेको पाइन्छ ।

श्री ३ देवशमशेरले वि.सं. १९५८ मा 'गोर्खापत्र' नामको साप्ताहिक पत्रिका स्थापना गरेपछि यही अखबारको मद्दतबाट सयौँ लेखक, कविको उदय भयो । सुन्दरी (वि.सं. १९६३) र गोर्खाली (वि.सं. १९७२) जस्ता पत्रिकाले पनि प्रशस्तै योगदान गरे । निबन्धको विकासमा गोरखापत्र, गोर्खे खबरकागजत (दार्जिलिङ), चन्द्र, गोर्खाली र सुन्दरी पत्रिकाले साहित्यमा पुर्‍याएको योगदान उल्लेखनीय छ ।

'द एपिक अफ गिल्गामेस' नामक ग्रन्थलाई कोरियाका विद्वान्हरू पहिलो पुस्तक मान्छन् । बुद्ध जन्मेको चौध सय वर्षपछि बुद्धका वाणीहरू समेटेर सो ग्रन्थ प्रकाशित भयो । आज पनि त्यहाँका पत्रपत्रिका, रेडियो र टेलिभिजनका लागि त्यस्ता ग्रन्थहरू सन्दर्भ सामग्री (रेफरेन्स) मानिन्छन् ।

वाल्मीकीकृत रामायण र व्यासद्वारा लिखित प्राचीन ग्रन्थ महाभारत नेपाली साहित्यमा साहित्यभन्दा धर्मग्रन्थका रूपमा चिनिन्छन् । आदिकवि भानुभक्त आचार्यले नेपाली भाषामा रामायण अनुवाद गरेपछि नेपालमा मात्र होइन, भारत, भुटान, बर्मा, थाइल्यान्डलगायतका राष्ट्रमा बसेका नेपालीभाषीहरूमा पनि त्यो लोकप्रिय भयो ।

रामानन्द सागरले रामायणलाई हिन्दी धारावाहिक चलचित्र बनाएपछि त्यो करोडौँ जनताका घरघरमा पुग्यो । पहिले प्रौढ वा वयस्कमा सीमित साहित्यले जब

मिडियाबाट फैलिने अवसर पायो त्यसपछि बालबालिका समेत लाभान्वित भए।

नेपालमा पनि इतिहास, प्राचीन धर्म, मौलिक परम्परा र संस्कृतिलगायतका विविध विषयमा लेखिएका महत्त्वपूर्ण ग्रन्थलाई सरल, सुसंस्कृत र सुललित भाषामा चलचित्र, रेडियो नाटक आदि मार्फत नवीन पुस्तालाई लाभ पुऱ्याउन सकिन्छ। तसर्थ मिडिया जस्तो सशक्त माध्यम र साहित्यका स्रष्टा एवं साहित्यिक सङ्घसंस्थाहरूबीचको अन्तर्सम्बन्ध महत्त्वपूर्ण हुने देखिन्छ।

केटाकेटीहरूबीच अत्यधिक प्रिय चलचित्र 'ह्यारी पोर्टर' पुस्तकबाटै निर्माण गरिएको हो । ब्रिटिस लेखक जेके रोलिङको सो पुस्तक करोडौँ प्रति बिक्री भयो। नेपाली चलचित्रमा बालकृष्ण समको प्रेमपिण्ड र महाकवि लक्ष्मीप्रसाद देवकोटाको मुनामदन असल पुस्तकमा दर्ता भएपछि आमसञ्चार (मास कम्युनिकेसन) अन्तर्गतको चलचित्रबाट अझ विस्तीर्ण भए। न्युज मिडिया, सोसल मिडिया, प्रिन्टेट मिडिया, वेभ मिडिया वा आमसञ्चारका हरेक माध्यम साहित्यबाट विमुख हुने अवस्था छैन।

अमेरिकी साहित्यकार एम्ली डिकिन्सका हस्तलिखित कविताहरू हावर्ड विश्वविद्यालयमा सुरक्षित छन् । जीवनमा एक हजार आठ सय कविता लेखिन उनले । ५५ वर्षको उमेरमा सन् १८८६ उनको मृत्यु भयो । कसैको मोलाहिजा नगर्ने र आफैँमा रमाउने एम्ली एकान्तप्रेमी थिइन् । उनको कालखण्डका कतिपय स्रष्टाहरू पत्रपत्रिकाका सम्पादक चाहार्दै कथा, कविता छपाउन चाहन्थे। एम्ली भन्थिन्– "मलाई मिडियाको प्रचार चाहिँदैन।" "समय बार्बाद हुन्छ" भन्दै उनले विवाह गरिनन्। उनी बाँचुन्जेल दसवटा मात्रै कविता प्रकाशित भए।

लेखक, सम्पादक र समालोचक एड्गर एलेन पो दरिद्र थिए। उनका कविता राम्रा भए पनि पारिश्रमिक दिनुपर्ने भएकाले पत्रपत्रिकाले छाप्न मानेनन्। बोस्टन सहरमा जन्मेका एड्गर एलेन पो सन् १९४९ मा ४० वर्षमै मरे। अल्पायुमै प्राण त्याग्ने मोतीराम भट्टजस्तै सानैदेखि प्रतिभाशाली थिए पो । मिडियाले मद्दत नगरेका कारण कैयौँ रात उनी भोकै सुते । उनको मृत्युपछि पत्रपत्रिकाले उनका सबै कविता छापे।

सत्रौँ शताब्दीमा झन्डै एक सय वर्षभित्र ब्रिटेनमा पचास लाख कविता छपाए । कविताका रचनाकारलाई समाजले 'विशिष्ट व्यक्ति' मान्ने गरेकाले कुलीन, शिक्षित र सुसंस्कृतदेखि मध्यम, निम्नमध्यम र निम्न आर्थिक अवस्था हुनेहरू पनि साहित्यमा आकर्षित भए।

पूर्वीय गोलार्द्धमा ऋग्वेदलाई प्राचीनतम् साहित्य मानिन्छ । त्यस्तै रामवेद, यजुर्वेद र अथर्ववेद आध्यात्मिक साहित्य मानिन्छन् भने उपनिषद्, श्रीमद्भागवत गीता, रामायण आदि प्राचीन साहित्य हुन। संस्कृत, ग्रीक र ल्याटिन साहित्यमा ठूलो प्रगति भएपनि फ्रेन्च, अङ्ग्रेजी, चिनियाँ, जापानी, अरबी, उर्दू र हिन्दी साहित्यको उत्थान हुन थाल्यो।

उज्जैन (हाल भारत) देशका राजा विक्रमादित्यको दरबारमा रहेका 'नवरत्न' (नौ जना प्राज्ञ)मध्ये कवि पनि थिए। महाकवि कालीदास दरबारबाट संरक्षित कवि हुन । उनका 'मेघदूत'लगायतका ग्रन्थ प्रसिद्ध छन् । सत्तामा विकार प्रवेश नहोस् भन्ने अभिप्रायले सम्राट अकबरले वीरबल, अबुल, फैजल, तानसेन, राजा मानसिंह (प्रधानसेनापति)लगायतका अभद्र, अशिष्ट र अनैतिक आचरण गर्ने आफ्नै छोरा दुर्जन सिंहलाई मानसिंहले मृत्युदण्ड दिएका थिए।

प्रसिद्ध मैथिल कवि विद्यापति राजदरबारका प्रख्यात कवि गणपति ठाकुरका सुपुत्र हुन्। राजा कीर्ति सिंह र शिव सिंहका पालामा दरबारको संरक्षणमा बाँचे, कवि गणपति।

मिडियाको प्रगति नभएको अवस्थामा पाटनका राजा सिद्धिनरसिंह मल्ल र कान्तिपुरका राजा प्रताप मल्ल लगायतले कविता, नाटक र भजन लेखेर साहित्यसेवा गरेको इतिहासकार हरूको मत पाइन्छ।

काठमाडौँका विभिन्न भजन मण्डल र पाटनको कात्तिक नाचमा मैथिल कवि विद्यापतिका भजन गाउँछन्, नेवारी सुमदायका गायक-गायिकाहरू। यसको अर्थ हो, साहित्यले हजारौँ वर्षअघिदेखि हामी सबैलाई एउटै मालामा उनेको थियो।

श्री ३ देवशमशेरको प्रधानमन्त्रित्वकालमा स्थापना भएको 'गोर्खापत्र' (हाल गोरखापत्र) धेरै साहित्यकारको चौतारी भएको छ । १९५८ साल वैशाख २४ गते सोमबार स्थापना भएको गोरखापत्रले हजारौँ साहित्यकारका रचना प्रकाशित गरेर ठूलो गुन लगाएको छ। वि.सं. २००० साल असोज २९ देखि अर्ध साप्ताहिक र राजा महेन्द्रको शासनकालमा २०१७ फागुन ७ मा दैनिक भएको गोरखापत्रले २०१९ साल असार ९ गतेदेखि शनिबार परिशिष्टाङ्क प्रकाशित गर्न थालेपछि पुराना र नवोदित स्रष्टाहरू लाभान्वित भए। पत्रकारिता र साहित्यबीच अन्योन्याश्रित सम्बन्ध रहन्छ भन्ने अझ स्पष्ट भयो।

साहित्य र राजनीतिबीच स्पष्ट ध्रुवीकरण नभएझैँ मिडियामा साहित्यका पारखीहरू आफ्नो पारामा रमाइरहेका हुन्छन्। सन् १९५८ मा चीनमा र त्यसकै हाराहारीमा भारतमा टेलिभिजन स्थापना भयो। त्यसपछि दुवै राष्ट्र साहित्य, कला, संस्कृति जस्ता विषयलाई जनस्तरमा लैजान मिडियाले कसरी प्रभावकारी भूमिका खेल्न सक्छ भन्ने कुरा सोच्न थाले।

नेपाल टेलिभिजन स्थापना भएपछि धारावाहिक शृङ्खला, कथा, नाटक, प्रहसन, कविताजस्ता विषयमा जनता र स्रष्टाको आत्मीयता बढ्दै गयो।

चीनले 'सफ्ट पावर' मानेर केही वर्ष यता मिडियामा ठूलो लगानी गरेको छ । नेपालमा अझैसम्म साहित्य र मिडियाको अन्तर्सम्बन्ध, उपलब्धि र प्राप्तिबारे गम्भीर बहस भएको छैन । यथार्थ के हो भने यी दुई संवेदनशील विषयमा केन्द्रित हुने हो भने मानसिक र मनोवैज्ञानिक उद्बोधन निम्ति यो अजस्र स्रोत बन्न सक्छ। ■

# आमसञ्चार र साहित्य



◆ स्नेह सायमि



जसरी गोरखापत्रलाई सरकारको ताबेदारी गरेको आरोप आइरहन्छ। निजी लगानीबाट स्थापित आमसञ्चारका माध्यमहरू पनि मौन रूपमा आम्दानी गराइदिने आर्थिक रूपमा टिकाइदिने व्यक्ति वा संस्थाको ताबेदारी गरिरहेकै हुन्छन्। यस्तो अवस्थामा आमसञ्चारमाध्यमले साहित्यका लागि योगदान गर्नु भनेको आफ्ना स्वार्थहरूलाई केही हदसम्म पन्छाएर अगाडि बढ्नु हो।






**तीसको दशक**

२०३१ सालताका जब मैले लेख्न सुरु गरेको थिएँ, त्योबेला पनि मधुपर्कमा रचना प्रकाशित हुनु गौरवको विषय थियो। मधुपर्कका अधिकांश रचनाका बारेमा चर्चा हुन्थ्यो नै। तर मधुपर्क सरकारी गोरखापत्र संस्थानबाट प्रकाशित भएको कारणले गर्दा कतिपय साहित्यकारहरूले आफ्ना रचना प्रकाशित गर्न चाहन्नथे। मधुपर्कमा पञ्चायत सरकारको छाया देख्थे। राजनीतिक दलहरू प्रतिबन्धित थिए। कतिपय राजनीतिक दलका नेताहरूले मधुपर्क पञ्चायत सरकार भएकै कारणले आफ्ना रचना छाप्न नदिनु नपठाउनु भनी मौखिक सर्कुलर गर्थे। त्यस्तै रूपरेखा, रचना, अभिव्यक्ति, वेदना, सङ्कल्प, झिसमिसे, प्रतिभा, दूबो, आँखीझ्याल, बान्की, जनमतलगायत साहित्यिक प्रकाशनहरू थिए, जसले साहित्य प्रकाशनमा महत्त्वपूर्ण योगदान गरे।

यीबाहेक त्यतिखेर प्रकाशित हुने साप्ताहिक पत्रिकाहरूले पनि निकै साहित्यकारहरू जन्माएको र हुर्काएको इतिहास छ। विशेषतः साप्ताहिक पत्रिकाहरूमध्ये समीक्षा, जनजागृति, अर्पण आदि पत्रिकामा कविता या मुक्तक पत्रिकाकै कार्यालयमा गएर वा हुलाकबाट पठाएर प्रकाशन कुर्नु त्योबेलाका सिकारु लेखक कविहरूका लागि महत्त्वपूर्ण कार्य हुन्थ्यो। २०४६ सालभन्दा अघि मधुपर्कझैं संस्थागत रूपमा अर्को साहित्यक पत्रिका गरिमाले लामो समय साहित्य सेवा गरेको छ। गरिमा प्रकाशित हुनुअघि हामी प्रतिभा मासिक गोजीका प्रकाशन गर्थ्यौं र अग्रज साहित्यकारहरूसँग रचनाहरू माग्न उहाँहरूको घरअफिस चहार्थ्यौं। एक पटक तत्कालीन साझा प्रकाशनका महाप्रबन्धक क्षेत्रप्रताप अधिकारीसँगको भेटमा उहाँले साहित्यिक पत्रिका गरिमा नियमित रूपमा प्रकाशित गर्ने योजना रहेको सुनाउनुभएको थियो। लगत्तै प्रकाशित भयो पनि।

**२०४६ साल**

नेपाली राजनीति मात्र होइन आमसञ्चारमा पनि २०४६ सालले महत्त्वपूर्ण भूमिका खेलेको छ। नियन्त्रित सञ्चार व्यवस्थाबाट खुला व्यवस्था भएको कारणले २०४६ सालको आन्दोलनपछि आमसञ्चारमाध्यमको लहर नै चल्यो। निजीक्षेत्रबाट दैनिक पत्रिका प्रकाशन र टेलिभिजन प्रसारणको बाटो खुल्यो। दैनिक पत्रिका र टेलिभिजनका लागि साहित्य महत्त्वपूर्ण विषय भने रहेन।

आमसञ्चारको माध्यम प्रशस्तै फस्टाए पनि साहित्यमा तिनको योगदान भने नगन्य नै रह्यो। साहित्यलाई अत्यन्तै अनुत्पादक क्षेत्रका रूपमा ग्रहण गऱ्यो। त्यस्तै आममानिसमा नकारात्मक विषयको बीजारोपण गर्नमा आमसञ्चारमाध्यमको भूमिका रह्यो। एउटै घटना र कार्यक्रम कुनै सञ्चारमाध्यमले सकारात्मक देख्ने र कुनैले भने नकारात्मक देख्ने परम्परा कायम रह्यो। कुनै विषय वा घटनालाई द्वन्द्वात्मक रूपमा गुण दोष हेरेर तुलनात्मक रूपमा अध्ययन गर्नु र प्रचार गर्नुको साटो पूर्ण रूपमा नकारात्मक रूपमा पक्षधरता देखाउनु र आममानिसमा खराबै




खराब भएको कुरा प्रस्तुत गर्ने प्रचलन भयो ।

यो बीचमा साहित्यप्रति आमसञ्चारमाध्यम सञ्चालन गर्ने सञ्चालकहरू सकारात्मक हुन सकेनन् ।

साठीको दशका एफएम रेडियोको बोलवाला थियो । जताततै रेडियोको आवाज । भन्न त आवाजबिहीनहरूको आवाज भनियो तर आफ्नै पक्षधरका आवाज प्रसारित भयो । हुँदा हुँदा व्यक्तिगत प्रचारसमेतका लागि प्रयोग भए । तर पनि तुलनात्मक रूपमा एफएम रेडियोले स्थानीय भाषा र साहित्यका लागि भने काम गरेको देखियो ।

सत्तरीको दशक इन्टरनेटको दशक हुन गयो । इन्टर नेटका माध्यमबाट अनलाइन र सामाजिक सञ्जाल हाबी छ । सबै मानिस आफ्ना विचार र भावना प्रस्तुत गर्न स्वतन्त्र छन् ।

अनलाइनहरूले साहित्यका लागि थोरै स्पेश दिएको छ । दैनिक पत्रिकाहरूले पनि प्रायशः शनिबार, नत्र अरू कुनै बारको दिन पारेर साहित्यका स्तम्भहरू चलाएका छन् । यसले साहित्यको प्रचारप्रसारमा जरुर मद्दत मिलेको नै छ ।

## लोकतन्त्र र आमसञ्चार

लोकतन्त्रमा सञ्चारमा अङ्कुश लगाउनुहुँदैन । आममानिसले सूचनाको हक प्राप्त गर्नका लागि आमसञ्चारको स्वतन्त्रता अपरिहार्य छ । यो एउटा आमधारणा छ । तर पनि आआफ्नो परिस्थिति र राजनीतिअनुसार आमसञ्चारका माध्यमहरूलाई विभिन्न देशमा कारवाही गर्ने, सामाजिक सञ्जालकै माध्यम प्रयोग गर्न नदिने कार्य भइरहेको छ । यी विद्युतीय आमसञ्चारका माध्यम कोबाट परिचालित छन्, कतै कुनै संवेदनशील सूचना त सङ्कलन गरिरहेको छैन भन्ने कुरा व्यक्ति वा राज्यले शङ्का गर्ने ठाउँ पनि बनेको छ । तथापि हाम्रो देशमा सबैखाले सञ्चारमाध्यम बिनाअङ्कुश चलेकै छन् ।

तर एउटा कुरा के बिर्सन हुँदैन भने हाम्रोजस्तो मुलुकमा लोकतन्त्र भनेको पुँजीवादी व्यवस्था हो । जोसँग पुँजी छ उसले जगत् परिचालन गर्छ । पुँजीपतिहरूकै मिलन र प्रतिस्पर्धा हुन्छ । मानिसहरूलाई पुँजीको आकारले हेरिन्छ । सम्बन्धहरू पनि पुँजीअनुसार नै निर्माण हुन्छन् । आमसञ्चारका माध्यम पनि पुँजीको प्रभावबाट मुक्त छैन । जताबाट बढी विज्ञापन आउँछ, उसको प्रशंसा गरिरहेको छ । जसले लगानी गरेको छ, उसको खातिरदारी गर्नुपरेको छ । आमसञ्चारमाध्यमहरूले दिने समाचार र सेवा पनि पुँजीपति र लगानीकर्ताको स्वार्थ नाघेर अगाडि बढ्न सक्ने होइन ।

जसरी गोरखापत्रलाई सरकारको ताबेदारी गरेको आरोप आइरहन्छ । निजी लगानीबाट स्थापित आमसञ्चारका माध्यमहरू पनि मौन रूपमा आम्दानी गराइदिने आर्थिक रूपमा टिकाइदिने व्यक्ति वा संस्थाको ताबेदारी गरिरहेकै हुन्छन् । यस्तो अवस्थामा आमसञ्चारमाध्यमले साहित्यको लागि योगदान गर्नुभनेको आफ्ना स्वार्थहरूलाई केही हदसम्म पन्छाएर अगाडि बढ्नु हो । साहित्य पूर्ण रूपमा आम्दानीको स्रोत नभएसम्म आमसञ्चारमाध्यमहरूको प्राथमकितामा पर्दैन नै । तर पनि साहित्यका समाचार, घटना विवरण आदिमा आममानिसको पनि चाहना हुने हुनाले उसको बजार छ । त्यही बजार अथवा पाठक भएकै नाताले साहित्यप्रति लगाव हुने नै छ ।

यीबाहेक कतिपय आमसञ्चारमाध्यमका संस्थाहरूले साहित्यको प्रवर्द्धनमा गरेका प्रयास स्तुत्य छ । ■

# साहित्य, सञ्चारमाध्यम र आमवृत्त






◆ शेखर खरेल



नयाँ सहश्राब्दीसँगै इन्टरनेटको विस्तार एवं समाजिक सन्जालहरूको होडबाजीका कारण अब साहित्य प्रकाशन वा भनौं सार्वजनिकीकरणनिम्ति साहित्यिक वा मूलधारका सञ्चारमाध्यमको निर्भरता हटेको छ। यद्यपि व्यक्तिगत तवरमा समाजिक सञ्जालमा 'अपलोड' गरिने समग्रीको संस्थागत अनुमोदन नहुने र ती समग्री पारिश्रमिकबाट स्वाभाविक रूपमा वञ्चित हुनेहुँदा, स्तरीयताको मापन एवं पारितोषिकका कोणबाट साहित्यिक र मूलधारे सञ्चारमाध्ययमको अनिवार्यता नकार्न सकिँदैन।



बेलायती कवि एवं चिन्तक म्याथ्यु आर्नोल्डले पत्रकारितावारे सटिक टिप्पणी गरेका छन् । आर्नोल्ड पत्रकारितालाई हतारको साहित्य मान्छन् । समयसीमा अर्थात् 'डेडलाइन' का कारण पत्रकारहरूलाई पर्याप्त समय लिएर समाचार तयार गर्ने सुविधा रहँदैन। आर्नोल्डको करिब दुई सय वर्षअघिको यो टिप्पणी पत्रकारिता निम्ति आज पनि सान्दर्भिक देखिन्छ। आर्नोल्डले पत्रकारिताबारे यस्तो टिप्पणी गरिरहँदा बेलायतमा दैनिक समाचारपत्र प्रचलनमा आइसके पनि तिनको सङ्ख्या नगण्य थियो । साप्ताहिक हुँदै दैनिक समाचारपत्र प्रकाशित भएको दक्षिण एसियामा यसै पनि पत्रकारिताको इतिहास लामो छैन। पत्रकारिता निम्ति छापाखाना अनिवार्य भएका कारण लेखन अनि सम्पादन हुँदै मुद्रणका चरणहरू पार गर्नुपर्ने कारण पत्रकारिता हतारको साहित्य हुने नै भयो। मासिक, पाक्षिक एवं साप्ताहिकका हकमा निश्चित तिथि र मिति अनि दैनिक समाचारपत्र झिस्मिसेमै मुद्रण भइसक्नुपर्ने बाध्यताका कारण पत्रकारको खुबी समाचार निर्माण मात्र नभएर समयसीमा समेत रहन गएको हो। तर आज समाचारमाध्यमको दायराभित्र रेडियो, टेलिभिजन र पछिल्लो दशकबाट अत्यन्तै झाँगिँदो अनलाइन (न्युजपोर्टल) का कारण समाचारको फैलावट व्यापक तर समयसीमा भने झन्झन् खुम्चिँदो छ। टेलिभिजन र अनलाइन समाचारमाध्ययसँग प्रतिस्पर्धा निम्ति छापाहरूले समेत प्रातः सँगसँगै मध्यान्ह (मिड–डे) र सायंकाल (इभिनिङ) संस्करणहरू प्रकाशन गरेका देखिन्छन्।

चाहे सुविधाजनक समयसीमा होस् वा तत्क्षण समाचार निर्माण, समाचारमाध्यम लेखनकलाको परिमार्जन अनि परिष्करणको अभ्यासशाला भने पक्कै हो। हतारमा समाचार लेख्ने अभ्यासका कारण कतिपय पत्रकारहरू फुर्सदमा भने साहित्यकारमा कायाकल्प हुन्छन् । पत्रकारको पृष्ठभूमिबाट साहित्यकार वा साहित्यिक पृष्ठभूमिबाट पत्रकार हुने क्रम निरन्तर छ । त्यसैगरी सिर्जनशील लेखन (क्रियटिभ राइटिङ) र पत्रकारितामा सन्तुलन बनाउँदै पेसाधार निर्माण गर्नेहरू पनि उत्तिकै भेटिन्छन्। यस हिसाबले साहित्य र पत्रकारिता विपरीतार्थी नभएर एकअर्काका परिपूरकजस्ता पनि देखिन्छन्।

नेपालमा साहित्य साहित्यिक पत्रकारिता र मूलधार दुवै खाले सञ्चारमाध्यममार्फत आमवृत्तमा पुगेको पाइन्छ । छापा, रेडियो, श्रव्यदृश्य र हिजोआज अनलाइनमार्फत साहित्यिक खुराक आमपाठक, स्रोता तथा दर्शकसम्म पुगिरहेको छ । मूलधार अघि नै साहित्यिक पत्रकारिताको जन्म भएकाले नेपालको सन्दर्भमा साहित्यिक पत्रकारिताको इतिहास लामो र गर्विलो छ। संवत् १९५५ मा नै पण्डित नरदेव मोतीकृष्ण शर्माले 'सुधासागर' प्रकाशन गरेका थिए। 'सुधासागर'को तीन वर्षपछि संवत् १९५८ बाट 'गोरखापत्र'मार्फत नेपालमा पत्रकारिताको विधिवत् प्रारम्भ भएको पाइन्छ। नेपालमा छापाखाना नरहनु नै पत्रपत्रिका प्रकाशनको मुख्य व्यवधान थियो । त्यसैले उतिबेला मुलुकभित्र नरहेर ज्ञानको केन्द्र र शिक्षित नेपालीहरूको बसोबास रहने




बनारसबाट पत्रपत्रिकाहरू निस्कने गर्दथे ।

साहित्यिक पत्रिका निम्ति संवत् १९९१ अविस्मरणीय वर्ष हो । यसै वर्ष काठमाडौँबाट सुब्बा ऋद्धिबहादुर मल्लको सम्पादनमा 'शारदा' मासिकको प्रकाशन प्रारम्भ भयो । यस पत्रिकाको प्रकाशनसँगै एकपछि अर्को देदिप्यमान तारा नेपाली साहित्यिक आकाशमा उदाए । पुस्तक प्रकाशन दुरुह रहेको त्यस समयमा एक प्रकारले भन्नुपर्दा 'शारदा' नै नेपाली साहित्यको मानक एवं सर्वग्राह्य पाठ्यसामग्री रह्यो । 'शारदा' प्रकाशन उप्रान्त अन्य स्तरीय साहित्यिक पत्रिकाहरू देखा नपरेका होइनन् । तर स्वदेशमा मुद्रण असुविधाका कारण ती पत्रिकाहरू अल्पायुका रहे । उदाहरणका लागि नारायणप्रसाद बाँस्कोटाको सम्पादकत्वको 'प्रगति'ले एक स्तरीय पत्रिकाको छवि त बनायो तर उत्कर्षकै बीच यसको अवशान भयो । यो क्रम 'रूपरेखा'को प्रकाशन वर्ष २०१७ सम्म कायम देखिन्छ । किनकि 'रूपरेखा'ले सङ्ख्यात्मक र गुणात्मक दुवै दृष्टिले नेपाली साहित्यिक पत्रकारिताको यात्रामा कोशेढुङ्गाहरू ठड्याउन सफल रह्यो । साहित्यिक पत्रकारितालाई आमवृत्तमा फैलाउने श्रेय 'रूपरेखा'लाई जान्छ ।

विडम्बना के भने लोकप्रियताको चुली उक्लँदा उक्लँदै पनि साहित्यिक पत्रपत्रिकाहरू चिरस्थायी हुन सकेनन् । जसको मुख्य कारण आर्थिक पाटो थियो । यस्ता पत्रपत्रिकामा विज्ञापन नछापिने र बिक्रीभन्दा लागत मूल्य बढी हुनेहुँदा धेरै पत्रपत्रिका पाठकको रुचिभन्दा पनि प्रकाशकको स्वान्त सुखायका कारण नै अस्तित्वमा रहे । समय बदलिए पनि त्यो परिदृश्य नेपाली साहित्यिक पत्रिकाका हकमा आज पनि ज्यूँकात्यू छ । यद्यपि स्वदेशमा छापाखानाको उपलब्धता अनि प्रविधिले मारेको छलाङ कारण स्रष्टाका निम्ति साहित्यिक पत्रिका नै अभिव्यक्ति तथा उन्नयनको एक मात्र माध्यम रहेन । यसैगरी मूलधारकै पत्रपत्रिकाले साहित्यलाई समेत स्थान दिएका कारण अहिले लेखकसामु अनेक विकल्प मौजुद छन् ।

अझ नयाँ सहश्राब्दीसँगै इन्टरनेटको विस्तार एवं सामाजिक सञ्जालहरूको होडबाजीका कारण अब साहित्य प्रकाशन वा भनौँ सार्वजनिकीकरण निम्ति साहित्यिक वा मूलधारका सञ्चारमाध्यमको निर्भरता हटेको छ । यद्यपि व्यक्तिगत तवरमा समाजिक सञ्जालमा 'अपलोड' गरिने समाग्रीको संस्थागत अनुमोदन नहुने र ती सामग्री पारिश्रमिकबाट स्वाभाविक रूपमा वञ्चित हुनेहुँदा, स्तरीयताको मापन एवं पारितोषिकका कोणबाट साहित्यिक र मूलधारे सञ्चारमाध्ययमको अनिवार्यता नकार्न सकिँदैन । यस आलोकमा पनि चाहे साहित्यिक

होस् वा मूलधारे पत्रिका, साहित्य र आमसञ्चार अन्योन्याश्रित एवं एकअर्काका परिपूरक देखिन्छन् ।

### बजारको चेपमा साहित्य

अन्य वस्तुझैँ साहित्यसमेत बौद्धिक तर उपभोग्य सामग्री भएकाले साहित्य उपभोक्तावादसँग जोडिन पुगेको छ। अर्को शब्दमा भन्नुपर्दा साहित्य अर्थव्यवस्था निरपेक्ष हुन सक्दैन। साहित्यिक पत्रिका होस् वा मूलधारे, तिनको प्रकाशन वा प्रसारण निम्ति लगानी आवश्यक रहन्छ । तर दैनिक उपभोग्य वस्तुको सूत्र साहित्यमा लागू हुन सक्दैन। चकलेट वा साबुनझैँ साहित्य क्रय-बिक्रय हुन सक्दैन र यसबाट तुरुन्तै मुनाफा आर्जन हुन सक्दैन। साहित्य मूलतः ज्ञान र उन्नयनसँग सम्बन्धित रहने हुँदा यसको प्रभाव भौतिक वस्तुझैँ मूर्त हुन सक्दैन । विडम्बना भनौँ वा तीतो यथार्थ बजारमा त्यसै कुराको माग हुन्छ, जुन चल्छ अनि बिक्छ। साहित्य नाफामुखी उद्यम पटक्कै होइन । साहित्यले आनन्दित गराउँछ, आलोकित गराउँछ तर तत्कालै मुनाफा दिलाउँदैन । साहित्य बजारको प्राथमिकतामा छैन र भविष्यमा समेत यो परिदृश्य बदलिनेवाला छैन।

नेपाली मूलधारे पत्रकारिता नियाल्ने हो भने अर्थ-वाणिज्य, खेलकुद र मनोरञ्जनझैँ साहित्य पनि एक अनिवार्य 'कन्टेन्ट' देखिन्छ । कतिपय सञ्चारमाध्यमले कहिले साहित्यलाई अलग्गै त कहिले मनोरञ्जनको हिस्सा बनाएको देखिन्छ । तर अलग्गै रहोस् वा मनोरञ्जनको हिस्सा, साहित्यले अन्य विषयको तुलनामा कमै स्थान ओगटेको देखिन्छ। बरु ती सञ्चारमाध्यमले साहित्यलाई सप्ताहन्तमा प्राथमिकता दिएको पाइन्छ। यसो हुनुको मुख्य कारण माथि चर्चा गरिएझैँ उपभोक्तावाद हो । अर्थ-वाणिज्य र खेलकुदका पृष्ठलाई ती विषयका उपभोग्य सामग्रीका विज्ञापनहरूले भरथेग गरेका देखिन्छन् । अझ मनोरञ्जनकै कुरा गर्ने हो भने पनि सिनेमा, मेला र साङ्गितिक उत्सव विज्ञापनका स्रोत देखिन्छन्, जुन साहित्यमा लागू हुन सक्दैन।

तर यति भनिरहँदा पनि साहित्य उत्पादनसँग मात्र जोडिने विषय होइन। कुनै पनि राष्ट्रको चेतना स्तर त्यस राष्ट्रले साहित्यमार्फत निर्माण गर्ने छवि हुनेहुँदा साहित्यमा राष्ट्रको लगानी वाञ्छनीय रहन्छ । त्योभन्दा पनि पर साहित्य समुदायहरूलाई जोड्ने र सामाजिक सद्भाव कायम गर्ने गराउने मुख्य रसायन हो । यसै तथ्यलाई मनन गर्दै राष्ट्रहरूले साहित्यको प्रवर्द्धनमा लगानी गरेका हुन्छन् । झन् अहिले त, भौतिक र संरचनागत विकास अनि सैन्य र समारिक प्रभुत्व राष्ट्रका निम्ति यथेष्ट नहुने भन्दै सौर्य शक्ति (हार्ड पावर) सँगसँगै सौम्य शक्ति (सफ्ट पावर)को प्रवर्द्धनमा प्राथमिकता दिन थालिएको छ। हिजो पश्चिमा देशहरूले सौर्य शक्ति सँगसँगै सौम्य शक्तिलाई प्राथमिकता दिएकोमा आज एसियाका जापान, कोरियाजस्ता विकसित राष्ट्रहरूले सौम्य शक्तिको प्रवर्द्धनमा जोड दिन थालेका छन् । हाम्रै छिमेकी राष्ट्र भारत सौम्य शक्तिको प्रवर्द्धनमा विश्वमै अग्रणी देखिन्छ। भारतीय संस्कृति, त्यसभित्र पनि चलचित्र, सङ्गीत र साहित्यले विश्व रङ्गमञ्चमा दर्बिलो उपस्थिति बनाउँदै आएका छन् । फेरि यी विधाहरू एकअर्काबीच अन्तर्सम्बन्धित रहेका कारण एकको विकासले अर्कोलाई टेवा पुऱ्याइरहेको हुन्छ । उदाहरणका लागि, राम्रो कविताले राम्रो गीत बन्न सक्ने सामर्थ्य राख्छ। त्यसैगरी एउटा उम्दा पुस्तकमा आधारित रहेर उस्तै उम्दा चलचित्र निर्माण गर्न सकिन्छ । अनि ती बौद्धिक र मुग्धकारी उत्पादनबाट मनग्गे अर्थ उपार्जन (मोनिटाइजेसन) हुन सक्छ । साहित्यलाई अनुत्पादक ठान्नेहरूका निम्ति यो चोटिलो जवाफ हो । यति भनीकन पनि, साहित्य बजारका निम्ति नै छाडिदिन हुन्न । राष्ट्रको चिनारी, संस्कृति र सभ्यताको मियो अनि आम नागरिकको सामूहिक उन्नयनको यस्तो महत्त्वपूर्ण अवयवको प्रवर्द्धन राष्ट्रै दायित्व हो। निजी क्षेत्र एवं आमसञ्चार माध्ययले साहित्यको प्रवर्द्धन नगरेका होइनन्।

तर उनीहरूका आफ्नै सीमा छन् । त्यसैले यहाँ राष्ट्रकै सकारात्मक हस्तक्षेप वाञ्छनीय हुन्छ। साहित्यिक पत्रपत्रिका आर्थिक कारणले एकपछि अर्को बन्द हुने वा घिटीघिटी चलिरहेको अवस्थामा राज्यले निजी पहलबाट सञ्चालित ती पत्रिकाहरूलाई उनीहरूको लोकप्रियता र बिक्रीवितरण मुताबिक निश्चित आर्थिक सहायता एवं विज्ञापन उपलब्ध गराउनुपर्छ।

हामीकहाँ राज्य सञ्चालित साहित्यिक पत्रपत्रिकाको सङ्ख्या न्यून पाइन्छ। कहिलेकाहीँ तिनीहरूको प्रकाशन अवरुद्ध भएको देखिन्छ । नेपाल प्रज्ञा प्रतिष्ठानद्वारा प्रकाशित 'समकालीन साहित्य' र साझा प्रकाशनद्वारा प्रकाशित 'गरिमा' यस्तै उदाहरण हुन्। आम पहुँचका यी स्तरीय साहित्यिक पत्रिकाको नियमित प्रकाशनमा अब कुनै विलम्ब हुनुहुँदैन।

गोरखापत्र संस्थानद्वारा प्रकाशित 'मधुपर्क' अद्यावधि एक स्तरीय साहित्यिक उत्पादन हो । एक सबल संस्थामार्फत प्रकाशन हुँदै आएको यो मासिकको निरन्तरता भने सन्देहरित छ । यो प्रसन्नताको विषय हो। देश सङ्घीयतामा गएको आजको परिप्रेक्ष्यमा अब साहित्यिक पत्रकारिताको समेत विकेन्द्रीकरण आवश्यक भइसकेको छ । राष्ट्र भाषासँगसँगै अन्य मातृभाषामा साहित्यिक पत्रपत्रिकाको प्रकाशनमार्फत नेपाल राष्ट्रको विविधता प्रवर्द्धन गर्न सकिन्छ। सरकार संरक्षित र निजी क्षेत्रका सङ्घसंस्था सँसँगै आमसञ्चारमाध्यमले यसमा प्रभावकारी भूमिका खेल्न सक्छन्। ■

# साहित्य र पत्रकारिता : अभिव्यक्ति रथका दुई पाङ्ग्रा






◆ श्रीरामसिंह बस्नेत



जहाँसम्म साहित्यको सन्दर्भ छ, पत्रकारिताको जस्तो साहित्यको जन्मको कुनै एक निश्चित समयविन्दु तोकेर भन्न सकिँदैन । किनकि मानिसको मन मस्तिष्कबाट अनायास नै सिर्जित लोकसाहित्यलाई कुनै एक निश्चित समयविन्दुमा किटान गरेर तोक्न सम्भव छैन ।



मानव सभ्यताको विकासमा साहित्य र पत्रकारिताको निर्णायक भूमिका रहिआएको छ । संसारका सबै भेगका इतिहासमा पत्रकारिताभन्दा साहित्य जेठो रहेको पाइन्छ । मानव सभ्यताको विकाससँगसँगै विकसित भएर आएका धर्म, संस्कृति, दर्शन आदिले साहित्यकै माध्यमबाट जनमानसमा भिज्ने र फैलिने अवसर पाएका हुन् । शिक्षाको अवसर अत्यन्त सीमित वर्गलाई  मात्र उपलब्ध रहेको त्यो युगमा साक्षरताको अवस्था पनि न्यून वा शून्यसरह हुनु स्वाभाविकै थियो । त्यस्तो अवस्थामा पनि लोकसाहित्यको माध्यमबाट जनमानसमा चेतनाको लहर फैलाउने काम साहित्यले नै गरेको थियो ।

आधुनिक पत्रकारिताको अवधारणाले जन्म लिनुभन्दा धेरै अघि विश्वविजयको महत्त्वाकाङ्क्षा लिँदै रोमन सम्राट जुलियस सिजरले युद्ध अभियान चलाएका थिए । त्यस क्रममा उनले जारी युद्ध र प्लेग रोगको महामारीबारे जनसाधारणलाई आधिकारिक सूचना दिने परिपाटी चलाए । इसापूर्व ६९ मा पहिलो पटक रोम दरबारको बाहिर सार्वजनिक स्थानमा 'एक्टा डिउर्ना' नामको जानकारीपत्र प्रकाशित गरी युद्ध र महामारीबारे जानकारी दिने चलन चलाए । त्यतिखेर लेखपढ गर्न जान्ने मानिसहरू नगण्य मात्रामा हुने भएकाले पढ्न जान्ने दरबारका कर्मचारीले भेला भएका मानिसहरूलाई त्यसमा लेखिएका कुरा पढेर सुनाइदिने र कुरा बुझाइदिने गरिन्थ्यो भन्ने चर्चा रोमन इतिहासमा पाइन्छ । अहिलेसम्मको अनुसन्धान वा प्राप्त प्रमाणहरूका अनुसार त्यो 'एक्टा डिउर्ना'भन्दा पहिले जनसाधारणलाई आधिकारिक रूपमा महत्त्वपूर्ण जानकारी दिने उद्देश्यले त्यस प्रकारको व्यवस्था विश्वका अन्य स्थानमा भएको पाइएको छैन । बरु एक्टा डिउर्ना प्रकाशित हुन थालेपछि त्यसकै लोकप्रियताबाट प्रभावित भई रोमन साम्राज्यका अन्य स्थानबाट पनि 'एक्टा सिनाटस', 'एक्टा पब्लिका' आदि नामबाट सार्वजनिक चासोका विषयमा जनसाधारणलाई आधिकारिक जानकारी दिने व्यवस्था भएको पाइन्छ । त्यसैले एक्टा डिउर्नालाई नै  पत्रकारिताको बीजारोपण मानिन्छ र यसको श्रेय सम्राट जुलियस सिजर र रोमन सभ्यतालाई दिने गरिन्छ ।

जहाँसम्म साहित्यको सन्दर्भ छ, पत्रकारिताको जस्तो साहित्यको जन्मको कुनै एक निश्चित समयविन्दु तोकेर भन्न सकिँदैन । किनकि मानिसको मन मस्तिष्कबाट अनायास नै सिर्जित लोकसाहित्यलाई कुनै एक निश्चित समयविन्दुमा किटान गरेर तोक्न सम्भव छैन । आजभन्दा करिब सात हजार वर्षअघिको घटना मानिएको रामायणको कथा संस्कृतका आदिकवि महर्षि वाल्मीकिले महाकाव्यका रूपमा लिपिबद्ध गरे । कुल पाँच सय सर्ग, सात काण्ड र २४ हजार श्लोक रहेको वाल्मीकि रामायणभन्दा

अघि विश्वमा लिखित स्वरूपको यस्तो साहित्यिक कृतिको अस्तित्व रहेको प्रमाण भेटिएको छैन । रामायणभन्दा दुई हजार वर्षपछिको महाभारत पूर्वीय साहित्यको अर्को अत्यन्तै महत्त्वपूर्ण धार्मिक साहित्य हो । एक लाख श्लोक रहेको महाभारतमा १८ पर्व रहेका छन् । यसका लेखक कृष्ण द्वैपायन हुन्, जो वेदव्यास ऋषिका नामले प्रसिद्ध छन्, उनैले वेद, पुराण, उपनिषद्समेत रचना गरेको मानिन्छ । यद्यपि स्वामी विवेकानन्दले वेदव्यास कोही एक व्यक्ति नभई प्रबुद्ध ऋषिमुनिहरूको एक समूह रहेको र त्यही समूहले विभिन्न कालखण्डमा हिन्दुत्वसम्बन्धी ती सबै महान ग्रन्थहरू रचना गरेका हुन् भन्ने तर्क गरेका छन् । यतिका सबै महान ग्रन्थहरू एक व्यक्तिले मात्र तयार गर्न सम्भव थिएन भन्ने उनको आशयमा विश्वास गर्न सकिने ठाउँ देखिन्छ । जे होस्, मानव सभ्यता आधुनिक युगमा प्रवेश गर्नुअघि नै कालजयी महान् साहित्यिक कृतिहरू दिनसक्नु पूर्वीय जगत्को कम ठूलो योगदान होइन ।

पश्चिमी जगतको प्राचीन साहित्यको कुरा गर्दा महान् ग्रिक कवि होमरको नाम सबैभन्दा अग्रपङ्क्तिमा आउँछ । उनले अनुमानित इसापूर्व आठौँ वा सातौँ शताब्दीमा लेखेका इलियड र ओडिसी दुई महाकाव्यलाई युरोप महादेशकै सबैभन्दा प्राचीन साहित्यिक कृति मानिन्छ । ग्रिक भाषामा लिखित इलियडमा १५ हजार ६९३ पङ्क्ति छन् भने ओडिसी १२ हजार १०९ पङ्क्तिको छ । युद्धवीरहरूको गाथा र सुन्दरीहरूको कथा चित्रण गरिएका यी दुई कृतिको विश्व साहित्यमै ठूलो प्रभाव रहिआएको छ ।

यता प्राचीन विश्व साहित्यमा जापानको नाम पनि अग्रपङ्क्तिमा आउँछ । कालखण्डको हिसाबले रामायण, महाभारतजस्तो प्राचीन नभए पनि आजभन्दा करिब एक हजार वर्षअघि जापानी साहित्यकार मुरासाकी सिकिबुद्वारा रचित राजकुमार गेन्जीको कथालाई विश्वको पहिलो उपन्यास मानिन्छ । राजकुमार गेन्जीको जीवन र प्रेमसम्बन्धबारे रोचक चित्रण गरिएको यो उपन्यासकी स्रष्टा मुरासाकी एक नारी भएकीले पनि विशेष उल्लेखनीय मानिन्छ । आजभन्दा एक हजार वर्षअघि नै नारी स्रष्टाले ऐतिहासिक कृति रचना गर्न सफल भएको तथ्य एक अत्यन्त प्रेरणादायी उदाहरण हो । तर यो ऐतिहासिक तथ्यसँग आजका कति साहित्यकार तथा साहित्यप्रेमी परिचित होलान् ?

यी त भए प्राचीन साहित्यका केही प्रसङ्ग । साहित्यिक पत्रकारिताको प्रसङ्ग पनि यहाँ मननीय हुन आउँछ । यद्यपि प्राचीनताको दृष्टिले साहित्यभन्दा साहित्यिक पत्रकारिता धेरै कान्छो हो । पन्ध्रौँ शताब्दीको मध्यतिर सन् १४५५ मा जर्मनीमा जोहान गुटेनवर्गले मुद्रण प्रविधिको आविष्कार गरेपछि पुस्तक र पत्रपत्रिका छापिने क्रम सुरु भयो । आफूले आविष्कार गरेको प्रविधिको प्रयोग गरी गुटेनवर्गले सन् १४५६ मा प्रारम्भमा तीन सयप्रति बाइबल छापे । जर्मनी भाषामा रहेको त्यो बाइबललाई नै मुद्रण प्रविधिबाट छापिएको पहिलो पुस्तक मानिन्छ । गुटेनवर्गको प्रविधि सफल भएको परिणाम स्वरूप जर्मनीका विभिन्न सहरहरू र युरोपका विभिन्न मुलुकबाट पनि बेलाबेलामा सामयिक पत्रपत्रिका छापिने क्रम सुरु भयो । तीनमा फाट्टफुट्ट साहित्यिक सामग्री पनि प्रकाशित हुन्थे । सत्रौँ शताब्दीमा सन् १६६३ देखि सन् १६६८ सम्म जर्मनीको ह्यामवर्ग नगरबाट एक मासिक पत्रिका निस्कने गर्दथ्यो । यसका सम्पादक– प्रकाशक एक धार्मिक कवि जोहान रिस्ट थिए । यसमा धार्मिक तथा आध्यात्मिक भावनाका सामग्री प्रकाशित हुन्थे । यसैगरी सन् १६८४ मा फ्रान्सको राजधानी पेरिसबाट पियरे बोयलले 'नुभेले दे ला रिपब्लिका लेटर्स' प्रकाशित गरे । साहित्यिक सामग्रीको बाहुल्यता भएको त्यो मासिक पत्रिकाको सम्पादकीय साहित्यिक विषयमा केन्द्रित हुने गरेकाले यो पत्रिकालाई साहित्यिक पत्रिकामा गणना गरी युरोपको पहिलो साहित्यिक पत्रिकाको मान्यता दिइएको छ ।

भारतमा पत्रकारिताको इतिहास सन् १७८० मा जेम्स अगस्टस हिक्कीले कोलकताबाट साप्ताहिक बङ्गाल गजेट प्रकाशित गर्न थालेपछि भएको हो । हिन्दी साहित्यिक पत्रकारिताको प्रारम्भ भने सन् १९०० मा चिन्तामणि घोषद्वारा इलाहाबादबाट प्रकाशित 'सरस्वती' नामक साहित्यिक पत्रिकाबाट भएको पाइन्छ । प्रसिद्ध भारतीय साहित्यकार महावीरप्रसाद द्विवेदीले १७ वर्षसम्म यो पत्रिकाको सम्पादक भएर सेवा गरेका थिए । हिन्दी गद्य र पद्य साहित्यको लोकप्रियता वृद्धिमा 'सरस्वती'को ठूलो योगदान रहेको बताइन्छ । त्यसो त योभन्दा धेरैअघि सन् १८२१ मै राजा राममोहन रायद्वारा कोलकाताबाट प्रकाशित बङ्गाली साप्ताहिक 'संवाद कौमुदी'ले पनि बङ्गाली साहित्यको उन्नयनमा योगदान गरेको थियो । राजा राममोहन सती प्रथालगायत भारतीय समाजमा प्रचलित अमानवीय विभिन्न अन्धविश्वासका कट्टर विरोधी थिए । साहित्यका माध्यमबाट त्यस्ता अन्धविश्वासविरुद्ध जनचेतना जगाउन राममोहनले 'संवाद कौमुदी'लाई एक सशक्त माध्यम बनाएका थिए । भारतवर्षका भाषासाहित्यहरूमध्ये संस्कृतपछि तमिल साहित्यको इतिहासलाई प्राचीन मानिन्छ ।

नेपालका सन्दर्भमा कुरा गर्दा साहित्यकै जगमा नेपाली पत्रकारिताको विशाल मन्दिर उभिएको पाइन्छ

भने पत्रकारिताकै माध्यमबाट नेपाली साहित्यले फैलिने माध्यम पाएको देखिन्छ । यद्यपि दक्षिण एसियाली पत्रकारितामा नेपाली पत्रकारिता निकै कान्छो हो, कठोर र निरङ्कुश राणा शासनका कारण शिक्षाबाट वञ्चित हुनुपरेकाले । नेपालभित्रैबाट पत्रिका प्रकाशन गर्न सकिने वातावरण नभएकाले नै बनारसमा विद्यार्थी जीवन बिताइरहेका मोतीराम भट्टले विसं १९५० मा रामकृष्ण बर्माको समेत सहयोग लिई उतैबाट मासिक 'गोर्खाभारत जीवन' प्रकाशित गरे । नेपाली भाषामा प्रकाशित त्यो नै पहिलो पत्रिका थियो । पर्याप्त प्रमाणहरूको अभावमा त्यस पत्रिकाका बारेमा विस्तृतमा केही भन्न नसकिए पनि मोतीराम आफैँ साहित्यसेवी भएकाले त्यस पत्रिकामा साहित्यिक सामग्रीलाई पर्याप्त स्थान दिइएको हुनुपर्छ भन्ने सहजै अनुमान गर्न सकिन्छ । नेपाली भाषामै र नेपालबाटै प्रकाशित पूर्ण साहित्यिक पत्रिका भने विसं १९५५ मा प्रकाशित 'सुधासागर' हो । यसको पूर्ण श्रेय नरदेव पाण्डेलाई जान्छ । यद्यपि सुधासागरका प्रतिहरू उपलब्ध नभएका कारण यसको योगदानबारे विश्लेषण गर्न सम्भव भएको छैन ।

त्यसपछि वि.सं.१९५८ वैशाखदेखि राज्यसत्ताकै सदिच्छाबाट 'गोर्खापत्र' साप्ताहिक प्रकाशित भयो । यसका लागि तत्कालीन प्रधानमन्त्री देवशमशेर सधैँका लागि धन्यवादका पात्र बनेका छन् । सुधासागरका संस्थापक नरदेव पाण्डेलाई नै देवशमशेरले गोर्खापत्र प्रकाशनको गहन जिम्मेवारी सुम्पेकाले सुधासागरको साइनो गोर्खापत्रसँग जोडिएको छ । गोर्खापत्र नेपालको पहिलो अखबार भए पनि नेपाली भाषा र साहित्यको श्रीवृद्धिमा यसको योगदान अतुलनीय रहिआएको छ । गोर्खापत्रका विशेषाङ्क र शनिवासरीय अङ्कहरूले नेपाली साहित्यका विकासका लागि फराकिलो बाटो दिँदै आएका छन् । पूर्ण साहित्यिक प्रकाशनको कुरा गर्दा शारदा मासिक (विसं १९९१), उद्योग ( १९९२), साहित्य स्रोत (२००४), घरेलु इलम पत्रिका (२००४), आँखा (२००५) आदिको पनि योगदान रहेको पाइन्छ । त्यसमा पनि विशेषगरी शारदा र उद्योगले धेरै साहित्यकारहरूलाई जन्माएको इतिहास छ ।

नेपाली साहित्य र नेपाली पत्रकारिताबीचको सम्बन्ध निकै घनिष्ठ र गहिरो छ । यो सम्बन्धको इतिहास उनै महान् विभूति युवक कवि मोतीराम भट्टको सत्कर्मदेखि नै प्रारम्भ भएको पाइन्छ । किनकि उनले नेपाली भाषामा पहिलो पत्रिका प्रकाशित गर्ने ऐतिहासिक साहस गरे भने उनी एक प्रतिभाशाली साहित्यकार त छँदै थिए । उनले बनारसबाट गोर्खाभारत जीवन मासिक पत्रिका निकाल्ने आँट नगरेका भए त्यसबाट प्रेरित भएर काठमाडौँबाट सुधासागर प्रकाशित हुने वातावरण बन्दैन थियो । सुधासागर प्रकाशित गरेर काठमाडौँमा एउटा सिर्जनशील वातावरण सिर्जना गर्न नसकेका भए नरदेव पाण्डेले गोर्खापत्र प्रकाशित गर्ने ऐतिहासिक जिम्मेवारी सायद पाउँदैन थिए होलान् । त्यसैले नेपाली भाषाको पहिलो पत्रिका गोर्खाभारत जीवन, नेपालबाट प्रकाशित पहिलो पत्रिका सुधासागर र नेपाली भाषाको पहिलो अखबार गोर्खापत्रको जन्म एकै शृङ्खलाका कडी बनेका छन् ।

नेपाली साहित्य र पत्रकारिताको विगत पल्टाउँदा एकै व्यक्तिले साहित्य र पत्रकारिता दुवै क्षेत्रमा सक्रिय योगदान पुऱ्याएका प्रशस्त दृष्टान्त भेटिन्छन् । यस्ता महारथिहरूमा मोतीराम, नरदेव, जयपृथ्वीबहादुर सिंह मात्र हैन शारदाका सम्पादक ऋद्धिबहादुर मल्ल, घरेलु इलम पत्रिकाका सम्पादक भीमनिधि तिवारी, साहित्य स्रोत र पछि जागरण साप्ताहिकका पनि सम्पादक हृदयचन्द्रसिंह प्रधान, नेपालको पहिलो दैनिक अखबार आवाजका सम्पादक युगकवि सिद्धिचरण श्रेष्ठ, रेडियो नेपालका संस्थापक निर्देशक कथाकार तारिणीप्रसाद कोइराला आदिका नाम अग्रपङ्क्तिमा आउँछन् ।

साहित्य सिर्जना र पत्रकारिता दुवै क्षेत्रमा कलम चलाएर जीवनको भारी बिसाइसकेका हाम्रा अग्रजहरूलाई पनि यस सन्दर्भमा सम्झनै पर्ने हुन्छ। रूपरेखा साहित्यिक पत्रिकाको माध्यमबाट नेपाली साहित्यको श्रीवृद्धिका लागि प्रशस्त सेवा गरेका श्रद्धेय बालमुकुन्ददेव पाण्डे अखबारी पत्रकारिताका पनि एक हस्ती हुनुहुन्थ्यो । यसैगरी हाँस्यव्यङ्ग्यका महारथि भैरव अर्याल र केशवराज पिँडाली, आख्यानकार मदनमणि दीक्षितले पत्रकारिता क्षेत्रमा पुऱ्याएको योगदान इतिहासमा स्पष्टसँग अङ्कित छ । समाचारकर्मीको पेसामा जीवन बिताएका दुर्लभलालसिंह, बासु रिमाल यात्री, लीलासिंह कर्मा, अमृतलाल श्रेष्ठ, शिव अधिकारी आदिका साहित्यिक सिर्जना हाम्रो साहित्य भण्डारमा सुरक्षित रहेका छन् ।

विद्वान् म्याथु आरनोल्डले 'पत्रकारिता हतारिएको साहित्य हो' भनेका थिए । यस हिसाबले साहित्यलाई पनि फुर्सदको पत्रकारिता हो भन्दा गल्ती हुँदैन । किनकि साहित्य र पत्रकारिता दुवैको लक्ष्य मानिसलाई सजग, सचेत र संवेदनशील बनाउनु हो । साहित्य र पत्रकारिता दुवै संदेशवाहक हुन् भने अभिव्यक्तिका सशक्त माध्यम । कुनै एक देश वा भूगोलको मात्र होइन, समग्र मानव सभ्यताकै अग्रगामी यात्रामा साहित्य र पत्रकारिता एकै रथका दुई पाङ्ग्रासरह चलायमान रहँदै आएका छन् र रहिरहने छन् । ■

# साहित्य र आमसञ्चार






◆ हरि अधिकारी



साहित्यबाहेकको आमसञ्चारको अन्य कुनै पनि माध्यमले त्यसको उपभोक्तामाथि पार्न सक्ने सकारात्मक वा नकारात्मक प्रभावको झन्डै झन्डै वस्तुगत आँकलन गर्न सकिन्छ तर साहित्यले त्यसको अमुक पाठक वा पाठकहरूको समूहमाथि यस्तै किसिमको प्रभाव पारेको छ भनेर निश्चित रूपमा कहिल्यै पनि भन्न सकिँदैन ।



साहित्य आफैँ पनि मानिसका विचार, भावना र आवेग-संवेगहरूलाई प्रभावकारी ढङ्गमा व्यक्त गर्ने एक माध्यम भएकाले यसलाई आमसञ्चारमाध्यममध्येकै एक मान्न खोजियो भने खासै अन्यथा भइहाल्दैन । तर आमसञ्चारका अन्य माध्यमहरूका तुलनामा साहित्य यसका सर्जकको दिमागको भन्दा बढी हृदयको नजिक हुने, यसको रचना प्रक्रिया नितान्त वैयक्तिक हुन सक्ने र यसलाई अभिव्यक्त गर्ने तरिका पनि सर्जकैपिच्छे विशिष्टीकृत हुनेहुँदा यसलाई जानिफकारहरूद्वारा सामान्यतः आमसञ्चारका अन्य अनेक माध्यमजस्तै एउटाका रूपमा लिइने गरेको भने पाइँदैन । साहित्य र आमसञ्चारका अन्य माध्यमबीचको विभाजन रेखा निकै पातलो हुन्छ । यति हुँदाहुँदै पनि साहित्यलाई आमसञ्चारका अन्य प्रचलित माध्यमकै रूपमा लिने र बुझ्ने प्रयत्न गर्दा त्यसले बहुधा दिन खोज्ने गहन सन्देश र बोक्ने अर्थ-गाम्भीर्यसम्म यसको उपभोक्ता अथवा पाठकले सहज रूपमा पहुँच बनाउँन नसक्ने हुनाले पनि साहित्यलाई आमसञ्चारका अन्य प्रचलित माध्यमभन्दा पृथक् राखेर विशिष्ठ महत्त्वका साथ हेरिँदै आएको हुनुपर्छ । त्यसमाथि साहित्य मानव मात्रले आफ्ना विचार, भावना र आवेग-संवेगलाई प्रकट गर्न अपनाएका माध्यमहरूमध्ये सबैभन्दा पुरानाहरूमध्ये एक पनि हो । लोकभाकाका गीत र चित्रकारीपछि साहित्य सम्भवतः मानिसले आफूलाई अभिव्यक्त गर्नका लागि सन्धान गरी अवलम्बन गरेको सबैभन्दा पुरानो र सशक्त माध्यम हो । आमसञ्चारका आज अत्यधिक मात्रामा प्रचलित हुन पुगेका माध्यमहरूको नामनिसान नै नभएको बेलामा साहित्य नै मानवीय अभिव्यक्तिको एक सशक्त र मनोरम माध्यमका रूपमा लोकप्रिय भइसकेको थियो भन्ने कुरा पनि यहाँनेर स्मरणीय छ । साहित्य मानव सभ्यताले आफ्नो लामो यात्राका क्रममा टेकेको विशिष्ठ कलात्मक खुड्किलो हो ।

आमसञ्चारका प्रचलित माध्यमहरूको उपभोग गर्ने क्रममा तिनका उत्पादक र उपभोक्ता दुवैको सहमतिमा गर्नुहुने र नहुने कामहरूको सूचीका आधारमा सबैलाई मान्य हुने किसिमको आचारसंहिता तयार गरेर लागू गरिँदै आएको देखिन्छ घटी-बढी मात्रामा संसारभरि नै । त्यस्ता आचारसंहिताहरू तयार गरी तिनको प्रभावकारी कार्यान्वयनको प्रत्याभूति गर्नका लागि अन्तर्राष्ट्रिय महासभाहरूको आयोजना गरिने गरिन्छन् र तिनले सदस्य राष्ट्रहरूमा आमसञ्चारसम्बन्धी वैश्विक नीति र आचारसंहिता लागू गर्ने परिप्रेक्ष्यमा विभिन्न सन्धिसम्झौताहरू गर्ने गर्छन् । ती सन्धि-सम्झौताका आधारमा तयार गरिएका त्यस्ता आचारसंहितासम्बन्धी हातेपुस्तक (म्यानुअलहरू)समेत लाखौँको सङ्ख्यामा छपाएर वितरण गर्ने गरिन्छ प्रत्येक साल । अन्तर्राष्ट्रिय अभिसन्धिहरूले पारित गरेर लागू गरेका आम-सञ्चारसम्बन्धी त्यस्ता आचार संहिताहरूको कार्यान्वयनको स्थिति कस्तो छ भनेर हेर्न मात्र पनि विभिन्न पर्यवेक्षण निकायहरू खडा गरिएका छन् । तिनीहरूले प्रत्येक वर्ष विश्वभरि आमसञ्चारसम्बन्धी आचारसंहिता कार्यान्वयनको स्थितिको मूल्याङ्कन गरी प्रतिवेदनहरू सार्वजनिक गर्ने गर्छन् । ती प्रतिवेदनका आधारमा आमसञ्चारको क्षेत्रमा आजको विश्व अथवा आजको प्रबुद्ध मानिस कहाँनेर उभिएको छ भन्ने कुराको निक्यौंल गर्ने प्रयास गरिन्छ ।

साहित्यको हकमा भने यस्ता कुराको कुनै अर्थ हुँदैन। न त साहित्य-सर्जकमाथि कुनै किसिमको नीति र संहिताको बन्धन लगाउन सकिन्छ न त कुनै पनि सिर्जना यसैगरी रचिएको हुनुपर्छ भनेर कुनै नमुना नै सुझाउन सकिन्छ। साहित्यबाहेकको आमसञ्चारको अन्य कुनै पनि माध्यमले त्यसको उपभोक्तामाथि पार्न सक्ने सकारात्मक वा नकारात्मक प्रभावको झन्डै झन्डै वस्तुगत आँकलन गर्न सकिन्छ तर साहित्यले त्यसको अमुक पाठक वा पाठकहरूको समूहमाथि यस्तै किसिमको प्रभाव पारेको छ भनेर निश्चित रूपमा कहिल्यै पनि भन्न सकिँदैन। साहित्य निजात्मक अन्तरङ्ग अभिव्यक्तिको स्वच्छन्द माध्यम भएकाले यसमाथि कुनै पनि किसिमको निषेध, वर्जना वा प्रतिबन्ध लगाउन खोज्नु नैसर्गिक मानवीय प्रकृतिको बर्खिलाप जाने विषय हो। साहित्यले आफ्ना पाठकहरूबाट पनि लगभग सर्जककै कोटिको संवेदना, अन्तर्दृष्टि र ग्रहणशीलताको माग गर्ने हुनाले फलानो साहित्य खराब थियो र त्यो पढेकै कारणले अमुक पाठकलाई यति र यस्तो मानसिक क्षति भयो भन्ने किसिमको मनोगत दाबी गर्न मिल्दैन। कसैले त्यस्तो दाबी गरिहाल्यो भने पनि त्यसलाई तथ्यका आधारमा प्रमाणित गर्न असम्भव हुने हुनाले त्यस्तो कुनै पनि दाबी हास्यास्पद हुन जान्छ। यो कोणबाट हेर्दा साहित्यलाई सञ्चारको एउटा माध्यमका रूपमा लिन सकिने भए पनि यसको मौलिक चरित्र एकदमै बेग्लै छ र यसलाई आमसञ्चारको एक सामान्य माध्यमका रूपमा मात्र अर्थ्याएर हेर्न खोजियो भने त्यसले भ्रमको स्थिति मात्र सिर्जना गर्दछ भन्न सकिन्छ।

अभिव्यक्तिको एक अत्यन्त प्रभावकारी माध्यमका रूपमा साहित्यको आमसञ्चारको क्षेत्रमा महत्त्वपूर्ण स्थान छ भन्ने कुरामा कुनै विवाद छैन। हो, साहित्य आफ्नो विशिष्ठ प्रकृतिका कारण आमसञ्चारका अन्य माध्यमभन्दा निश्चित रूपले फरक छ तर यसको र आमसञ्चारका अन्य माध्यमका बीचको दूरी धेरै फराकिलो छ भन्ने पनि होइन। सञ्चारका यी सबै माध्यम मानवीय अभिव्यक्तिसँग गाँसिएका हुनाले यिनीहरूको अन्तर्य एउटै, मान्छेलाई आत्मवीक्षण गर्न सघाउन, एउटा समाजलाई अर्को समाजसँग भावनात्मक स्तरमा जोडिन मद्दत गर्न र समग्रमा मानिसलाई वाचाल र मुखर बनाउने प्रक्रियामा जान उत्प्रेरत गर्नमा निहित छ। त्यसैले यिनका बीचको अन्यान्योश्रित सम्बन्धलाई बुझ्न यी माध्यम कुन बिन्दुमा कसरी अन्तर्क्रियात्मक हुन्छन् त्यस कुराको पडताल गर्नु जरुरी हुन आउँछ। साथै आमसञ्चारका आज प्रचलित विभिन्न माध्यमको उद्‌भव र विकास क्रमको तुलनात्मक अध्ययनले पनि यिनका बीचको अन्तर्सम्बन्धका विविध आयामलाई बुझ्न सजिलो बनाउँछ।

आमसञ्चारका अन्य कतिपय माध्यमहरूको तुलनामा साहित्यको विकासयात्रा निक्कै लामो छ। मानव सभ्यताको यात्राका क्रममा मानिसलाई लडाइँ र झगडा, बारुद र बन्दुक, रगत र आँशुको भलबाट बाहिर निकालेर प्रेम, भ्रातृत्व, सहजीवन र सहयात्राको लोकमार्गमा हुलिदिने पुनीत कर्ममा कुनै एक तत्त्वको सबैभन्दा ठूलो भूमिका छ भने निर्धक्कसँग भन्न सकिन्छ साहित्यको नै छ। धर्म, दर्शन, अध्यात्म, पराचिन्तनमुखी उपदेश जस्ता मानव समाजमा धेरै पहिलादेखि प्रचलित बौद्धिक विलासका विषयहरूको आदिस्रोत पनि साहित्य नै हो। साहित्यले नै छापा पत्रकारहरूलाई कसरी प्रभावकारी भाषा र भङ्गिमामा समाचार-कथाहरू सुनाउन सकिन्छ भनेर सिकाएको हो। साहित्यले नै टेलिभिजनमा बोल्ने वाचक-वाचिकाहरूलाई श्रोताको मनलाई छुने शब्द र तिनको ओजका बारेमा पाठ पढाएको हो। साहित्यले नै आमसञ्चारका अरू माध्यमहरूलाई शिष्ठता, सौमनस्य र वागदेवीको मर्यादा गर्न सिकाएको हो। साहित्यले नै प्रेमको जाहेरीका लागि गजल र विरह वेदनाको अभिव्यक्तिका लागि गीतको आविष्कार गरिदिएको हो। साहित्यले नै केटाकेटीहरूलाई अनुप्रास मिलेका रोचक गेयरचनाहरूसँग साक्षात्कार गराएको हो भने किशोर र युवा वयकाहरूलाई रहस्य-रोमाञ्च र साहसिक आख्यानमा आधारित गाथाहरूबाट अभिभूत। साहित्यको योगदान नहुँदो हो त आमसञ्चारका सिनेमा, टेलिभिजन, डक्युड्रामा जस्ता अन्य माध्यमहरू कमजोर, खल्ला, अनाकर्षक र भद्दा नै रहने थिए भन्नु अत्युक्ति हुनेछैन।

साहित्य र आमसञ्चारका अन्य माध्यमबीचको सम्बन्धको पडताल गर्ने क्रममा यति कुरा लेखिसकेपछि आजको घडीमा दिन दुई गुना रात चौगुना बढ्दै गइरहेका आमसञ्चारका, विशेषगरी श्रव्य-दृश्य माध्यमको फैलावटबाट साहित्यलाई कत्तिको खतरा छ भन्ने विषयमाथि पनि दुई शब्द भन्नु उपयुक्त नै होला भन्ने ठान्छु। एकथरी जानिफकारहरूको मत छ, डिजिटल प्रविधिमा आधारित श्रव्य-दृश्य माध्यमको विशालकाय दैत्यले छिटै नै पुस्तकका माध्यमबाट पाठकसम्म पुग्ने छापा साहित्यको अस्तित्व नै नामेट गरिदिनेछ। अर्कोथरी भन्छन् पुस्तकको अस्तित्व मटियामेट नै त नहोला तर बेलैमा सावधान भएर आजका बालबालिका र किशोर-किशोरीहरूलाई अडियो-भिजुअल माध्यमको लतबाट बाहिर निकालेर उनीहरूमा पुस्तकप्रतिको अभिरुचि बढाउन सकिएन भने पुस्तकका माध्यमबाट प्रसारित हुने साहित्य जोखिमको परिधिभित्र अवश्य पनि आउने छ। मेरो मत पनि यो पछिल्लो विचारभन्दा धेरै फरक छैन।

हामीले पुस्तकको प्रवर्द्धनका लागि व्यावहारिक नीति ल्याउन ढिला भइसकेको छ। सरकारले चाँडोभन्दा चाँडो राष्ट्रिय पुस्तक नीति लागू गरी पठन संस्कृतिको जगेर्नाका लागि उपयुक्त वातावरण निर्माण गर्नै पर्दछ। होइन भने आउँदो दुई तीन पुस्तापछि पुस्तकहरूलाई सङ्ग्रहालयमा मात्र देख्न पाइने हुन सक्छ। ■

# मेरो साहित्यिक र पत्रकारिताको यात्रा



संस्मरण



◆ कृष्ण धरावासी



देशमा जम्मा एउटा रेडियो नेपाल थियो राष्ट्रिय प्रसारण हुने । सम्पूर्ण देश बिहान ६ बजे धार्मिक कार्यक्रमको शङ्ख ध्वनिबाट ब्युँझिन्थ्यो र ७ बजेको राष्ट्रिय समाचार सुनेर हिँड्न थाल्थ्यो । दिउँसोतिर फर्माइस गीतहरूमा रमाउँथ्यो । राति ११ बजेतिर शास्त्रीय सङ्गीत सुन्दै मानिसहरू निदाउँथे ।



२०३२ सालमा पहिलो कविता प्रकाशित भएदेखि म साहित्यिक यात्रामा निस्केको थिएँ । तीसको दशकभरि कविता, कथा र निबन्ध लेख्ने अभ्यासको यात्राक्रममा थिएँ। साहित्यिक क्षेत्रमा प्रवेश गर्दा मेरो कुनै योजना थिएन। मैले कुनै दिन लेखक बनौँला भन्ने सोचेको पनि थिइनँ। हिँड्दा हिँड्दै पुगिएझैँ म थाहै नपाई लेखक बन्दै गएछु। मेरो पहिलो सम्पादित कृति थियो–आजको कविता। यो २०३८ सालमा झापाको शनिश्चरेबाट निकालिएको थियो।

नव कविका रूपमा मेरो पहिचान आफ्नो गाउँबाट जिल्ला हुँदै राजधानीसम्म पनि बिस्तारित हुँदै जान थालेको थियो। आजको जस्तो सञ्चार र प्रविधिको कुनै सङ्केत नभएको बेला ट्रेडल प्रेसमा महिनौँ लगाएर पुस्तक वा साहित्यिक पत्रिकाहरू छाप्नुपर्ने समयमा हाम्रा सबै गतिविधि सुस्त हुन्थे। हुलाकबाट पत्र पठाउने र जवाफ पर्खिने महिनौँको सुस्त गतिमा थियो हाम्रो लेखन यात्रा।

देशमा जम्मा एउटा रेडियो नेपाल थियो राष्ट्रिय प्रसारण हुने। सम्पूर्ण देश बिहान ६ बजे धार्मिक कार्यक्रमको शङ्ख ध्वनिबाट ब्युँझिन्थ्यो र ७ बजेको राष्ट्रिय समाचार सुनेर हिँड्न थाल्थ्यो। दिउँसोतिर फर्माइस गीतहरूमा रमाउँथ्यो। राति ११ बजेतिर शास्त्रीय सङ्गीत सुन्दै मानिसहरू निदाउँथे। हप्ताको दुई दिन दाहाल यज्ञनिधिको साहित्य संसार हलो जोत्दै, भात पकाउँदै, घाँस काट्दै, बाटो हिँड्दै कविता र निबन्धहरूमा नाच्थ्यो। जम्मा एउटा मधुपर्क साहित्यिक मासिक थियो गोरखापत्र संस्थानबाट प्रकाशन हुने। त्यसले देशभरिको साहित्यिक दबाबलाई खप्नुपर्थ्यो। एक मात्र राष्ट्रिय दैनिक थियो गोरखापत्र। यो सरकारको मुखपत्र भएकाले यसमा सरकारका योजना, कार्यक्रम र सूचना मात्र हुन्थे। सरकारको आलोचना सुनिने कुनै प्रकारका विचार र समाचारले यसमा स्थान पाउँदैन थिए।

२०३६ सालको विद्यार्थी आन्दोलनबाट प्रजातान्त्रिक चेत बोकेको मेरो मानसिकतामा जनमत सङ्ग्रहको परिणामपछि पनि कुनै विचलन आएको थिएन। बरु उमेर र अनुभव सँगसँगै त्यसमा अझ गहिरो अडान स्थापित हुँदै गइरहेको थियो। त्यस चेतलाई विद्रोहका रूपमा कवितामा उतार्दै गइरहेको बेला २०४० सालमा झापा चन्द्रगडीबाट तारा बरालको सम्पादनमा साप्ताहिक विचार नामको एक पत्रिका प्रकाशन हुन थाल्यो। केही नमुना अङ्कपछि नियमित प्रकाशन हुन थालेको त्यस पत्रिकामा शनिश्चरेबाट म पनि जोडिन पुगेँ।

वैचारिक अडानका साथ व्यावसायिक पत्रकारितामा प्रवेश गरेका तारा बरालको, सुरुका केही अङ्कदेखि नै प्रशासनसँग टक्कर पर्न थालिसकेको थियो। त्यसबेला म शनिश्चरे माविमा अस्थायी शिक्षकका रूपमा कार्यरत भएकाले खुलेर पत्रकारिता गर्न सम्भव थिएन। त्यसैले नामलाई गोप्य राखी संवाददाताका रूपमा काम गर्न थालेँ। उतिबेलाको पत्रकारितामा पारिश्रमिकबारे सोच्नु वा सोध्नु अनौठो मानिन्थ्यो। हदै भए संवाददाताले आफूले खोजेका



विज्ञापनबाट पाएको कमिसनमा चित्त बुझाउनुपर्ने हुन्थ्यो। त्यसबेला जिल्लामा त्यस्तो विज्ञापन दिने उद्योग नै के हुन्थे र ! चाडपर्व र राजारानीको जन्मोत्सवका शुभकामनाहरू पत्रिकाका विशेष आम्दानीका स्रोत हुन्थे । म भूमिगत संवाददाता भएकाले मैले विज्ञापन सङ्कलन गर्ने कुरा हुँदैनथ्यो। त्यसैले मेरो पत्रकारिता आत्मसन्तुष्टिका लागि मात्र थियो।

समाचारहरूमा नामको सट्टामा हाम्रा संवाददाता लेखिएको भएपछि सम्पादकबाहेक मलाई पत्रकार भनेर अरूले चिन्ने कुरै थिएन । रिपोर्टिङ गर्दा ज्यादाजसो गाउँमा पञ्च नेताहरूबाट हुने अनियमिततालाई प्रमुख विषय बनाउँथेँ। पत्रिकामा ती खबर आएपछि समाचार कसले बनायो भनेर भित्रभित्रै खोजबिन हुनु स्वाभाविक हुन्थ्यो। धेरैका आशङ्काहरूका माझमा म पनि हुन्थेँ तर कसैले पनि तैँ होस् भनेर औँलो चाहिँ ठड्याएनन्। यस्तो भूमिगत पत्रकारितामा कहिलेकाहीँचाहिँ बडा बेस्वाद हुन्थ्यो जब आफूले पठाएको समाचारले सक्दो चर्चा पाउँथ्यो र चोकचोकमा मानिसहरू संवाददाताको प्रशंसा गरिरहेका हुन्थे।

त्यही वर्षको असारदेखि भवानी घिमिरेको नेतृत्वमा झापाली युवाहरूको एक समूहले भोक कविता आन्दोलनको नाममा काव्य अभियानको थालनी गऱ्यो। त्यसमा हीरा आकाश, केशव आचार्य, अमृतलाल श्रेष्ठ, लक्ष्मण ढकाल, प्रकाश बुढाथोकी, दुर्गा दाहाल, डिकमान विरही, देवेन्द्रकिशोर ढुङ्गाना र कृष्ण धरावासी थियौँ। यस आन्दोलनले झापामा अनौठो लहर लिएर आयो। शालीन भाषामा लेखिएका कविताहरूमा अत्यन्त तीखो विद्रोहको स्वर हुन्थ्यो। यसबाट प्रशासनका नजर हामीतिर फर्किन थालेका थिए। झापाका अधिकांश साप्ताहिकहरूले भोक कविताको ब्लग बनाई नियमित रूपमा हाम्रा कविताहरू पालैपालो छाप्न थाले। ती कविताहरूले पाठकलाई फरक प्रकारले आकर्षण गर्न थाल्यो। पत्रिकाको सम्पादकीयमा भन्न नसकिएका कैयौँ विचार विम्बात्मक रूपमा हाम्रा कविताले भनिरहेका हुन्थे। यस समूहमा सक्रिय कविहरू बाम, प्रजातन्त्रवादी र पञ्च सबै विचारका थिए। विभिन्न विचारका युवा कविहरू एकै मञ्चमा भएकाले सायद प्रशासनलाई पनि केही गरिहाल्न सजिलो भएन होला।

हामी कविहरू अधिकांश प्रत्यक्ष वा भूमिगत पत्रकार थियौँ। हीरा आकाश एक साप्ताहिकका सहसम्पादक थिए। अमृतलाल श्रेष्ठ राससका जागिरे पत्रकार थिए। केशव आचार्य र लक्ष्मण ढकाल विश्वदीप मासिक र शनिबार साप्ताहिकका परिचयपत्रधारी थिए। म साप्ताहिक विचारको अदृश्य। यसरी हाम्रो साहित्यिक र पत्रकारिताको यात्रा समानान्तर थियो।

२०४३ सालदेखि कृषि विकास बैङ्कको जागिरे भएँ। फेरि पनि मैले पत्रकारितामा भूमिगत नै हुनुपर्ने

भयो। त्यही सिलसिलामा २०४४ सालदेखि मैले साप्ताहिक विचारमै मुक्तपातो शीर्षकको एक स्तम्भ लेख्न लागेँ। यस पातोमा यसअघि राजेश ढुङ्गानाले लेख्ने गरेका थिए। जब मैले यो स्तम्भ थालेँ, लेखकको नाम अव्यय राखेँ। नाम गोप्य राख्नुपर्ने मेरो बाध्यता थियो तर यस गोप्यताले आफ्नो लेखनको जस वा अपजस लिन नपाउँदा भने कहिलेकाहीँ नरमाइलो लाग्थ्यो। हरेक हप्ता म जिल्ला वा केन्द्रका समसामयिक राजनीतिक विषयमा कडा टिप्पणी गर्थें जसका नियमित पाठक बन्दै गएका थिए। पछि त मानिसहरूका आँखा पहिला मुक्तपातोमै पर्न थालेका थिए। चोकचोकमा ती लेखहरूको चर्चा हुन्थ्यो र म चुपचाप सुन्दै अगि बढ्थेँ। मेरो लेखन तथा पत्रकारिता जीवनमा साप्ताहिक विचार र मुक्तपातोको अत्यन्त ठूलो योगदान छ। यसले मलाई लेखनमा निर्भीक र सहासी हुन प्रेरित गर्‍यो। कालान्तरमा मैले आफ्ना निबन्ध र गद्य लेखनमा ठूलो शक्ति सञ्चित भएको अनुभव गरेँ। यो स्तम्भ नियमित रूपमा २०५० सालसम्म लेखेँ। मेरा लेखहरूका कारण बेलाबेला सम्पादक सीडीओ कार्यालयमा स्पष्टीकरण दिन धाइरहन्थे तर उनले यस स्तम्भलाई भने कहिल्यै रोकेनन्। यसले मेरो गद्य लेखनमा धेरै मद्दत गर्‍यो, जसका कारण म विस्तारै निबन्धहरू लेख्न थालेँ र पहिलो कृति नै निबन्धसङ्ग्रह बालक हराएको सूचना (२०४८) प्रकाशित भयो।

२०४७ सालमा बहुदलको घोषणा भएपछि पहिलोपल्ट मैले मुक्तपातोको स्वामित्व लिएँ। त्योभन्दा अघि पाठकहरूले त्यसको लेखक पनि सम्पादक तारा बराल नै हुन् सम्झेका हुन्थे। त्यो खुलासा भएपछि आफ्नै वरिपरिका मानिसहरू पनि चकित भएका थिए, जो यो स्तम्भका नियमित पाठक तथा प्रशंसक थिए। पत्रकारिता मेरो पेसा थिएन किनकि त्यसबाट मलाई कुनै आर्थिक उपलब्धि हुँदैन थियो। तर मलाई लाग्थ्यो म जागिरेभन्दा बढी पत्रकार नै हुँ। बहुदल आएपछि साप्ताहिक विचारले मलाई परिचयपत्र बनाइदियो। त्यसैको आधारमा सूचना विभागबाट रातो कार्ड पनि पाएँ। अब म दर्तावाल पत्रकार थिएँ।

२०४८ सालमा आइपुग्दा म एकै सातामा दुई पुस्तकहरू बालक हराएको सूचना र विश्वेश्वरप्रसाद कोइरालाका उपन्यासहरू प्रकाशित गरी निबन्धकार र समालोचक बन्न पुगेँ। प्रजातन्त्र प्राप्तिपछि लेख्नका लागि डराउनु नपर्ने भयो। अनि म खुला रूपले आफ्नै नाममा विभिन्न पत्रिकाहरूमा साप्ताहिक स्तम्भ लेखन गर्न थालेँ। खुला विषयमा लेखिने यस्ता स्तम्भहरूमा म कहिले समसामयिक राजनीतिक व्यङ्ग्य, कहिले साहित्यिक सन्दर्भ वा बहसहरूमाथि कलम चलाउँथेँ। साप्ताहिक विचारबाहेक झापाबाटै प्रकाशित हुने मनकामना साप्ताहिक, रहर मासिक, जनज्योति साप्ताहिक, शनिबार साप्ताहिक आदिमा नियमित लेखेँ।

२०५० सालमा रेडियो नेपालले पहिलो पल्ट राजधानीबाहिर आफ्ना प्रतिनिधि राख्ने भएपछि भरत भुर्तेल र पुरुषोत्तम दाहालको पहलमा झापा संवाददाताका रूपमा प्रवेश पाएँ। छ महिनाका लागि करारमा नियुक्त भएपछि दुई हप्ताको रेडियो तालिम लिएर झापा फर्किएको थिएँ। छापा पत्रकारिताबाट म पहिलोपल्ट आकाशवाणीमा प्रविष्ट भएँ। रेडियोमा बोल्ने सबैभन्दा ठूलो मानिस हो भन्ने लाग्थ्यो सधैँ। गाउँमा रेडियोबाट बोल्नेलाई सीडीओभन्दा पनि ठूलो होलाझैँ मान्थे। थाहै नपाई म जिल्लामा ठूलो भइसकेको थिएँ। नभन्दै प्रहरी, प्रशासन, राजनीतिकर्मी, व्यापारी, समाजसेवी सबैको आकर्षणको केन्द्र भएको थिएँ। अचम्म त के थियो भने जिल्लामा हुने निकै ठूलाठूला सभाहरूमा रेडियो नेपालको प्रतिनिधिका रूपमा विशेष प्रकारले मञ्चमै आसनग्रहण गराउँथे।

म संवाददाता भएर झापा पुगेको बेला निर्वाचन क्षेत्र नं. एकमा तत्कालीन सांसद द्रोणाचार्य क्षेत्रीको निधन भएकाले उपचुनावको गर्मागर्मी थियो। यता राजधानीमा पनि मदन भण्डारीको निधन भएपछि उपचुनाव हुँदै थियो। झापामा दुई वकिलहरू कृष्णप्रसाद सिटौला र लीला उदासीका बीच कडा टक्कर थियो। काठमाडौँमा कृष्णप्रसाद भट्टराई र विद्यादेवी भण्डारीका बीच पनि उस्तै कडा प्रतिस्पर्धा थियो। निर्वाचनका यिनै दुई समाचारले त्यसबेलाका सबै सञ्चारमाध्यमहरू अत्यन्त व्यस्त भएको बेला मैले झापाबाट चौबीसै घण्टा अपडेट हुनुपर्ने थियो। आफ्नो बैङ्क जागिरलाई जोगाउँदै यो रिपोर्टिङ गर्नु मेरा लागि निकै कडा चुनौती थियो। तर मैले यो चुनौतीलाई सहजै पार लगाएँ। मसँगै नियुक्ति लिएका अन्य एघार जनामध्ये यही चुनावका कारणले म विशेष चर्चामा थिएँ। समाचारका लागि चुनावको अपडेट टिपाउनुबाहेक परिक्रमा कार्यक्रमका लागि भरत भुर्तेललाई र घटना र विचारका लागि पुरुषोत्तम दाहाललाई विशेष घटना विश्लेषणको टेलिफोन रिपोर्टिङ पनि गर्नुपर्ने हुन्थ्यो।

पत्रकारिता सुरु गरेको दस वर्षपछि पहिलोपल्ट मैले पारिश्रमिकका रूपमा मासिक पन्ध्र सय र पारवहन खर्च चार सय गरी जम्मा उन्नाइस सय प्राप्त गर्न थालेँ। २०५१ सालमा नेकपा एमालेको सरकार बन्यो। अघिल्ला करार नियुक्तिहरूलाई निरन्तरता नदिँदा एक वर्षको रेडियो पत्रकारिता यात्राबाट म बाहिरिएँ।

रेडियोमा एक वर्ष काम गरेको परिणामबाट मैले जुन सामाजिक सम्बोधन पाएँ, जुन प्रचारप्रसार पाएँ त्यसबाट मेरो राष्ट्रव्यापी पहिचान बन्न अत्यन्त सहज भएछ। पहाड, मधेश, हिमाल, तराई सबैतिर एकैसाथ सुनिने जम्मा यही त एउटा सञ्चारमाध्यम थियो। त्यसपछि मलाई साहित्यकार

कृष्ण धरावासी बनेर चिनिन अरू समकालीन साथीहरूलाई भन्दा कता हो कता सजिलो हुँदै गयो । यसको सबैभन्दा ताजा उदाहरण बनेको थियो दाहाल यज्ञनिधिले साहित्य संसार कार्यक्रममा पढेको मेरो निबन्ध नारीभित्र त्यस्तो के छ हजुर ! त्यो निबन्ध रेडियोमा लगातार आठ पल्ट प्रसारण भयो । देश विदेश सबैतिर अत्यन्तै लोकप्रिय भएको त्यस निबन्धको प्रसारणपछि नै म खासमा निबन्धकारमा स्थापित भएँ । २०५३ सालमा नेपाल प्रज्ञा प्रतिष्ठानले छापेको यही पुस्तकलाई उत्तमशान्ति पुरस्कार पनि प्राप्त भएको थियो ।

रेडियो संवाददाताका रूपमा मेरो विशेष पहिचानपछि केन्द्रका पत्रिकाहरूको आँखामा म पर्दै गएँ । गोरखापत्र, नेपाल समाचारपत्र, कान्तिपुर, स्पेसटाइम आदिहरूमा कतै नियमित तथा कतै विशेष विचारलेखकका रूपमा प्रकाशित हुन थाले । यसबाट ममा कुनै पनि समसामयिक सन्दर्भमाथि विश्लेषण गर्ने अभ्यास बढ्न थाल्यो । कविता लेख्न मन पराउने म अब लेख, निबन्ध, समालोचना, कथा, उपन्यासतिर उक्लिन थालेको थिएँ ।

माओवादी जनयुद्ध सुरु भएपछि जिल्लाका कैयौँ पत्रपत्रिकाहरू औपचारिक मात्र हुन थाले । तिनमा छापिने विषयहरू पनि पञ्चायत कालमा प्रशासनको डरले चाउरिएका जस्तै हुन थाले । सम्पादकहरूले हरेक स्तम्भको सिरानमा यहाँ प्रकाशित विचारमा लेखक आफैँ जवाफदेही रहनेछन् भन्ने छाप्थे । म आफ्नो लेखनमा विचार राख्न अलिक कठोर नै हुन्थेँ तर कहिल्यै पनि कसैले त्यसबारेमा कुनै गुनासो वा धम्की दिएनन् । वास्तवमा सम्पादकहरू आवश्यकताभन्दा बढी डराएका हुन्थे ।

२०५९ साल असोजमा झापाकै पहिलो एफएमका रूपमा विर्तामोडमा कञ्चनजङ्घा एफएम सुरु भयो । प्रबन्ध निर्देशक चन्द्र भण्डारी रहेको त्यसमा प्रतिष्ठित समाजसेवी, व्यापारी र बुद्धिजीवीहरूको सहभागिता थियो । म पनि यसैमा आबद्ध भएँ । हप्ताको दुई पल्ट प्रसारण गर्ने गरी हाम्रो साहित्य नामको कार्यक्रम सुरु गरेँ । यसमा सहयोगी थिइन् लीला अनमोल । यो कार्यक्रम लगातार पाँच वर्ष चलाएँ ।

२०६२ सालमा राधा उपन्यासले मदन पुरस्कार पाएपछि मेरो जागिर मुख्य कार्यालय काठमाडौँमा सरुवा भयो । लीला अनमोललाई त्यो कार्यक्रम जिम्मा लगाएर राजधानी पसेँ । काठमाडौँ आएपछि भरत भुर्तेलले सञ्चालन गरिरहेको क्यापिटल एफ एममा सम्लग्न भएर पुस्तक संसार कार्यक्रम सुरु गरेँ । यसमा सहयोगीका रूपमा थिइन् तुलसा पाठक । यो कार्यक्रम पनि दुई वर्ष चलाई तुलसालाई नै जिम्मा लगाएँ ।

मुख्य कार्यालयबाट नियमित रूपमा प्रकाशित हुन्थ्यो समष्टि साहित्यिक द्वैमासिक । मलाई त्यही पत्रिकाको सम्पादन गर्ने जिम्मेदारी थियो । यो पत्रिकाको चार वर्ष कार्यकारी सम्पादक भएर २०६७ सालमा जागिरबाट स्वेच्छिक अवकास लिई पूर्णकालीन लेखनमा गएँ । त्यसपछि पनि पत्रकारिताको तलतलले छोडेको रहेनछ । २०७५ भदौदेखि २०७७ भदौसम्म ठाकुर बेलबासेको अनुरोधमा दुई वर्ष लीलाबोध कार्यक्रम सञ्चालन गरेँ । यसबाट करिब एक सय चौबीसवटा कार्यक्रम प्रसारण भए । ती सबैलाई पछि मैले आफ्नै युटयुब च्यानलमा अपलोड गरेको छु । पत्रकारिता यात्राको यहीबीचमा शरणार्थी, आधाबाटो, झोला, राधालगायत उनन्तीसवटा साहित्यिक कृति प्रकाशित भइसकेका छन् । सिर्जनाबाहेक विभिन्न प्रकारका अन्य एक्काइसवटा कृतिहरूको सम्पादन गरेँछु ।

रेडियो नेपालमा पारिश्रमिक पाउने गरी नियुक्ति पाएको एक वर्षको सेवाबाहेक पत्रकारितालाई मैले कहिल्यै पनि विशेष आयमूलक बनाइनँ । बैङ्कमा अलग्गै स्थायी जागिर भएकाले पनि मलाई त्यसको खाँचो परेन होला । तर सामान्यतया पछिल्लो कालमा पत्रपत्रिकामा लेखहरू लेखेबापत लेखकस्व भने पाउने गरेँ । त्यसबाट मलाई निकै आर्थिक टेवा पुगेको थियो । मूलतः साहित्यकार भनेर चिनिए पनि साहित्य नपढ्नेहरूले पत्रकार नै भनेर चिन्थे र आज पनि चिन्ने गर्छन् ।

पत्रकारिता भनेको स्वस्थ मानिसमा बगिरहेको रगत जत्तिकै महत्त्वपूर्ण हुन्छ तात्कालिक समाज र राज्यका लागि । समग्र देश नै आफ्ना आँखा र कान रेडियो र अखबारमा ओच्छ्याएर बसेको हुन्छ हरेक क्षण । पत्रकारिता नहुनु भनेको चेतनाका समग्र ढोकाहरू बन्द हुनु हो । निरङ्कुशता र तानाशाहीको साम्राज्य स्थापित हुनु हो । अत्याचारको आकाशमा कोलाहलको मौनता स्थापित हुनु हो ।

प्रजातन्त्र, मानव अधिकार र सामाजिक न्यायको आकाशमा हरेक बिहान झुल्किने घाम भनेकै पत्रकारिता हो । यो हरेक कमजोरहरूको जिब्रो हो । हरेक सूचनाको संवाहक हो । यो सबै काल र युगमा हरेक सत्ताको प्रतिपक्ष हो । त्यसैले जनताको आवाज हो ।

वल्लो बारुदको थुप्रोमाथि उभिएर पल्लो युद्धमोर्चाको दृश्य खिचिरहने, सातपत्रमुनि दबाइएको रहस्यको बाकस खोतलेर निकाल्ने, षड्यन्त्रका डरलाग्दा वाटर गेट काण्डहरूलाई खुलासा गर्ने, यो मानवचेतनाको सूर्य हो ।

म ती छायाकार, संवाददाता र सम्पादकहरूलाई नमन गर्छु, जसले अत्यन्त थोरै पारिश्रमिकमा हरेक क्षण आफ्नो प्राणलाई सङ्कटमा हालेर जुधिरहेका हुन्छन् । सुरुमा रहरले लागे होलान् अब यो उनको प्रतिष्ठा र लत बनेको छ ।

मैले त सुविधाको पत्रकारिता गरेको थिएँ, जीविकाकै लागि पत्रकारिता गर्नेहरूको अवकाश जीवन देखेर मलाई आज पनि विरक्त लाग्छ । ■

# समाचार पत्रकारिता र साहित्य






◆ प्रमोद प्रधान



वास्तवमा समाचार पत्रकारिताको उद्देश्य भनेको सर्वसाधारणलाई देशविदेशका समाचार, जानकारी, सूचनाहरू दिनु नै हो । तर त्यससँगसँगै साहित्यका विभिन्न विधाका रचनाहरू समय-समयमा दिएर समाचारपत्रहरूले पनि साहित्यको उत्थानमा योगदान गरेको देखिन्छ । यसक्रममा नामै लिनुपर्दा गोरखापत्रको योगदान यस दृष्टिले उल्लेखनीय, उदाहरणीय र ऐतिहासिक छ भन्दा अत्युक्ति हुँदैन ।



वास्तवमा पत्रकारिता र साहित्यबीचको सम्बन्ध अन्योन्याश्रित रहेको छ । पत्रकारिताका माध्यमबाट नै साहित्यिक सिर्जनाहरू पाठकसमक्ष पुग्छन् भने साहित्यिक रचनाहरूले पत्रकारितालाई अघि बढाउन सहयोग पुऱ्याउने यथार्थलाई हामी सबैले बुझेकै छौं । यी दुईबीचको सम्बन्ध हेर्न हामीले इतिहासतिर नियाल्नुपर्ने हुन्छ ।

नेपालमा पत्रकारिताको इतिहास काठमाडौँबाट मासिक पत्रिकाका रूपमा सुधासागरको प्रकाशनसँगै सुरु भएको देखिन्छ । तर पत्रकारिता सुरु हुनुअघि यसका लागि आधारभूत केही कुरा आवश्यक पर्छन् र ती आधारभूत कुराको उपलब्धतापछि मात्र पत्रकारितालाई अघि बढाउन सकिन्छ । यसरी हेर्दा पहिलो कुरा त शैक्षिक चेतना र दोस्रो कुरा, मुद्रण प्रविधिको उपलब्धता नै हो । पहिलो राणा प्रधानमन्त्री जङ्गबहादुर राणाले बेलायतको भ्रमण गरेर फर्कने क्रममा वि.सं. १९०८ मा आफूसँगै एउटा हाते प्रेस ल्याएका थिए, जुन नेपालको इतिहासमा 'गिद्धे प्रेस'को नामबाट चर्चित छ । यही प्रेस नै नेपालको पहिलो छापाखाना हो र यहीँबाटै नेपालमा मुद्रण प्रविधि भित्रिएको हो । यसपछि क्रमशः मनोरञ्जन प्रेस, नारायणहिटी छापाखाना, पाशुपत प्रेस, ढोकाटोल प्रेस, नारायण प्रेस आदि छापाखाना क्रमशः स्थापना भएका देखिन्छन् । यस प्रकार मुद्रण प्रविधि भित्रिएसँगै नेपालमा पत्रकारिता प्रारम्भ भएको र पत्रकारितामार्फत साहित्यिक सिर्जनाहरू पाठकसमक्ष पुग्ने गरेको इतिहास रहेको छ ।

नेपालमा छापा पत्रकारितालाई दुई भागमा वर्गीकरण गरेर हेर्न सकिन्छ : पहिलो, समाचार पत्रकारिता र दोस्रो, साहित्यिक पत्रकारिता । यी दुईमध्ये साहित्यिक पत्रकारिताको उद्देश्य नै साहित्यिक सिर्जनाहरूलाई पाठकसमक्ष पुऱ्याउनु हो भने समाचार पत्रकारिताको उद्देश्य साहित्यिक सिर्जनाहरूभन्दा पनि समाचारलाई पाठकसमक्ष पुऱ्याएर सुसूचित गर्नु हो । त्यस हिसाबले दुवैको उद्देश्य नै फरक रहेका छन् । त्यसैले उद्देश्य नै फरक भएकाले साहित्यिक रचनाको प्रस्तुतिका दृष्टिकोणले साहित्यिक पत्रकारिताले साहित्यको विकास, विस्तार र प्रवर्धनमा पुऱ्याएको वा पुऱ्याउँदै आएको योगदानको तुलनामा समाचार पत्रकारिताले साहित्यिक क्षेत्रमा पुऱ्याएको वा पुऱ्याउन सक्ने योगदान कम हुनु स्वाभाविकै हो ।

**समाचार पत्रकारिता**

वास्तवमा समाचार पत्रकारिताको उद्देश्य भनेको सर्वसाधारणलाई देशविदेशका समाचार, जानकारी, सूचनाहरू दिनु नै हो । तर त्यससँगसँगै साहित्यका विभिन्न विधाका रचनाहरू समय-समयमा दिएर समाचारपत्रहरूले पनि साहित्यको उत्थानमा योगदान गरेको देखिन्छ । यसक्रममा नामै लिनुपर्दा गोरखापत्रको योगदान यस दृष्टिले उल्लेखनीय, उदाहरणीय र ऐतिहासिक छ भन्दा अत्युक्ति हुँदैन । वि.सं. १९५८ वैशाख २४ गते साप्ताहिक प्रकाशनका रूपमा गोर्खापत्रको प्रकाशन प्रारम्भ भएको थियो । पछि साताको



गोरखापत्रबाहेक त्यसबेला नेपालभित्रबाट अन्य समाचारपत्र निस्कन सक्ने वातावरण नै थिएन। नेपालबाहिर दार्जिलिङबाट भने गोर्खे खबर कागजको मासिक समाचार पत्रिकाको प्रकाशन वि.सं. १९५८ मै सुरु भएको पाइन्छ। क्रिस्चियन मिसिनरीबाट इसाई धर्मको प्रचारहेतु सुरु गरिएको भए पनि यस पत्रिकाले नेपाली भाषा र साहित्यको विकास एवं विस्तारमा भने थेरथोर योगदान दिएको तथ्यलाई नकार्न सकिँदैन।



दुई पटक, चार पटक हुँदै यो पत्रिका नेपालकै पहिलो दैनिक समाचारपत्रका रूपमा विकसित र विस्तारित भई आजसम्म यथावत् रूपमा प्रकाशित हुँदै आएको छ। यस हिसाबले यसको आयु १२२ वर्ष पुगेको छ। यो आफैँमा एक 'रेकर्ड' हो। गोरखापत्रले नेपाली साहित्यका विभिन्न विधामा दिएको योगदान अत्यन्त उल्लेखनीय रहेको छ। वास्तवमा भन्ने हो भने नेपाली साहित्यका कतिपय विधाको प्रारम्भकालीन रचनाहरू गोरखापत्रमै प्रकाशित भएको देखिन्छ। गोरखापत्रको विधागत योगदानलाई हेर्न सकिन्छ :

**निबन्ध**

गोरखापत्रको प्रकाशन सुरु भएपछि पत्रिकालाई फुटकर रचनाको आवश्यकता पर्नु स्वाभाविक थियो। त्यसै क्रममा पत्रिकाको आवश्यकतालाई परिपूर्ति गर्ने क्रममा विभिन्न लेखकका निबन्धात्मक रचनाहरू यस पत्रिकामा प्रकाशित भएका पाइन्छन्। वरिष्ठ समालोचक प्राडा दयाराम श्रेष्ठका अनुसार पनि मौलिक नेपाली निबन्धको परम्परा गोरखापत्रबाटै सुरु भएको हो। (श्रेष्ठ, २०५६ : १२३) तर त्यतिबेला छापिएका धेरै रचनाहरूमा रचनाकारको नाम भने देखिँदैनन्। त्यसबेला गोरखापत्रका प्रकाशित केही बेनामी निबन्धहरूका शीर्षक यस्ता छन् : अघि मूर्ख पछि बुद्धिमान् (१९५९), नैराश्य परमं सुखम् (१९५९), कृषि वृत्तान्त (१९५९), हिन्दुस्थान सुवीवरहरूको इतिहास (१९६०), वसन्तवर्णनम् (१९६१), शिक्षोपदेश (१९६६), निद्रा (१९६६), मातृभाषाको उन्नति (१९६६), बोलीको संस्कार (१९६६), श्रीवसन्तपञ्चमी (१९६६), दूधको गुण-अवगुण (१९६७), दुःख र सुख (१९६७), धन र त्यसको उपयोग (१९६७), व्यापार (१९६७), मासु (१९६७), कर्महेतु (१९६८), मलाइ (१९६८), विज्ञापनशिल्प (१९७०), बफादारी (१९७०), शिशुशिक्षा (१९७०), मनको नाप (१९६०) र हावा (१९७३)। गोरखापत्रमा समय, प्रभात, हरदम याद राख्नुपर्ने कुरा, कर्तव्य, मितव्यय र कविताको फल शीर्षकका निबन्धहरू बेनामी छापिएका भए पनि ती निबन्धहरू शम्भुप्रसाद ढुङ्गेलको भएको र ती वि.सं. १९७६ मा छापिएको उनीबारे विशेष खोज अनुसन्धान गर्ने घटराज भट्टराईको ठहर देखिन्छ। बालकृष्ण सम (१९५९-२०३८) को भाषा शीर्षकको निबन्ध पनि गोरखापत्र (१९९८) मै प्रकाशित भएको थियो। गोरखापत्रले यात्रानिबन्धतर्फ पनि योगदान गरेको पाइन्छ। वि.सं. १९७३ तिरै जापानको अपूर्व स्वागत र काश्मीरयात्रा शीर्षकका दुई यात्रावर्णन गोरखापत्रमा प्रकाशित भएका थिए। तर तिनमा लेखकको नाम भने उल्लेख छैनन्।

**कथा**

गोरखापत्रले नेपाली कथाको विकासमा पुऱ्याएको योगदान पनि कम छैन। वि.सं. १९५८ देखि १९९० बीचको समयमा यस पत्रिकामा लामा छोटा गरी थुप्रै कथा प्रकाशित भएको अनुसन्धानले देखाएको छ। त्यस्ता कथाहरूमा प्राचीन प्रपञ्च (१९६२), यमपञ्चक प्रपञ्च (१९६३), स्फटिकचन्द्र (१९६५), प्रत्यागमन (१९६७), माला (१९६८), दालिमा (१९६८), भाग्यवती (१९६८), सज्जनसिंह (१९६८), सुकुलगुन्डाको कहानी (१९६९), काला पहाड (१९६९), हिराको औँठी (१९७०), मानभञ्जन (१९७०), अशिक्षिता जानकी (१९७२), हरायाको औँठी (१९७२), कृतघ्न सुरेश (१९७२), हृदयपरीक्षा (१९७२), बूढाको विवाह (१९८४), संस्कार र सङ्गत (१९७४), उपदेशको अनौठो फल (१९७७) र आदर्श पतिपत्नी (१९७८) लगायत थुप्रै कथाहरू प्रकाशित भएका छन्। सामाजिक नीतिचेतनाले युक्त यी कथाहरूमा समाजका विकृति र विसङ्गतिको चित्रण गर्दै आदर्श समाजको निर्माणका लागि बाटो देखाइएको छ। यसका अतिरिक्त गोरखापत्रमा सामाजिक, धार्मिक-पौराणिक, मनोरञ्जनात्मक कथाहरू पनि प्रशस्त प्रकाशित भएको पाइन्छ। (श्रेष्ठ, २०७६ : ७४२)

**उपन्यास**

वि.सं. १९९० सम्मको अवधिमा गोरखापत्रमा एघारवटा उपन्यास धारावाहिक रूपमा छापिएको देखिन्छ। मनोरञ्जन र शिक्षाप्रद ती उपन्यासहरूले नेपाली भाषामा उपन्यास लेखनका लागि महत्त्वपूर्ण आधारशिला खडा गरिदिएको देखिन्छ। त्यस्ता उपन्यासहरूमा कथा, वीर मालोजी भोसले, नरदेव, नौलाखा हार, कर्मको गति, माया नाम्नी नदीका तीरको कायापुरजस्ता उपन्यास उल्लेखनीय रहेको डा. चन्द्रमान श्रेष्ठको विश्लेषण छ (श्रेष्ठ, २०७६ : ७९९)। यसैगरी गोरखापत्रमा कविता,

नाटक, जीवनी र अन्य विविध विषयक रचना पनि प्रशस्त छापिएका छन् ।

गोरखापत्रबाहेक त्यसबेला नेपालभित्रबाट अन्य समाचारपत्र निस्कन सक्ने वातावरण नै थिएन । नेपालबाहिर दार्जिलिङबाट भने गोर्खे खबर कागजको मासिक समाचार पत्रिकाको प्रकाशन वि.सं. १९५८ मै सुरु भएको पाइन्छ । क्रिस्चियन मिसिनरीबाट इसाई धर्मको प्रचारहेतु सुरु गरिएको भए पनि यस पत्रिकाले नेपाली भाषा र साहित्यको विकास एवं विस्तारमा भने धेरथोर योगदान दिएको तथ्यलाई नकार्न सकिँदैन । विशेषतः वि.सं. २००७ भन्दा अघिको कालखण्डमा प्रमुख रूपमा गोरखापत्रले नेपाली भाषा साहित्यको विकासमा पुऱ्याएको योगदान अविस्मरणीय रहेको छ भन्दा अत्युक्ति हुँदैन ।

वि.सं २००७ को राजनीतिक परिवर्तनपछि भने देशमा खुकुलो वातावरण आएको र त्यसको प्रभाव सबै क्षेत्रमा परेको देखिन्छ । यसै परिप्रेक्ष्यमा समाचारपत्रिकाहरूको सङ्ख्या क्रमशः बढ्दै गएको र ती पत्रिकाहरूले पनि केही साहित्यिक रचनाहरू प्रकाशन गर्ने गरेको तथ्यलाई पनि हामीले बिर्सनु हुँदैन । विशेषगरी २०४६ सालको राजनीतिक परिवर्तनपछि भने ब्रोडसिट आकारका दैनिक पत्रिकाहरूको प्रकाशन उल्लेख्य रूपमा हुन थालेको देखिन्छ । कान्तिपुर, आजको समाचारपत्र (पछि नेपाल समाचारपत्र), नागरिक, अन्नपूर्ण पोस्ट आदि दैनिक पत्रिकाहरूले साताको एक दिन शनिबार साहित्यिक सामग्रीहरू प्रस्तुत गर्दै आएका छन् ।

त्यस्ता सामग्रीहरूको आफ्नै किसिमको विशिष्ट महत्त्व रहेको छ । विचारको विविधतासहित छापिने त्यस्ता सामग्रीहरूले नेपाली साहित्यलाई बदलिँदो परिवेशअनुरूप नै विविधता प्रदान गर्ने कार्यमा योगदान पुऱ्याएको छ । यी सबैको योगदानका बारेमा छुट्टै विशेष अध्ययन र अनुसन्धानको खाँचो भने देखिएको छ ।

**सन्दर्भसामग्री**


नेपाल, किशोर (२०५५), नेपाली पत्रकारिताको विकासक्रम (अनुसन्धान), काठमाडौँ : प्रेस काउन्सिल नेपाल ।

श्रेष्ठ, दयाराम र शर्मा, मोहनराज (२०५६), नेपाली साहित्यको सङ्क्षिप्त इतिहास, ललितपुर : साझा प्रकाशन, पाँचौँ संस्करण ।

श्रेष्ठ, चन्द्रमान (२०७६), माध्यमिककालीन नेपाली गद्याख्यान (लेख), जगदम्बा नेपाली साहित्यको बृहत् इतिहास, दोस्रो ठेली, ललितपुर : कमलमणि प्रकाशन । ■


# गजल




◆ सुविद गुरागाईं


हाम्रा हजुरका खिलाफ कोही नआउनू ।
मर्जी जे हुन्छ होस्, केही बात नलाउनू ।

रैती, कमैया, नोकर, बाँधा, गाई–गोठालो,
हुन्छ मञ्जुर छ मलाई जे–जे बनाउनू ।

लाखे, पुतली, नटुवा, झुम्रा वा मारुनी,
बन्न तयारी छु हजुर हुन्छ नचाउनू ।

कोशी, अक्करे, पहरो, मरु हो या चुचुरो,
सारा कुल्चेर हिन्छु हजुर हुकुम बताउनू । ■



# छापासञ्चारको मोह



संस्मरण


◆ शार्दूल भट्टराई


बहुदलीय व्यवस्थाको स्थापनापछि साहित्य र छापासञ्चारको सम्बन्ध अझै बलियो र व्यापक बन्यो । छापामाध्यमहरू वाक् तथा प्रकाशन स्वतन्त्रताको प्राप्तिसँगै आफ्ना प्रकाशनहरूलाई विविधतायुक्त बनाउन पुगे । साहित्यलाई समेट्ने नाममा एउटा एउटा कविता मात्रै प्रकाशन गर्दै आएका पत्रिकाहरू कथा, निबन्ध, साहित्य संवाद, पुस्तक समीक्षा, साहित्यिक कार्यक्रमसम्बन्धी समाचार आदिलाई समेत समेट्न थाले ।



कुनै समय थियो, समाचारपत्र (छापासञ्चारमाध्यम)हरू साहित्यमा खासै चासो राख्दैनथे । चासो राखिहाले पनि साहित्यिक रचनालाई समाचारपत्रमा खुसी मनले स्थान दिँदैनथे । यसको अर्थ ती पत्रपत्रिकाहरू साहित्यलाई महत्त्व दिँदैनथे । तर आज छापासञ्चारका कुनै त्यस्ता माध्यम छैनन्, जसले साहित्यलाई बेवास्ता गरून् । कतिपयले साहित्यलाई राम्रै महत्त्व दिएका छन् भने कतिले थोरै भए पनि स्थान दिने गरेका छन् ।

चार पाँच दशकअगाडिसम्म सार्वजनिक सञ्चारमाध्यम भनेका छापा र रेडियो मात्र थिए । टेलिभिजनको नामसम्म पनि नेपालमा प्रचलित थिएन । सुन्नका लागि रेडियोको आकर्षण थियो भने पढ्नका लागि पत्रपत्रिकाको आकर्षण । रेडियो नेपालको साहित्यिक कार्यक्रमबाट कविता वा कथा प्रसारण हुने वा कुनै समाचारपत्रमा कविता वा अन्य साहित्यिक रचना प्रकाशित हुने कुरा निकै ठूलो मानिन्थ्यो । ती माध्यमप्रति लेखक/साहित्यकारहरूकै पनि औधी मोह देखिन्थ्यो ।

त्यसबेला प्रेस स्वतन्त्रता थिएन । रेडियो नेपाल र गोरखापत्र सरकारी सञ्चारमाध्यम भएकाले पूर्णतः सरकारी निर्देशनमै चल्थे । तिनबाट कुनै पनि खालको विरोध वा विद्रोहको कुरा सम्भव थिएन । तैपनि साहित्यलाई महत्त्व दिएर केहीनकेही स्थान दिने माध्यमका रूपमा ती दुवैको नाम आउने गरेको छ । त्यसबाहेकका अन्य छापामाध्यमले साहित्यलाई त्यतिधेरै महत्त्व दिएको पाइँदैन । विरोध र विद्रोहका आवाजलाई सरकारी सञ्चारमाध्यमले स्थान नदिने भएकाले लेखक/साहित्यकारहरू अन्य निजी छापामाध्यमतिर लाग्थे । तर तिनीहरू पनि सेन्सरसिपको डरले विद्रोही भावका रचनालाई स्थान दिन त्यति सजिलै मान्दैनथे ।

प्रसङ्ग छापामाध्यमको हो । पञ्चायती शासनकालमा साहित्यलाई स्थान दिने दैनिक/साप्ताहिक छापामाध्यममा विशेष रूपले गोरखापत्र दैनिकलाई लिने गरिएको छ । त्यसअवधिमा गोरखापत्रले स्थान दिने साहित्यकाकारको पङ्क्ति पनि निश्चित सीमाभित्र थियो । सबैका रचना त्यसमा अट्दैनथे । त्यसबाहेकका दैनिक/साप्ताहिक छापामाध्यमहरूको भूमिकालाई समान रूपमा लिन मिल्दैन । कुनैले साहित्यलाई राम्रै स्थान दिएको देखिन्छ भने कुनैले बेवास्ता गरेको पनि भेटिन्छ ।

०००

कविता लेख्ने रुचि त स्कुल पढ्दै थियो । स्कुलको पढाइ सकिएपछि त्यो रुचि झनै बढेको थियो । तर लेख्यो, नराम्रो लागे फाल्यो । अथवा लेख्यो, राम्रो लागे राख्यो । कहाँ छाप्ने, कसरी छाप्ने भन्ने कुनै कुरा थाहा थिएन ।

एसएलसीको जाँच दिएर काठमाडौँमा भौँतारिने क्रममा मलाई केही पुस्तकालयमा छिर्ने मौका मिल्यो । चाबहिलको मित्र वाचनालय नै हो जहाँ मैले जीवनमै पहिलो पटक समाचारपत्र देखेँ । वाचनालयमा छिरेको पहिलो दिनमै मैले त्यहाँ ती तीनवटा साप्ताहिक पत्रिका देखेको थिएँ । ती थिए गोविन्द वियोगी सम्पादक रहेको मातृभूमि साप्ताहिक, मदनमणि दीक्षित सम्पादक रहेको समीक्षा साप्ताहिक र रमेशनाथ पाण्डे सम्पादक रहेको नयाँ सन्देश साप्ताहिक ।

साँझपख खुल्ने मित्र वाचनालयमा छिर्ने पाठकमध्ये म पनि एउटा नियमित पाठक बनेँ । त्यसबेला मातृभूमि मङ्गलबार र समीक्षा तथा नयाँ सन्देश शुक्रबार

प्रकाशित हुन्थे । ती साप्ताहिक पत्रिकासँगै मैले साहित्यिक पत्रिका मधुपर्क र रूपरेखा पनि पहिलो पटक त्यहीँ देखेको थिएँ । ती दुवै साहित्यिक पत्रिका पढ्ने अवसर पनि त्यहीँ पाएको थिएँ ।

त्यसपछि म अलि ठूला पुस्तकालयहरू पनि खोज्दै हिँडेँ । त्यसक्रममा म नयाँ सडकको भारतीय पुस्तकालय पनि पुगेँ । त्यहाँ भारतीय दैनिक पत्रिका, मासिक म्यागेजिनहरूसँगै मैले नेपाली पत्रपत्रिका पनि देखेँ । त्यहाँ पनि गोरखापत्र, दी राइजिङ नेपाल, मातृभूमि, समीक्षा, नयाँ सन्देशजस्ता पत्रिका देखेँ । त्यसपछि म वसन्तपुरको सोभियत मैत्री पुस्तकालयसम्म पनि पुगेँ । सोभियतभूमि जस्ता रुसी पत्रिका सँगै नेपाली पत्रपत्रिकाहरू त्यहाँ पनि देखेँ । जमलस्थित नेपाल सोभियत सांस्कृतिक सङ्घमा पनि पत्रपत्रिकाहरू अध्ययन गर्ने सुविधा थियो । म त्यहाँ पनि जान थालेँ ।

साप्ताहिक पत्रिकामध्ये समीक्षाका हरेकजसो अङ्कमा साहित्यसम्बन्धी टिप्पणी, समाचार वा एउटासम्म रचना पनि छापिएको देखिन्थ्यो । नयाँ सन्देशमा प्रेमसम्बन्धी रचना छापिएका हुन्थे तर साहित्यिक स्तरका हिसाबले त्यति गतिला हुँदैनथे । मलाई स्तरीय र आकर्षक लाग्ने पत्रिका थियो मातृभूमि । त्यसमा यदाकदा साहित्यसम्बन्धी समाचार वा टीकाटिप्पणी भए पनि साहित्यिक रचना प्रकाशित भएको देखिन्नथ्यो ।

मलाई ती तीनवटै पत्रिकामा कविता प्रकाशित गर्नपाए हुन्थ्यो भन्ने लाग्यो । तर आफ्नो पहुँच कतै पनि थिएन । त्यसैले तीनवटै पत्रिकामा एउटा एउटा कविता छोड्ने विचार गरेँ । मैतीदेवीमा रहेको नयाँ सन्देशको कार्यालयमा गएर प्रेमसम्बन्धी एउटा कविता छोडेँ । प्युखाबाट कालिकास्थानमा सरेको समीक्षा कार्यालयमा गएर अर्को कविता छोडेँ । त्यसपछि घण्टाघरमा रहेको मातृभूमि कार्यालयमा गएर अर्को कविता छोडेँ । तर ती तीनवटै पत्रिकामा मेरा कविता छापिएनन् । छापामाध्यमसँग जोडिने मेरो मोह पूरा हुन सकेन ।

०००

तीन वर्षपछि म त्रिचन्द्र कलेजको रात्रिसत्रमा बिउ पढ्न थालेँ । एक दिन त्यहीँ विद्यार्थी–विद्यार्थीबीच ठूलै झगडा भयो । त्यो पञ्चायती व्यवस्थाविरोधी अनेरास्वविवियु र पञ्चायती व्यवस्थाको पक्षधर राष्ट्रवादी स्वतन्त्र विद्यार्थी मण्डल (जसलाई मण्डले भनिन्थ्यो)का विद्यार्थीबीचको झगडा थियो । दुई पक्षबीच पिटापिट, मारामार । सत्तापक्षका विद्यार्थीको आक्रमणबाट पीडित बनेका अनेरास्ववियुका केही साथीले उक्त घटनाको समाचार प्रकाशन गर्ने जिम्मा मलाई दिए । म अलमलमा परेँ– कसरी, कहाँ लगेर छाप्ने होला यो समाचार ? त्यही अलमलका बीच अचानक सम्झिएँ– मातृभूमि साप्ताहिक !

त्यतिखेर निकै चल्तीको र सबैले राम्रै मान्ने पत्रिका थियो मातृभूमि । त्यस साप्ताहिकको कार्यालय घण्टाघरनजिकै थियो । त्रिचन्द्र कलेजको ठीक अगाडि । मैले उक्त समाचार मातृभूमि साप्ताहिकमा दिने विचार गरेँ । पीडित पक्षका विद्यार्थीहरूले निकालेको विज्ञप्तिलाई समाचारको शैलीमा तयार पारेँ । समाचारको शीर्षक 'मण्डले गुण्डागर्दीको प्रतिरोध गरिने' भन्ने राखेँ । म विज्ञप्तिसहित आफूले बनाएको समाचार लिएर मातृभूमि कार्यालयमा पुगेँ । सम्पादक गोविन्द वियोगीलाई भेटेँ । मैले लगेको समाचार हेरिसकेपछि मुसुक्क हाँस्दै गोविन्द वियोगीले भने– 'यस्तो समाचार छाप्यो कि प्रशासनले दुःख दिन्छ । तैपनि छोडेर जाऊ, हेरौँला ।'

त्यसको चार दिनपछि मातृभूमि निस्कियो । त्यसमा मैले दिएको समाचार पनि प्रकाशित भएछ । शीर्षकमा समेत कुनै परिवर्तन गरिएजस्तो लागेन । त्रिचन्द्र क्याम्पसका मण्डलेहरूलाई नङ्ग्याउने कुरामा त्यो समाचार क्याम्पसभित्र निकै चर्चाको विषय बन्यो । मण्डलेहरूको गुण्डागर्दी र भ्रष्टताको पोल खोल्ने काम त्यो समाचारले गरेको थियो । म साहित्यमा रुचि राख्ने मान्छे, आफूले बनाएको पहिलो समाचार जस्ताको तस्तै छापिएपछि त्यस्ता समाचारपत्रहरूमा साहित्यिक रचना छाप्ने मेरो पहिलेको मोह जागृत हुन पुगेको थियो ।

सात दिनपछि म फेरि एउटा कविता बोकेर मातृभूमि कार्यालयमा गएँ । सम्पादक गोविन्द वियोगीलाई भेटेँ । आफूले लेखेको समाचार प्रकाशित गरिदिएकोमा खुसी व्यक्त गरेँ । त्यस समाचारको प्रभाव राम्रै परेको कुरा क्याम्पस प्रशासनबाट थाहा पाएको उहाँ आफैँले बताउनुभयो । मैले मातृभूमिमा कविता प्रकाशन गर्ने रहर जागेको बताउँदै आफ्नो खल्तीबाट कविता झिकेर उहाँको अगाडि राखिदिएँ । तर उहाँले 'कविता होइन, साहित्यिक समाचार र समसामयिक टिप्पणीहरू भए मात्र छापिने' कुरो गर्नुभयो । म जति उत्साहित भएर मातृभूमिको कार्यालयमा छिरेको थिएँ, त्यसको उल्टो निराश भएर बाहिर निस्किएँ ।

त्यसको केही समयपछि मित्र वाचनालयले एउटा साहित्यिक कार्यक्रमको आयोजना गरेको थियो । त्यो हृदयचन्द्रसिंह प्रधानको जन्मजयन्तीसँगै कविता वाचनको कार्यक्रम थियो । त्यससम्बन्धी विस्तृत समाचार बनाएर मैले मातृभूमिलाई दिएँ । त्यसमा वक्ताहरूका सङ्क्षिप्त भनाइदेखि कविता वाचन गर्ने सबैको नामसमेत उल्लेख गरेको थिएँ । अलिअलि काटकुट गरेर त्यो समाचार छापियो । कविता नछापे पनि आफूले बनाएर दिएको साहित्यिक समाचारलाई स्थान दिएकोमा मलाई खुसी नै लाग्यो ।

समीक्षा साप्ताहिकका सम्पादक भने आफैँ साहित्यिक थिए । त्यसैले पनि होला समीक्षामा साहित्यिक रचना र साहित्यसम्बन्धी समीक्षा–टिप्पणीहरू आइरन्थे । मदनमणि आफैँ पनि आफ्नो स्तम्भ 'मेरो देश मेरो संसार'मा बेलाबेलामा

साहित्यिक चर्चाहरू गर्ने गर्थे ।

पञ्चायती शासनकालको उत्तरार्द्धतिर केही साप्ताहिक पत्रिका निकै चर्चित रहे । सत्ताविरोधी समाचार–विचारको सम्प्रेषणलाई महत्त्व दिएकाले पनि होला ती पत्रिका लोकप्रिय बनेका थिए । तिनको स्तर र लोकप्रियताकै कारण लेखक/साहित्यकारहरू पनि ती पत्रिकामा आफ्ना रचना प्रकाशित गर्ने मोह राख्थे । केही लेखक/साहित्यकारहरू त तिनका नियमित स्तम्भकार नै पनि थिए । उदाहरणका रूपमा मदनमणि दीक्षित, मोदनाथ प्रश्रित, पारिजात, ध्रुवचन्द्र गौतम, रमेश विकल, भैरव अर्याल, रोचक घिमिरे, केशवराज पिँडाली, विमल निभा, दाताराम शर्मा, पद्मरत्न तुलाधर, रामचन्द्र भट्टराई, रघु पन्त, नारायण ढकाल, राजव, हरि अधिकारी, किशोर नेपाल, श्यामल, शक्ति लम्साल, मल्ल के. सुन्दर, अग्निशिखा, हरिगोविन्द लुइँटेल, गोविन्द वर्तमान, मोहनविक्रम सिंह आदिलाई लिन सकिन्छ । यीमध्ये केही त दैनिक तथा साप्ताहिक पत्रिकाका सम्पादक नै थिए । जस्तै, मदनमणि दीक्षित, नारायण ढकाल, रघु पन्त, शक्ति लम्साल, रामचन्द्र भट्टराई, किशोर नेपाल, मल्ल के सुन्दर आदि ।

०००

आफ्नो कविता छपाउने रहर बोकेर म कालिमाटीस्थित दृष्टि कार्यालयमा पुग्दा त्यहाँ खासै चहलपहल थिएन । म कोठाभित्र छिरेँ । सामान्य खालको कोठा । नजिकैको ट्वाइलेटबाट दूषित गन्ध आइरहेको थियो । कोठामा काठका दुईवटा सामान्य टेबुल र चारवटा काठकै मेच थिए । भित्तामा एउटा क्यालेन्डर झुन्ड्याइएको थियो । भुइँतिर कागजका टुक्राहरू छरिएका थिए । भुइँ पनि बढार्न बाँकी रहेजस्तो । भित्तातिर फोहोरका टाटा । टेबुलमा पनि टाटैटाटा । दृष्टिको त्यतिबेलाको सम्पादकीय कक्षको दृश्य यस्तै थियो ।

दृष्टिका सम्पादक थिए रघु पन्त । म उनलाई भेट्नका लागि दृष्टि कार्यालयमा छिरेको थिएँ । त्यहाँ विष्णु प्रभात, शम्भु श्रेष्ठ, गोपाल गुरागाईं, भीमसेन राजबाहकलगायतसँग भेट भयो ।

'ल, आउने अङ्कमा देब्रेकुनामा व्यङ्ग्य तपाईं लेख्नोस् त !' दृष्टिको सम्पादकीय कोठामा पस्ने बित्तिकै रघु पन्तले भने । निरङ्कुश पञ्चायती शासनकालमा विपक्षी; त्यसमा पनि वामपन्थी पत्रिकाका रूपमा चर्चित दृष्टिमा केही न केही लेख्नका लागि म लालायित त थिएँ नै । त्यही लालसा पूरा गर्न सकिन्छ कि भनेरै म खल्तीमा कविता बोकेर त्यहाँ पुगेको थिएँ । आफूले लेखेर लगेको कुरो छापिदिनोस् भन्नु र सम्पादकले नै लेख्नोस् भन्नुमा कति फरक छ कति । म पहिलो पटक सम्पादककै आग्रहमा लेख्न पाउँदा झनै खुसी बनेको थिएँ तर मेरा लागि लेख्ने कुरा चुनौती पनि थियो । चर्चित कवि/व्यङ्ग्यकार विमल निभाले लोकप्रिय बनाएको दृष्टिको अन्तिम पृष्ठको 'देब्रे कुना'मा व्यङ्ग्य लेखनको काम मेरा लागि चुनौतीरहित कुरा थिएन । विमल निभाले आउने अङ्कमा व्यङ्ग्य लेख्न नभ्याउने खबर गरेपछि सम्पादक पन्तले अन्य कुनै विकल्पको खोजी गरिरहेकै बेला म त्यहाँ पुगेको रहेछु ।

निरङ्कुश शासनको बर्बरताबीच त्यतिबेला देशभर, विशेषगरी काठमाडौँमा चक्कु (छुरी) कान्ड मच्चिएको थियो । चक्कु प्रहार गरेर मान्छे मार्ने, घाइते बनाउने र लुट्ने समूहबाट सबै त्रस्त थिए । यही घटनालाई विषय बनाएर मण्डलेतन्त्रको विरोधमा मैले व्यङ्ग्य लेखेँ । चक्कुलाई निरङ्कुशताको प्रतीक बनाएर लेखिएको त्यो व्यङ्ग्य पाठकका बीच रुचिकर नै रह्यो । मैले जीवनमा पहिलो पटक केही लेखेबापत धेरै मान्छेबाट प्रतिक्रिया पाएको थिएँ । सीमित पाठकमा पुग्ने साहित्यिक पत्रिकामा छापिएको रचना र देशभर, व्यापक पाठकका बीचमा पुग्ने चल्तीका समाचारपत्रमा छापिएको रचनाको पाठकीय प्रभावमा धेरै फरक पर्नेरहेछ । साहित्यिक स्तम्भलेखनका दृष्टिले छापासञ्चारसँगको पहिलो साक्षात्कार मेरा लागि निकै नै महत्त्वपूर्ण रहन पुग्यो । यसले छापासञ्चारमा साहित्यिक स्तम्भलेखनप्रति अभिप्रेरित गर्ने काम पनि गरेको थियो ।

०००

वि.सं. १९५८ मा साप्ताहिक रूपमा गोर्खापत्रको प्रकाशन सुरु भएको थियो । तर त्यसलाई पत्रिका प्रकाशनको आरम्भका रूपमा लिइए पनि पत्रकारिताको आरम्भका रूपमा लिइएको छैन । पत्रकारिताको आरम्भ २००७ सालको परिवर्तनपछि मात्र भएको मानिन्छ । २००७ सालदेखि २०१६ सालसम्म नेपाली छापा सञ्चारमाध्यमले अलिकति फस्टाउने मौका पाए पनि त्यसबीचमा पत्रपत्रिकाको प्रकाशनले खासै तीव्रता पाएको देखिँदैन । केही दैनिक/साप्ताहिक पत्रिका प्रकाशनमा आए पनि तिनले निरन्तरता पाउन सकेनन् ।

२०१७ सालमा बहुदलीय व्यवस्थालाई समाप्त गरेर निर्दलीय पञ्चायती व्यवस्था लादिएपछि पत्रपत्रिकाको प्रकाशन पनि सङ्कटमा पऱ्यो । स्वतन्त्र पत्रकारिताको कुरा तीस वर्षसम्म निषेधको अवस्थामा रह्यो । तथापि केही सङ्घर्षशील पत्रकारले अनेकौँ दुःखकष्ट र जेलनेल भोगेर भने पनि पत्रिका निकाल्ने काम गरे । नेपालको पत्रकारिताले बहुदलीय व्यवस्थाको पुनर्स्थापनापछि मात्र वाक् तथा प्रकाशन स्वतन्त्रतासहित स्वतन्त्र एवं व्यावसायिक पत्रकारिताको विकासमा अगाडि बढ्ने अवसर पाएको थियो ।

आवाज, जनता, हालखबर, समाज, कल्पना, दियालो, नेपाल पोस्ट आदि नामका दैनिक पत्रिकाहरू पञ्चायतीकालमा प्रकाशित भएका देखिन्छन् । ती दैनिक पत्रिका दीर्घकालसम्म चल्न भने सकेनन् । केही आफ्नै कारणले बन्द भए । केही सरकारको प्रतिबन्धमा परे । तथापि छोटो समयमै पनि तिनले नेपाली समाजको परिवर्तनमा समाचार, विचार र साहित्यका माध्यमबाट योगदान पुऱ्याउने

काम गरेका थिए। २००८ सालमा प्रकाशित आवाज भन्ने दैनिक पत्रिकामा साहित्यसम्बन्धी सामान्य चर्चा-टिप्पणीहरू प्रकाशित हुने गरेको बताइन्छ । गोपालदास श्रेष्ठले रमेशनाथ पाण्डेलाई सम्पादनको जिम्मेवारीमा राखेर २०१४ सालमा दैनिक जनता प्रकाशित गरेका थिए। त्यसमा पनि साहित्यसम्बन्धी टिप्पणीहरू प्रकाशित हुने गरेका त थिए तर यदाकदा मात्रै।

तारिणी कोइरालाको सम्पादनमा निस्किएको कल्पना दैनिक तत्कालीन राजनीतिक व्यवस्थाको विरोधमा अलि प्रखर थियो। उक्त दैनिकले साहित्यलाई यथोचित स्थान दिने गरेको थियो। कल्पना दैनिक बन्द गरिएपछि कोइरालाले दियालो दैनिकको सम्पादन गरेका थिए। त्यसमा पनि साहित्यलाई केही न केही स्थान दिने गरिएको थियो। मदनमणि दीक्षित र दाताराम शर्माको नेतृत्वमा (सम्पादनमा !) निस्किएको हालखबर दैनिकले पनि साहित्यलाई थोरै भए पनि स्थान दिने गरेको पाइन्छ। यस पत्रिकामा स्तम्भलेखन, समाचार लेखन तथा सम्पादनमा भैरव अर्याल र भैरव रिसालको समेत संलग्नता रहेको थियो।

विमर्श, दृष्टि, पुनर्जागरण, छलफल, प्रकाश, युगधारा (रातो), मूल्याङ्कन, समालोचना, राष्ट्रपुकार, योजना, जनजागृति, साप्ताहिक नेपाली आवाज, साप्ताहिक मञ्च, करेन्ट, चर्चा, चित्रण, पृष्ठभूमि, आरती, संरक्षकलगायतका धेरै साप्ताहिक पत्रिकाहरू थिए, जसमध्ये कतिपयले पञ्चायती शासनको उत्तरार्द्धमा निरङ्कुशताविरुद्ध प्रजातन्त्रको पक्षमा आवाज उठाएका थिए भने केही पत्रिका पञ्चायती शासनको पक्षमा खुलेरै लागेका थिए। परिवर्तनको पक्षमा उभिएका पत्रिकाहरूले साहित्यिक रचनाहरूको समेत साथ लिएका थिए। सबैजसो पत्रिकामा एउटा न एउटा साहित्यिक रचना प्रकाशित भएकै हुन्थ्यो। एउटा एउटा कविता छाप्ने त लहर नै चलेको थियो। ती पत्रिकामा छापिने कविता विद्रोही खालका हुन्थे। ती पत्रिका र तिनमा छापिने साहित्यिक रचनाहरूले २०४६ सालको आन्दोलनलाई तताउन यथासक्य भरथेग गरेका थिए।

यस समयमा काठमाडौँबाट नेपाल भाषामा प्रकाशित हुने विश्वभूमि, सन्ध्या टाइम्स, इनापजस्ता पत्रिकाले साहित्यलाई राम्रो स्थान दिएको देखिन्छ।

०००

बहुदलीय व्यवस्थाको स्थापनापछि साहित्य र छापासञ्चारको सम्बन्ध अझै बलियो र व्यापक बन्यो। छापामाध्यमहरू वाक् तथा प्रकाशन स्वतन्त्रताको प्राप्तिसँगै आफ्ना प्रकाशनहरूलाई विविधतायुक्त बनाउन पुगे। साहित्यलाई समेट्ने नाममा एउटा एउटा कविता मात्रै प्रकाशन गर्दै आएका पत्रिकाहरू कथा, निबन्ध, साहित्य संवाद, पुस्तक समीक्षा, साहित्यिक कार्यक्रमसम्बन्धी समाचार आदिलाई समेत समेट्न थाले। छापा समाचारपत्रहरूमा साहित्यिक रचना र साहित्यसम्बन्धी अन्य सन्दर्भहरू नियमित र अनिवार्य सामग्री बन्न पुगे।

२०४६ सालको राजनीतिक परिवर्तन आमासञ्चारको विकासका लागि महत्त्वपूर्ण रह्यो। छापा समाचारपत्रहरू मात्र बढेनन्, एफएम रेडियो र टेलिभिजन च्यानलसमेत बढे। सरकारीसँगै निजी क्षेत्रले समेत आमसञ्चारका क्षेत्रमा नयाँ नयाँ प्रकाशन प्रसारणलाई महत्त्व दिए। फलस्वरूप आमासञ्चारको क्षेत्रले छोटो समयमै पेसागत र व्यावसायिक दृष्टिले समेत फैलिने अवसर पायो।

यसै अवधिमा छापासञ्चारका क्षेत्रमा निजी क्षेत्रबाट केही राष्ट्रिय दैनिक पत्रिका र साप्ताहिक, पाक्षिक तथा मासिक म्यागेजिनहरूको प्रकाशनसमेत आरम्भ भयो। प्रकाशनको सुरुदेखि नै तिनको हस्तक्षेप प्रभावपूर्ण रह्यो। दैनिक समाचारपत्रहरू र साप्ताहिक, पाक्षिक तथा मासिक म्यागेजिनहरूकै कारण पहिलेका चर्चित राष्ट्रिय साप्ताहिकहरूको बजार खुम्चिँदै गयो। तथापि तिनले साहित्यिक रचनालाई स्थान दिई नै रहे। अहिलेसम्म टिकिरहेका साप्ताहिक पत्रिकाहरूमध्ये कतिपयले साहित्य र त्यससम्बन्धी स्तम्भलाई राम्रै स्थान दिइरहेको देखिन्छ।

राष्ट्रिय स्तरका दैनिक पत्रिका र म्यागेजिनहरूले सुरुमा साहित्यसम्बन्धी खासखास समाचारलाई मात्रै स्थान दिने गरेका थिए। दुई दशकदेखि तिनले साहित्यिक रचनाहरूलाई समेत महत्त्व दिँदै आएका छन्। सबैजसो दैनिकको शनिबारको अङ्क साहित्यविशेष हुनेगर्छ। तिनमा कविता, कथा, निबन्ध, पुस्तक समीक्षा, पुस्तक वार्ता आदि विषय समेटिएका हुन्छन्। दशैँको समयमा तिनले साहित्यलाई विशेष महत्त्व दिएर विशेषाङ्क नै प्रकाशित गर्ने गरेका छन्।

त्यो समय, जतिबेला गोरखापत्रबाहेक अन्य निजी/संस्थागत समाचारपत्रहरूमा साहित्यिक रचना देख्न पाइँदैनथ्यो। तर आज साहित्यिक रचना नभएका कुनै समाचारपत्र छन् जस्तो लाग्दैन। राष्ट्रिय दैनिक पत्रिका, साप्ताहिक पत्रिका र पाक्षिक तथा मासिक म्यागेजिनहरूले साहित्यलाई महत्त्वका साथ स्थान दिन थालेपछि त्यसको प्रभाव लेखन र पठन दुवै क्षेत्रमा देखिएको छ। साहित्यलेखनमा लाग्नेहरू बढेका छन् भने पाठकहरू पनि बढेका छन्। साहित्यको पठनसंस्कृतिलाई बढावा दिने कुरामा समेत छापामाध्यमहरूको योगदान रहेको छ।

समाचारपत्रहरूमा रचना छापिनु र स्तरीय साहित्यिक पत्रिकामा रचना छापिनुको महत्त्व बेग्लै छ। तर पनि तत्काल धेरै ठाउँमा पुग्ने, धेरै पाठकले पढ्ने र आफ्नो रचनाको प्रतिक्रिया पनि पाइहाल्ने भएकाले लेखकहरू त्यसप्रति आकर्षित हुने गरेका छन्। सञ्चारका छापामाध्यमहरूले साहित्यलाई जति महत्त्व दिन थालेका छन्, तिनमा लेखक/साहित्यकारहरूको मोह पनि उत्तिकै बढेको छ। ■

# हतारको साहित्य, फुर्सदको पठन






◆ जयदेव गौतम



मास मिडिया अक्सर हतारमा लेखिएर हतारमै पढ्ने विषय बन्दै गएको साँचो हो । तर साहित्य लेख्न फुर्सद चाहिन्छ र पढ्न पनि धैर्य र संयमको खाँचो पर्छ । साहित्य हतारमा लेखिने र फुर्सदमा पढिने हुन सक्दैन तर मास मिडिया समय, विषय र प्रसङ्ग हेरीकन हतारमा लेखिने र हतारमै पढिने सामग्री हुन्छ । यसो भए पनि मास मिडिया साहित्यकार जन्माउने एक अत्यन्त उर्वर भूमि हो ।



मास मिडिया र साहित्यको प्रसङ्ग निस्कँदा नेपाली वाङ्मय क्षेत्रमा हठात् शङ्कर लामिछाने, पारिजात, मदनमणि दीक्षित आदि अनेक नाम आँखाअगाडि तेसर्न्छिन् । 'एब्स्ट्र्याक्ट चिन्तन : प्याज' शीर्षकको पुस्तकमा मदन पुरस्कार पाएका लामिछानेको एउटा निबन्ध 'आभाँ गार्देको सौन्दर्यशास्त्र'लाई आधार बनाएर कुमुदनी नामक पाठकले शङ्करमाथि साहित्यिक चोरी र अर्कैको रचना अनुवाद गरेर आफ्नो नाममा छापेको गम्भीर आरोप लगाएका थिए । प्रतिउत्तरमा लामिछानेले चोरीको आरोप स्विकार्दै घोषित रूपमै त्यसउप्रान्त लेख्नै छाडिदिए । पारिजात नियमित पत्रपत्रिकाहरूमा लेख्ने गर्थिन्, आलोचनाको जवाफ फर्काउँथिन् । दुई जना मदन पुरस्कार विजेता (पारिजात र मोदनाथ प्रश्रित) बीच एक पटक ठूलै वादविवाद भएको थियो । त्यसबेला खासगरी पारिजातले प्रश्रितविरुद्ध पत्र-पत्रिकामार्फत 'मिडिया वार' नै चलाएकी थिइन् र पछि त्यो प्रसङ्ग 'साइलक कान्ड' भनेर नेपाली साहित्यका गल्छेँडाहरूमा स्थापित भयो । मदनमणि दीक्षितको आफ्नै पत्रिका थियो, 'समीक्षा', त्यसमा उनी 'मेरो देश मेरो संसार' भन्ने स्तम्भ चलाउँथे र हफ्तैपिच्छे अक्सर लामा-लामा साहित्यिक लेखहरू लेखिरहन्थे । 'समीक्षा' साप्ताहिकमार्फत अनेक साहित्यकारको पनि जन्म भएको मानिन्छ ।

यस्ता उदाहरण अरू पनि छन् । साहित्य छोटो-लामो जस्तो पनि हुन सक्छ, हल्काफुल्का र गुरु गम्भीर पनि हुन सक्छ तर मिडिया-सामग्री अक्सर छोटो छरितो हुन्छ र त्यसमा अटाउने साहित्यिक खुराक पनि छोटा-छरिता अनि एकै बसाइँमा झट्पट् पढेर पनि सकिने किसिमका हुन्छन् तापनि साहित्यिक लेखनको बानी बसाल्न र क्रमशः परिपक्वतातर्फ हुत्तिन मिडियाले ठूलो सहयोग गरेको हुन्छ । त्यसकारण अक्सर अनेक मिडियाकर्मी राम्रा र सफल लेखक बनेर स्थापित भएका हुन्छन् । अचेल छिटोछिटो बदलिँदै गइरहेको समाजभित्र जीवनको आपाधापीमा मानिसलाई लामालामा रचना पढ्ने समय त्यति हुँदैन । त्यसकारण छोटा रचनाका लागि पनि मिडियाको साहित्य सदाबहार हुने गर्दछ । (तर यसको अर्थ साहित्यिक पुस्तकहरूको बजार नै छैन भन्नेचाहिँ होइन, तिनको आफ्नै विशिष्ट महत्त्व एवं उपादेयता छ) ।

नेपाल मात्र होइन, समग्र विश्वमै अधिकांश आधुनिक लेखक-साहित्यकारको उदय एक वा अर्को किसिमले आमसञ्चारका माध्यममार्फत नै भएको छ । ती महिला अथवा पुरुष जोसुकै वाङ्मयकर्मीले पहिलो पटक नै स्वतन्त्र पुस्तकका रूपमा आफ्नो पृथक् पहिचान उजागर गर्नुको साटो आफूलाई कुनै न कुनै सञ्चारमाध्यमबाटै अगाडि बढाएको पाइन्छ । त्यस्ता सञ्चार-माध्यमका रूपमा पत्रपत्रिका, रेडियो, टेलिभिजन, चलचित्र, डकुमेन्ट्री वा पछिल्लो समयको अद्‌भुत प्राविधिक विकास बनेर बहुधा प्रयोगमा देखिएका अनलाइन पोर्टलसमेतका विभिन्न सामाजिक सञ्जाल रहेका छन् । आफ्नो वाङ्मय जीवनको सुरुवात छोटो वा लामो कविता अथवा मुक्तक लेखेर नगर्ने मानिस विरलै होलान् अन्यथा लघुकथा वा औसत आकारका कथा-कुथुङ्ग्री छापेर/प्रसारण गरेर कोही अघि बढेका हुन्छन् । त्यसका लागि आमसञ्चारका माध्यम नै सहयोगी बनेका हुन्छन् ।

साहित्य र आमसञ्चार-माध्यमहरूले केही साझा भूमिका निर्वाह गरेका हुन्छन् । एक जना विद्वान्, सइदका शब्दमा "दुवैले आममानिसलाई सूचना दिने, शिक्षित तुल्याउने

र मनोरञ्जन प्रदान गर्ने काम भने गरिरहेकै हुन्छन् । यसका साथै आआफ्नो दायित्व निर्वाह गर्दागर्दै पनि यी दुवै माध्यमले वैचारिक प्रचारबाजीसमेत उत्तिकै गर्दछन् । तापनि साहित्यले मनोरञ्जन प्रदान गर्नुका साथै जीवनका विविध रूपसँग साक्षात्कार गराउँछ भने मिडियाको पहिलो र सर्वप्रमुख दायित्व सूचना सम्प्रेषण नै हो, मनोरञ्जन र अन्य कुरा त्यसपछि आउँछन् ।"

जानिफकारहरू भन्छन्– साहित्य भावगत लिखित दस्तावेज हो, जसमा लेखकको क्षमता निजको भाषिक वैशिष्ट्यका आधारमा प्रकट भएको हुन्छ । विषयवस्तुको छनोट र त्यसलाई अभिव्यक्त गर्ने भाषिक कौशलले हरेक लेखकलाई अर्को लेखकबाट पृथक् बनाउँछ । समग्रमा साहित्यले संवाद–क्षमता बढाउँछ, शब्द–ज्ञान वृद्धि गर्छ, बुद्धि एवं दृष्टिकोण बनाउन मद्दत गर्नुका साथै लेखन क्षमता र बोल्ने कला पनि तिखार्दछ अनि इतिहासका बारेमा बताउँदै मानिसलाई स्वयंकै बारेमा धेरै सिकाउँछ र सबभन्दा बढी त साहित्यले मनोरञ्जन प्रदान गर्छ ।

धेरै पहिले, करिब डेढ सय वर्षपहिले, ब्रिटिस कवि तथा समालोचक म्याथ्यु आर्नोल्डले भनेका थिए, "पत्रकारिता (मिडिया) भनेको हतारको साहित्य हो ।" आर्नोल्डले यसो भनिरहँदा आजको जस्तो आमसञ्चारका सर्वसुलभ साधन र माध्यमहरूको विकास भइसकेको थिएन । संसार ठूलो थियो र समाचारमूलक घटनापरिघटनाहरू छिटोछिटो घटिरहेका हुन्थे, जसलाई सम्प्रेषण गर्न थोरै सङ्ख्यामा रहेका पत्रकारहरूलाई सधैँ धौ धौ परिरहेको हुन्थ्यो । यसो भए पनि सञ्चार सम्प्रेषण गर्नकै लागि पनि भाषागत निपुणता, लालित्य र सम्प्रेषणीयता त चाहिन्थ्यो नै, अन्यथा कसरी आमपाठकलाई आफ्ना सूचना बुझाउने ? अचेल त्यस्तो छैन । बरु मानिसहरूले जे सोच्दछन्, अनुभव गर्दछन्, भन्दछन् र प्रतिक्रिया व्यक्त गर्दछन्, ती सबै अभिव्यक्तिहरूलाई जस्ताको तस्तै सरल औ सुललित भाषामा सम्प्रेषण गर्नु सञ्चार–माध्यमहरूको दायित्व हुन पुगेको छ । अचेल सम्पूर्ण मास मिडिया त्यही गरिरहेका छन् ।

उहिले, जतिबेला आमसञ्चारका माध्यमको विकास भइसकेको थिएन, थोरै मानिस मात्र लेखनको दुनियाँमा देखा पर्ने गरेका थिए । त्यो बेलाका लेखन्तेहरू या त आफूलाई अभिव्यक्त गर्न मन लागेका कुरा मौखिक रूपमै सुनाउँदै हिँड्ने गर्थे, होइन भने बाध्यतावश पनि स्वतन्त्र लेखन निम्ति विवश हुन्थे । यसरी उनीहरू सोझै पुस्तक–रचयिता बनेर समाजमा उदाउँथे । वेद, रामायण, महाभारत, श्रीमद्भागवत र यी पौराणिक ग्रन्थ सिर्जना भएको भन्दा धेरैपछिका लेखक–कविहरू महानतम संस्कृत कविको उपाधिले मण्डित कालीदास होऊन् अथवा उनीभन्दा धेरै पहिलेका व्यास र वाल्मीकि अथवा पाणिनी, भारवी, माघा, जगन्नाथ, भाषा, भवभूति, वाणभट्ट, अश्वघोष, शुद्रका, बल्लभाचार्य, माधवाचार्य, जयदेव, कल्हण, हर्षवर्द्धन, चाणक्य, विद्याकर अथवा लाओत्से, कन्फ्युसियस, मुरासाकी सिकिबु, हुएन साङ, फाहियान आदि अनेकानेक पूर्वीय जगतका कलमकारका पालामा अचेलजस्तो आमसञ्चारका साधन उपलब्ध थिएनन् ।

पूर्वीय विश्व मात्र किन, पश्चिमा जगतमा पनि हालत त उस्तै थियो । होमर, सोफोक्लिज, हेरोडोटस, युरिपिडिज, जेनोफोन, एरिस्टोफ्यानिज, प्लेटो, अरिस्टोटल, भर्जिल, सिसेरो, होरेस, ओभिड, एनियस, सेनेका, एन्ड्रोनिकस आदिसमेत तमाम ग्रीक र रोमन साम्राज्यका जल्दाबल्दा वाङ्मयकर्मीहरूको समयमा पनि अचेलको जस्तो आमसञ्चारका माध्यम प्रचलनमा कतै थिएनन् । एकै पटक पन्ध्रौँ शताब्दी (सन् १४४०) मा जर्मन फलामकर्मी जोहानेस गुटेनबर्गले छापाखाना (गुटेनबर्ग प्रिन्टिङ प्रेस)को आविष्कार गरेपछि पुस्तक, पर्चापम्पलेटहरू हजारौँको सङ्ख्यामा छापिन र जनस्तरमा अधिकाधिक परिमाणमा उपलब्ध हुन थालेका हुन् । तर त्यसो भए पनि गुटेनबर्ग प्रेसको आविष्कार भएको एक सय साठी वर्षपछि अर्थात् सन् १६०१ पछि मात्र एक वा अर्को रूपमा पत्रिकाहरूको प्रकाशन हुन थालेको थियो ।

इतिहासकै पाना पल्टाउने हो भने सर्वप्रथम इटाली र जर्मनीमा हस्तलिखित स्वरूपमा आवश्यक वा अत्यावश्यक सूचनाहरू निकालेर वितरण गर्ने प्रचलन सन् १४०० को आसपासदेखि नै सुरु भइसकेको थियो । कालान्तरमा छापाखानाको आविष्कार र त्यससँगै त्यसको प्रयोग बढ्दै जान थालेपछि संसारको पहिलो समाचारपत्र मानिएको पत्रिका सन् १६०५ मा जर्मनीको स्ट्रासबर्गमा छापिएको थियो, जुन साप्ताहिक रूपमा छापिन्थ्यो । यो पत्रिका जर्मन भाषामा "रिलेसन एलर फुर्नेमेन एन्ड गेडेनक्वुर्दिजेन हिस्टारियन" नामबाट 'जोहान क्यारोलस' नामक व्यक्तिले प्रकाशन थालेका थिए । यो पत्रिकालाई छोटकरीमा जर्मन 'रिलेसन' मात्र भनेर पनि चिनिन्छ । 'रिलेसन'को प्रकाशनपछि भने जर्मनी, हल्यान्ड, फ्रान्स, इटाली, इङ्ल्यान्ड, बेल्जियम, पोर्चुगल हुँदै विभिन्न देशमा पत्रपत्रिका र पत्रकारिताका रूपमा आमसञ्चारको विकास हुँदै गयो । नेपालमा सर्वप्रथम विसं १९५५ पहिलो पत्रिकाका रूपमा 'गोर्खापत्र' प्रकाशन हुन थालेको हो, जसमा केवल सानासाना समाचार र सूचनाहरू मात्र हुन्थे ।

अझ पछि टेलिग्राम र आ.वा. आदिमा सीमित सञ्चार जगतमा स्कटल्यान्डका अलेक्जान्डर ग्राहम बेलले सन् १८७६ मा टेलिफोनको र इटालीका गुग्लिल्मो मार्कोनीले सन् १८९० को मध्यतिर रेडियोको आविष्कार गरेपछि त सञ्चार क्षेत्र अझ सघन हुँदै गयो । अचेल लगभग सबैको हातहातमा हुने मोबाइल अथवा सेलफोनको आविष्कार पैँतालिस वर्षअघि सन् १९७३ मा अमेरिकी नागरिक मार्टिन कुपरले गरेका थिए तर यसको सार्वजनिक प्रयोग भने सन् १९८४ बाट मात्र सुरु भएको थियो । सुरुसुरुमा मोबाइल फोनको वजन एक किलोग्रामभन्दा केही बढी हुने गर्थ्यो । पछि नयाँ नयाँ संस्करण

विकास हुँदै स्मार्टफोनको प्रविधि प्रयोगमा आउन थालेपछि सन् १९९० र २००० को दशकबाट त मोबाइल फोनको प्रयोग ह्वात्तै बढेर गयो ।

जीवनलाई सहज बनाउने क्रममा सन् १९२७ मा फिलो टेलर फार्न्सवर्थले टेलिभिजनको आविष्कार गरे । उनलाई 'टेलिभिजनका पिता' पनि भनिन्छ यद्यपि टेलिभिजनलाई आजको अत्याधुनिक अवस्थासम्म ल्याइपुऱ्याउन जोन लगी बेयर्ड, केन्जिरो ताकायानागी, चार्ल्स फ्रान्सिस जेन्किन्ससमेत धेरै जनाको योगदान छ । त्यसअघि टेलिप्रिन्टर या आ.वा. सन् १९१० मा धेरै जनाको बौद्धिक लगानीबाट विकसित भएको थियो तापनि डोनाल्ड मरेलाई 'टेलिग्राफिक टाइपराइटर'को आविष्कार गरेको श्रेय दिइएको छ । आधुनिक फ्याक्सको आविष्कार जेरोक्स कम्पनीले सन् १९६४ मा गरेको थियो यद्यपि फ्याक्सको सर्वप्रथम आविष्कार 'इलेक्ट्रिक प्रिन्टिङ टेलिग्राफ'का रूपमा स्कटल्यान्ड निवासी अलेक्जान्डर बेनले सन् १८४३ मा गरेका थिए ।

अहिलेको समयमा मानवीय जीवनको अनिवार्य अङ्गजस्तै बन्न पुगेको कम्प्युटरको आविष्कार त्यसो त सर्वप्रथम सन् १८२२ मा अङ्ग्रेज गणितज्ञ चार्ल्स बाबेजले 'डिफरेन्स इन्जिन' भनेर गरेका थिए तर आधुनिक स्वरूपमा 'पर्सनल कम्प्युटर' (पीसी) भनेर यसको प्रयोग सन् १९७१ मा आएर मात्र हुन थालेको हो । बिल गेट्सले माइक्रोसफ्ट कम्पनीका समेत कम्प्युटरहरूका लागि सफ्टवेयर प्रोग्राम बनाएर सबैभन्दा कम उमेर (३१ वर्ष) मै अर्बपति र संसारकै धनाढ्य व्यक्ति बन्ने गौरव कायम गरे । स्टिभ जब्सले आफ्ना साथी स्टिभ वोज्नियाकसित मिलेर एप्पल वा मेकिन्टोस कम्प्युटरको विकास गरे । त्यसो त पहिलो ल्यापटप कम्प्युटर सन् १९८१ मा एडम ओसबर्नले बनाइसकेका थिए भने व्यापारिक र व्यावसायिक प्रयोजनका लागि इलेक्ट्रोनिक कम्प्युटरचाहिँ जापानी नागरिक हिडियो यामाचितोले जुलाई १९५० मा बनाइसकेका थिए ।

विकासको यही क्रम पछ्याउँदै सन् १९९८ मा दुई जना अमेरिकी कम्प्युटर वैज्ञानिक ल्यारी पेज र सर्गे ब्रिनले अचेल सर्वाधिक बढी प्रयोग हुने 'गुगल सर्च इन्जिन'को आविष्कार गरे । त्यसको आठ वर्षपछि सन् २००४ मा अर्का अमेरिकन मार्क जुकरबर्गले 'फेसबुक'को आविष्कार र विकास गरे । यसै वर्ष डेभ वाइनर र एडम करीले 'पोडकास्ट', जसलाई कुनै बेला 'अडियो ब्लग्स' भनिन्थ्यो– को विकास गरे । अर्को वर्ष फेब्रुअरीमा तीन जना अमेरिकी स्टिभ चेन, च्याड हर्ली र जावेद करिम मिलेर 'युट्युब'को आविष्कार गरे, जुन अचेल 'गुगल' पछि दोस्रो सर्वाधिक प्रयोग हुने सामाजिक सञ्जाल हो । फेरि अर्को वर्ष सन् २००६ मा ज्याक डोर्सीले 'ट्विटर'को थालनी गरे । तीन वर्षपछि सन् २००९ मा ब्रायन एक्टन र जान कउम दुई जना मिलेर 'ह्वाट्स एप'को आविष्कार गरे ।

यसरी सञ्चार प्रविधिमा एकपछि अर्को आविष्कार हुँदै गइरहँदा साहित्य केवल लेख्य स्वरूप अर्थात् पुस्तकमा मात्र सीमित रहेन, यसले आफूलाई अभिव्यक्त गर्नका लागि तमाम सामाजिक सञ्जालहरूलाई उपयुक्त माध्यम बनाउन थाल्यो । यसरी मिडियाजस्तै साहित्यको पहुँच पनि बढ्दै गयो । स्वाभाविक तवरले साहित्य लेख्नेहरूको सङ्ख्या पनि बढ्दै गयो । अवस्था यस्तो देखिँदै गएको भए पनि यथार्थ के हो भने यी सबै अत्याधुनिक सुविधाहरू प्रयोग गर्नका लागि खुला परिवेश र लोकतान्त्रिक वातावरण सर्वथा अपेक्षित हुन्छ ।

लोकतन्त्र अँध्यारोमा बाँच्न सक्दैन, मर्छ । यो अँध्यारो भनेको दिनको उज्यालोपछि हुने साँझ वा रातको अँध्यारो होइन, यसको अभिव्यञ्जनात्मक र लाक्षणिक अर्थ हुन्छ । किनभने यसले राजनीतिक, सांस्कृतिक, धार्मिक, सामाजिक, समसामयिक सबै पक्षको गहन अर्थ बोकेको हुन्छ । यसकारण लोकतन्त्र सधैँ उज्यालोको आकाङ्क्षी र त्यसकै पृष्ठपोषक हुन्छ । लोकतन्त्रको यही उज्यालोसँग आमसञ्चार र साहित्य पनि उसैगरी गाँसिएको हुन्छ । उज्यालो परिवेशमा आमसञ्चार र साहित्य रहरलाग्दो गरी फस्टाउँछ वा फस्टाउन सक्छ तर अँध्यारोमा केवल त्यसको बिल्ल्याँटो मात्र हुन्छ ।

आमसञ्चार, जसलाई अचेल सर्वत्र अङ्ग्रेजीमा भनिने 'मास मिडिया'कै उच्चारणमा बढी सहजतासाथ आत्मसात् गर्न थालिएको छ– र साहित्यबीच गहिरो सम्बन्ध छ । किनभने, एक अर्थमा भन्न सकिन्छ, सबै साहित्य मिडिया हुन् तर सबै मिडिया साहित्य होइन । साहित्य सर्वव्यापक छ तर मास मिडियाका आफ्ना सीमा छन् । तर जे भए पनि साहित्य लेख्नेहरूलाई यी र यस्ता सिमानाहरूले कहिल्यै बाँध्न सकेका छैनन् । सन् १७९२ मा बेलायतकी मेरी वुल्स्टनक्राफ्टले 'अ भिन्डिकेसन अफ दी राइट्स अफ वुमन' भन्ने कृति लेखेर महिला समानता र आधुनिक महिलावादी आन्दोलनको प्रारम्भिक वैचारिक जग राखेकी थिइन् । उनले पुरुषको दाँजोमा महिलालाई दोयम ठानिने तत्कालीन बेलायती कुलीन समाजको आलोचना गर्दै आफ्ना साहित्यिक आलेखहरू पत्रपत्रिकामा निरन्तर लेख्दै र पछि पुस्तकाकार कृति पनि प्रकाशित गरेकी थिइन् ।

फ्रान्सेली लेखक सिमन द बुआ चर्चित अस्तित्ववादी दार्शनिक, लेखक र महिलावादी अभियन्ता थिइन् । अस्तित्ववादी दार्शनिक तथा मनोविश्लेषक ज्याँ पल सार्त्रकी आजीवन साथी उनले सन् १९४९ मा लेखेको 'द सेकेन्ड सेक्स' भन्ने पुस्तक महिलामाथि हुने तमाम शोषणको विश्लेषण गर्दै महिला–शक्तिको बयान गर्ने विशिष्ट ग्रन्थ हो र यसलाई आधुनिक महिलावादी विचारधाराको आधारस्तम्भ पनि मानिन्छ । सिमन पनि मिडियामा आफ्ना विचारोत्तेजक लेख, संस्मरण र जीवनीहरू लेखिरहन्थिन् । मिडिया लेखनले उनको साहित्यिक छविलाई निरन्तर उजिल्याउने काम गरेको थियो । अमेरिकामा गर्भ–निरोध (बर्थ कन्ट्रोल)को सुरुवात गर्ने मार्गरेट सेँगर आफ्ना विचारहरूको प्रचार–प्रसार गर्न

नियमित मिडियामा लेख्ने गर्थिन् । आफैँले लेखेर गर्भ–निरोधी पर्चा बाँडेको आरोपमा पक्राउ परेर जेल पनि परिन् र पछि मिडियामा लेखेका लेखसमेत सङ्कलन र परिमार्जन गरेर उनले युगान्तकारी पुस्तकहरू प्रकाशित गरिन् ।

नेपाली वाङ्मयमा कथाकारका रूपमा चिनिएका प्रेमराजेश्वरी, गोमा, देवकुमारी थापा, बुलु शर्मा, प्रेमा शाह आदि महिला लेखकले मिडियामा लेखेको उस्तोविधि पाइँदैन । उनीहरूले थोरै लेखे, जे जति लेखे सोझै किताबकै स्वरूपमा लेखे । त्यसो त पहिले लगभग वि.सं. २०४६ सालसम्म नेपालमा मिडियाको अवस्था सर्वसुलभ थिएन । वि.सं. १९९० मा काठमाडौँमा ऋद्धिबहादुर मल्लको प्रकाशन/सम्पादनमा 'शारदा' पत्रिका निस्कन थालेपछि त्यसैबाट अनेक साहित्यकार हरूको उदय हुन थालेको हो । यसमा धेरै पछिसम्मै पुरुष लेखक–कविकै वर्चस्व थियो । शशीकला शर्मा र श्यामप्रसाद शर्माले निकालेको 'स्वास्नीमान्छे' पत्रिका धेरै लामो समय चल्न सकेन तर त्यसले समाचारमूलक सामग्रीका साथै साहित्यिक खुराक पनि दिने गर्थ्यो । अलि पछि आएर 'शारदा', 'रचना', 'अभिव्यक्ति', 'मधुपर्क', 'गरिमा', 'मिर्मिरे', 'दायित्व' आदि अनेक साहित्यिक पत्रिका निस्कन थालेपछि भने पुरुष लेखकको दबदबा रहे पनि पछिपछि गएर थोरै भए पनि लेखनमा महिला सङ्ख्या तुलनात्मक रूपमा बढ्न थालेको देखिन्छ ।

खासगरी मधुपर्क र गरिमा दुई पत्रिकामा महिला लेखकहरू उल्लेखनीय सङ्ख्यामा देखा पर्न थाले । माया ठकुरी, भागीरथी श्रेष्ठ, वानीरा गिरि, उषा शेरचन, मञ्जु काँचुली, बेन्जु शर्मा, शारदा शर्मा, तोया गुरुङ, सुधा त्रिपाठी, मोमिला जोशी आदि अनेक महिला लेखकले नेपाली वाङ्मयको झन्डा निरन्तर उँचो पार्न थाले । यी सबैभन्दा बेग्लै र धेरै लेख्नेमा पारिजात थिइन् जसले साहित्यिक र समाचारमूलक साप्ताहिक मिडियामा निरन्तर लेख्ने गर्थिन् । उनी आफ्ना पाठकका जिज्ञासाको जवाफ दिने गर्थिन् र आफूविरुद्धको कुनै पनि आलोचना वा समालोचनाको तत्काल प्रतिउत्तर लेखेर छाप्न दिइहाल्थिइन् । मास मिडिया जति धेरै भयो, तिनमा साहित्यिक रचना र साहित्यबारे विविध चर्चा–परिचर्चा पनि उत्ति नै धेरै आउन थालेकाले साहित्यिक माहोल फस्टाउने अवसर मौलाउँदै गयो ।

उल्लिखित पत्रिकाका साथै तीस र चालिसको दशकमा 'भानु', 'सङ्कल्प', 'सुस्केरा', 'झिसमिसे', 'अक्षलोक', 'कलम', 'उत्साह', 'केन्द्रबिन्दु' आदि केही साहित्यिक पत्रिका निस्कन्थे । तिनमा थोरै सङ्ख्यामा महिला लेखक देखा पर्थे यद्यपि तिनमा महिला वा पुरुषकै पनि छद्म नाममा लेखिएका रचना के कति हुन्थे, पाठकलाई थाहा हुँदैन थियो । ती सबै पत्रिका छयालिस सालको आसपासदेखि खरायोको सिङजस्तै हराए । यद्यपि यस्तै कुनै मिडियामा एउटा कविता 'पोथी बास्छ' लेखेर पुरुष–सत्तालाई चुनौती दिँदै नाम कमाएकी कवियत्री हुन् कुन्ता शर्मा ।

तिनताका निस्कने मिडियाहरूमध्ये 'साप्ताहिक विमर्श'मा उषा शेरचन लिखित 'मुक्तक' हरेक साता पढ्न पाइन्थ्यो । पारिजात र वानीरा गिरिका स्तम्भहरू पाठकलाई आकर्षण गर्ने सामग्रीका रूपमा रहन्थे । यसै क्रममा मुलुकमा निजीक्षेत्रबाट ब्रोडसिट मिडियाको प्रकाशन सुरु भएदेखि मास मिडिया र साहित्यको सङ्गम बाक्लिन थालेको हो किनभने ती ब्रोडसिट दैनिकले शनिबार परिशिष्टाङ्क निकालेर साहित्यलाई प्रशस्त स्थान दिन थालेका थिए । पहिले यो प्रचलन 'गोरखापत्र' दैनिकले मात्र गर्थ्यो । मदन पुरस्कार विजेता झमक घिमिरे पहिला पहिला (र, अझै पनि) मिडियामा लेखिरहन्थिन् । पछि मात्र उनले किताब लेखिन् । यसरी झमक मात्र होइन, धेरै लेखकलाई मिडियाले भरपूर सहयोग गरेको छ, गज्जबको प्लेटफर्म उपलब्ध गराएको छ, गराइरहेकै छ ।

कालान्तरमा अनलाइन पोर्टलसमेतका विभिन्न सामाजिक सञ्जाल प्रचलनमा आएदेखि त आफ्ना रचना प्रकाशन गर्नका लागि कुनै मिडियाविशेषलाई कुरिरहनै नपर्ने भएको छ । एउटामा ननिस्के अर्को मिडियामा दिए छापिने अवस्था भयो । यति मात्र नभएर आफैँले पोडकास्ट खोलेर, ब्लग चलाएर, वेब पोर्टल वा युट्युब च्यानल दर्ता गरेर जता लेखे–बोले पनि भएको छ । अझ त्यो पनि भएन भने फेसबुक वालमा सूचना, समाचार वा साहित्यिक रचना जे लेखेर पोस्ट गरे पनि हुने भएको छ ।

मास मिडियामा सामग्रीहरू हतारमा लेखिँदै छ । कसले पहिले सूचना सम्प्रेषण गर्ने होडबाजी छ । पढ्नेसित पनि फुर्सद छैन, अक्सर शीर्षक र हाइलाइट हेरेरै चित्त बुझाउनेको कुनै कमी छैन । अलि बढी भए, शीर्षक र सामग्री मन पऱ्यो भने सर्सर्ती 'पढेजस्तो' गऱ्यो, छोड्यो ! लामालामा सामग्री पढ्ने फुर्सद, अझ धैर्य, कम हुँदै गएको छ । त्यसकारण पढ्नेभन्दा सुन्ने वा हेर्ने सामग्री बढी प्रिय हुन थालेका छन् । तर साहित्य अलि फरक हो । यसले धैर्यको माग गर्छ । संयमपूर्वक अध्ययनको अपेक्षा गर्छ । माथि उल्लेख गरिएजस्तै, मास मिडिया आफैँमा 'हतारको साहित्य' हो तर साहित्य नै चाहिँ होइन, भलै त्यसको 'स्कोप' धेरैधेरै फराकिलो छ ।

मास मिडिया अक्सर हतारमा लेखिएर हतारमै पढ्ने विषय बन्दै गएको साँचो हो । तर साहित्य लेख्न फुर्सद चाहिन्छ र पढ्न पनि धैर्य र संयमको खाँचो पर्छ । साहित्य हतारमा लेखिने र फुर्सदमा पढिने हुन सक्दैन तर मास मिडिया समय, विषय र प्रसङ्ग हेरीकन हतारमा लेखिने र हतारमै पढिने सामग्री हुन्छ ।

यसो भए पनि मास मिडिया साहित्यकार जन्माउने एक अत्यन्त उर्वर भूमि हो । साहित्यले मिडियालाई भाषा दिन्छ तर मिडिया बेगर साहित्य अधुरो हुन्छ । रङ्गहीन हुन्छ । त्यसकारण भन्न सकिन्छ– मास मिडिया र साहित्य एकअर्काका परिपूरक हुन्, एकआपसमा अविभाज्य अङ्ग हुन्, र हुन् एउटै सिक्काका दुई पाटा । ■

# आमसञ्चार र साहित्य अन्योन्याश्रित सम्बन्ध






◆ अमृता लम्साल



केही दशकअगाडिसम्म हाम्रो समाज, 'मनुस्मृति' जस्तो किताबमा लेखिएको कुराबाट निर्देशित कानुनले चलिरहेको थियो; झट्ट हेर्दा, मनुस्मृति किताब मात्रै लागे पनि यसलाई साहित्य होइन भनेर नकार्न पनि मिल्दैन र, यसले समाजलाई अनुशासित जीवनमा डोहोऱ्याउन सञ्चारको भूमिकासमेत खेलेको पाइन्छ ।



आमसञ्चार भनेको धेरै जनमानसमा पुग्ने/पुऱ्याउने माध्यम हो । लेखेर, प्रसारण गरेर वा बोलेर जुनसुकै विधाबाट गर्न सकिन्छ । यसमा टेलिभिजन, रेडियो, विज्ञापन, चलचित्र, इन्टरनेट, समाचारपत्र, म्यागेजिन इत्यादि पर्दछन् ।

अर्कोतर्फ, साहित्य लेखेर, कलात्मक तरिकाले या अभिनय गरेर पनि गर्न सकिन्छ । यो विधाको कुरा गर्दा, उपन्यास, बायोग्राफी, छोटा/लामा कथा, ऐतिहासिक दस्तावेजहरू, संस्मरण, निबन्ध, कविता आदिलाई समेट्न सकिन्छ ।

सञ्चार अध्ययनको पिता मानिने मार्सल म्याकलुहानका अनुसार सञ्चार भनेको 'सन्देशको माध्यम' हो । त्यसैगरी जर्मन साहित्यका सिद्धान्त प्रवर्तक फ्रेडरिक किटलरले पनि साहित्यलाई सञ्चारकै एउटा विधा मानेर आफ्ना चेलाहरूलाई सिकाउँदै आएका थिए । त्यसैले आमसञ्चार र साहित्यको अन्योन्याश्रित सम्बन्ध छ भन्दा फरक पर्दैन ।

अहिलेको समयमा आमसञ्चारको माध्यम भन्ने बित्तिकै केवल, पत्रिका, टेलिभिजन, युटुब, म्यागेजिनहरू मात्रै झट्ट हाम्रो दिमागमा आउँछ; तर मानिसहरूले ढुङ्गामा लेख्न थालेदेखिको समयको कुरा गर्ने हो भने, शिलालेखमा लेखिएका कुरा मात्रै होइन, हाम्रा वेद, पुराणहरू, रामायण, महाभारतजस्ता पुस्तकहरूले हाम्रा पुर्खाको दिमागमा चेतना भर्ने, त्यसमा लेखिएका कुराबाट समाजलाई अनुशासनको बाटोमा डोहोऱ्याउने, शासकलाई राज्य चलाउन विचार र जनमत तयार गर्न मद्दत गर्ने गरेको पाइन्छ; जुन, अहिलेको आमसञ्चारले गरिरहेको कार्य हो । केही दशकअगाडिसम्म हाम्रो समाज, 'मनुस्मृति' जस्तो किताबमा लेखिएको कुराबाट निर्देशित कानुनले चलिरहेको थियो; झट्ट हेर्दा, मनुस्मृति किताब मात्रै लागे पनि यसलाई साहित्य होइन भनेर नकार्न पनि मिल्दैन र, यसले समाजलाई अनुशासित जीवनमा डोहोऱ्याउन सञ्चारको भूमिकासमेत खेलेको पाइन्छ ।

यी कुरा हाम्रो देश या समाजमा मात्रै लागू हुने होइन । पन्ध्रौँ शताब्दीको चिनियाँ साहित्य र संस्कृतिका बारेमा लेखिएको म्यानुस्क्रिप्टलाई हातैले लेखेर आर्काइभ गर्दै राखियो र पछिल्ला पुस्ताहरूमा ज्ञानको सञ्चार फैलाउँदै लगियो । त्यसैगरी फ्रेन्च लिटरेचरलाई पनि शताब्दीयौँदेखि हातैले लेखेर पुस्तान्तरण गर्दै ल्याइयो । त्यसरी म्यानुस्क्रिप्टलाई हातले सार्दै ल्याइएका कुरा आजका दिनसम्म कतिपय धार्मिक तथा सांस्कृतिक प्रसङ्गमा लागू भइरहेको भेटिन्छ । यस हिसाबले हामी भन्न सक्छौँ साहित्य र सञ्चारको सम्बन्ध कति बलियो रहेछ ।

नेपालको पत्रकारिताको इतिहास खोतल्दै जाने हो भने वि.सं. १९५५ मा प्रकाशित 'सुधासागर'लाई पहिलो पत्रिका मानिन्छ; जुन साहित्यिक पत्रिका थियो । त्यसको तीन वर्षपछि मात्रै गोरखापत्र प्रकाशित हुन थालेको हो । त्यही गोरखापत्रले वि.सं. २०१९ असार ९ गतेदेखि शनिवासरीय परिशिष्टाङ्कको थालनी गरेको रहेछ । सायद आमसञ्चारका माध्यमबाट साहित्यको प्रचार प्रसार यही समयदेखि हुन थाल्यो कि ? पछि त रेडियो नेपालबाट साहित्यिक




कार्यक्रम र नाटकहरू पनि प्रसारण गरिन्थ्यो । त्यतिबेला केवल रेडियो नेपाल र गोरखापत्र मात्रै भएकाले आजको दिनमाजस्तो व्यापक रूपमा आमसञ्चारले साहित्यलाई समेट्न गाह्रो थियो ।

अहिलेको परिप्रेक्ष्यमा देशमा थुप्रै दैनिक पत्रिका, अनलाइन पत्रिका, अनेक टेलिभिजन माध्यम, युट्युबले समेत साहित्यिक रचनालाई प्रमुख स्थान दिन थालेका छन् । यसले गर्दा लेखक र पाठक दुवैलाई फाइदा हुने देखिन्छ। यसरी सर्वसाधारणको जानकारीमा आएका रचनाको अध्ययनपश्चात ती रचनाको सकारात्मक/नकारात्मक बुँदाहरूमा छलफल गराउने कामसमेतमा आमसञ्चारको ठूलो हात रहँदै आएको छ ।

कुनै बेला थियो, कुनै लेखकले रचना गरेको कुनै साहित्यिक रचना पाठकले पढ्दथे, चित्त नबुझे पनि पाठकको पहुँच लेखकसम्म मुस्किलले हुन्थ्यो; अहिले त्यो समस्यालाई इन्टरनेटमार्फत वा सामाजिक सञ्जालहरूले गर्दा लेखकले पनि एकदमै सचेत रहेर मात्रै आफ्नो सिर्जना पस्किनुपर्ने दिन आएको छ । अरू त के कुरा र ट्विटरमा २४० क्यारेक्टरको ट्विट गर्नुपर्‍यो भने त्यसको प्रतिप्रश्न के आउन सक्छ; त्यो प्रतिप्रश्न आएपछि जवाफ के दिनुपर्छ भनेर पहिले नै मानसिक रूपले तयारी गर्नुपर्दछ । साँच्चै भन्नुपर्दा २४० क्यारेक्टरको ट्विट लेख्दा, दिमागमा एक पेज जतिको सवाल जवाफ तयार पारिसक्नुपर्छ । फेसबुक, ट्विटरजस्ता सञ्जालहरूलाई सिद्धान्ततः 'आमसञ्चार' नमानिसके पनि, सर्वसाधारणमा अन्य आमसञ्चारका माध्यमभन्दा बढी पहुँच सामाजिक सञ्जालकै देखिन्छ ।

लेखक र प्रकाशकहरू आफ्ना आमसञ्चारका माध्यममा आएका साहित्यिक रचनाको लिङ्क ती सामाजिक सञ्जालमा राखिदिन्छन्; जसको कारण सम्बन्धित विषयमा चाख राख्ने पाठकले तत्कालै पढेर, हेरेर, सुनेर प्रतिक्रिया दिन पनि भ्याइहाल्छन् ।

अहिले त, कथा, उपन्यास, कविताका किताब रेडियो, युट्युब, पोडकास्टबाट समेत सुन्न पाइन्छ ।

उदाहरणका लागि नेपालमा एकदमै लोकप्रिय रेडियो कार्यक्रम 'श्रुती संवेग' छ, जुन उज्यालो नेटवर्कबाट साँझ सवा नौदेखि दस बजेसम्म प्रत्येक मङ्गलबार प्रसारण हुन्छ ।

आमसञ्चारले समाजमा रहेका विभेदका कुरा, महिलाका विषय, यौनिक अल्पसङ्ख्यकका समस्यासमेत कथा, लेख आदिका माध्यमबाट समाजमा पुर्‍याइरहेको छ ।

सायद त्यसैले पनि अलिकति चेतना फैलाउने र



आमसञ्चारको माध्यमहरूमै लेखेको पढ्न पाइन्छ, "भ्रष्टाचारीका बूढी बहुलाओस् ! अनि प्यारी छोरी पोइला जाओस् !" यस्तो पढेर आउने पिँढीले कस्तो विचार निर्माण गर्छन् होला कस्तो सोच बनाउँछन् होला ? कुनै भ्रष्टाचारीले गरेको गलत कामको परिणाममा उसको श्रीमती र छोरीलाई किन संलग्न गराउने ? के अधिकांश पुरुषहरूले घुस खानुभन्दा अगाडि 'म घुस खाऊँ कि नखाऊँ ?'



सकारात्मक विचार बनाउनेतर्फ पनि काम गरिरहेको छ । आमसञ्चारले गर्दा नै पाठकहरू उपन्यास र कथामा लेखिएका शब्द शब्दमा ध्यान दिएर विभेदकारी शब्द प्रयोग गरियो भनेर अदालतमा मुद्दा हाल्नसमेत पुगेका छन् । त्यसको उदाहरण, अमर न्यौपानेद्वारा लिखित 'सेतो धर्ती'मा प्रयोग गरिएको शब्दहरू 'डोला बोक्ने घर्ती' भनियो भनेर केहीले किताब जलाए भने सरस्वती प्रतीक्षाद्वारा लिखित 'नथिया'मा लेखिएको शब्द 'बादी'ले पनि विरोध खपेको थियो । यदि साहित्यको सम्बन्ध आमसञ्चारसँग हुँदैन थियो भने ती शब्दहरूले कालान्तरमा कतै कुरा उठे/उठाइए पनि तत्काल त्यस्तो प्रतिक्रिया भइहाल्दैन थियो होला !

हामी जन्मिएको समाजले, अहिलेसम्म पनि महिलालाई 'व्यक्ति' होइन 'वस्तु' मात्रै ठान्छ; यसको व्यापक प्रयोग साहित्यमा जतातत्तै देख्न पाइन्छ । यसको उदाहरण नेपाली समाजले प्रयोग गर्ने अधिकांश उखान टुक्काहरूमा भेट्न सकिन्छ । साहित्य सिर्जना गर्ने लेखक, कलाकार, अभिनयकर्ता पनि यही समाजको उत्पादन हुन् । उनीहरू ती कुराबाट टाढा कसरी रहन सक्छन् र ?

उदाहरणका लागि एउटा उखान, जुन साहित्यकार हरूले व्यापक रूपमा प्रयोग गर्छन्, 'लुटको धन, फुपूको श्राद्ध'; यो कुराले मेरो दिमागलाई पनि सचेत गराउन सकेको रहेनछ । तीसौँ वर्षदेखि 'महिलाविद्ध हुने ज्यादती, हिंसा र भेदभाव विरुद्धमा कलम र आवाज दुवै माध्यमबाट सर्वसाधारण सामु आवाज उठाउँदै आएको यो दिमागमा उक्त आख्यानले पनि महिलाविरुद्ध भेदभाव गर्दै आइरहेको छ भन्ने तथ्य त दिमागमा घुसेकै रहेनछ ! त्यसबाट आँखा उघारिदिनुभयो इन्जिनियर/साहित्यकार वसन्त गौतमले; उहाँले शालीन शब्दमा लेख्नुभयो,' दिदी, हामीले यस्ता उखान टुक्कालाई हटाउँदै जानुपर्छ, यसले पनि महिलामाथि विभेद गरेको छ । किनभने एउटै आमाबुवाको सन्तान काका र बाबुहरूको श्राद्ध गर्न हुने फुपूहरूको नहुने किन ?' यो प्रसङ्गलाई कोट्याउनुको कारण, हामीले हाम्रो दैनिक जीवनमा जानी/नजानीकनै कति विभेदकारी भाषा, उखान र टुक्काहरूको प्रयोग गर्दारहेछौँ भन्ने प्रमाण पेस गर्नु हो ।

हुन त हो नि, जतासुकै होस्, पढेलेखेका अर्थात् आफूलाई शिक्षितको श्रेणीमा राख्ने हुन् या सडकका भाषा बोल्ने व्यक्तिहरू वा लेखक तथा साहित्यकारहरू नै किन नहुन् उनीहरूको दिमागमा त्यति धेरै मात्रामा विभेदकारी भाषाको प्रयोग गर्दछन्, कहिलेकाहीँ त ती आफूलाई शिक्षित भन्न रुचाउनेहरूले 'साँच्चै शिक्षाको महत्त्व पनि बुझेका होलान् त ?' भन्ने प्रश्न उठाउन मन लाग्छ ।

आमसञ्चारको माध्यमहरूमै लेखेको पढ्न पाइन्छ, "भ्रष्टाचारीका बूढी बहुलाओस् ! अनि प्यारी छोरी पोइला जाओस् !" यस्तो पढेर आउने पिँढीले कस्तो विचार निर्माण गर्छन् होला कस्तो सोच बनाउँछन् होला ?

कुनै भ्रष्टाचारीले गरेको गलत कामको परिणाममा उसको श्रीमती र छोरीलाई किन संलग्न गराउने ? के अधिकांश पुरुषहरूले घुस खानुभन्दा अगाडि 'म घुस खाऊँ कि नखाऊँ ?' भनेर घरसल्लाह गरेका हुन्छन् र ? आख्यान र उक्तिकै प्रसङ्ग उठाउँदा नेपाली भाषामा त्यस्ता थुप्रै उखान– टुक्का छन्, जसलाई लेख, कथा, उपन्यासहरूमा प्रयोग गरिएको पाइन्छ । जब साहित्यमा त्यस्ता कुरा आजसम्म पचिरहेको छ भने आमसञ्चारको माध्यम मात्रै किन अछुतो रहन्थ्यो र ?

आमसञ्चारको साहित्यसँगको अनेक सम्बन्धनमध्ये, लेखकका रचनाहरूको प्रचारप्रसार गर्नु पनि हो; तर यो पक्षमा जति पुरुषहरूको रचनाको समीक्षा, लेख रचना छापिन्छ, त्यसको एक छेउ पनि महिलाहरूको रचना छापिन्न । अर्को भ्रम 'मै हुँ' भन्ने पुरुष साहित्यकार र रचनाकारहरूलाई के पनि छ भने महिलाहरूको लेखाइको स्तर हुँदैन । त्यसैले उनीहरूले त्यो पढ्नयोग्य ठान्दैनन् । त्यो विचारलाई केही हदसम्म आमसञ्चारले प्रतिस्थापन गरिरहेको छ । अहिले पनि देशको नाम चलेका दैनिक पत्रिकाहरूको शनिबार निस्कने परिशिष्टाङ्कहरूको संयोजकमा महिला छैनन् । त्यसैले त्यसमा छापिने लेख रचनामा महिलाका रचना पुरुषको तुलनामा कम छापिन्छन् । महिलाका कृतिहरूको समीक्षा एकदम कम मात्रामा हुन्छ; गरिहाले पनि ठूलै गुन लगाइदिएजस्तो व्यवहार देखाइन्छ । धन्न महिलाहरूले हार मानेका छैनन् र उनीहरू जतिसुकै बाधा, व्यवधानका बाबजुद पनि कलम चलाइरहेछन् ।

हुन त आमसञ्चारले प्रवर्द्धन गरेको साहित्यमा उनीहरूले पनि उत्तिकै स्थान पाउनुपर्ने हो तर समाजका कुन अङ्गले महिलामाथि विभेद गरेका छैनन् र, यहाँ दूधले धोएको व्यवहार खोज्नु ? ■

# मिडिया र साहित्यका कुरा






◆ डा. टङ्क उप्रेती



मिडियाका अन्तर्वस्तुलाई वास्तविक भनिए पनि तिनको उत्पादन प्रक्रियालाई गहिरोसँग हेऱ्यो भने मिडियाका अन्तर्वस्तु पनि कति वास्तविक र सत्य हुन्छन् ? भन्ने प्रश्न सदैव खडा हुन्छ र अनुसन्धानको विषय बन्न आइपुग्छ ।

मिडिया र साहित्य एकअर्काका पूरक मानिन्छन् । मिडियाको अन्तर्वस्तु (कन्टेन्ट)लाई म्याथ्यु अर्नोल्डलगायतका विद्वान्हरूले हतारको साहित्य पनि भनेका छन् । यी दुवैको अन्तर्वस्तुको साझा चारित्रिक विशेषता भनेको सिर्जनात्मक शक्ति नै हो । सिर्जनात्मक ऊर्जालाई साहित्यमा कल्पनाशीलता पनि भनिन्छ र यसबाट सर्जकले कला सिर्जना गरी आफ्नो अभिव्यक्तिलाई प्रभावकारी बनाउँछ । विचार सम्प्रेषणका लागि नयाँपन ल्याउन अभिव्यक्तिको ढङ्गमा नयाँ शैलीको सिर्जना गर्दै सर्जकले साहित्यमा आफ्नो निजत्व विकास गर्दै सिद्धहस्तता प्राप्त गर्दै जान्छ । यसका लागि नयाँ नयाँ विम्ब, प्रतीक, व्याकरणिक संरचना, भाषिक प्रयोगमा नवीन अन्वेषण र प्रयोग आवश्यक पर्दछ । अर्कोतिर मिडियाको अन्तर्वस्तुलाई प्रभावकारी बनाउन अभिव्यक्ति र प्रस्तुतिमा निजत्व ल्याउँदै केही फरकपन ल्याउन सकिन्छ तर परिकल्पनाको प्रयोग अन्तर्वस्तुमा हुनेबित्तिकै त्यसले विश्वसनीयता गुमाउँछ र त्यसको अन्तर्वस्तु कि त अतिरञ्जना कि त प्रोपोगान्डा बन्न पुग्छ । किनकि आम प्रापक (पाठक, श्रोता, दर्शक)हरूको बुझाइमा साहित्यमा परिकल्पना हुन्छ र मिडियामा वास्तविकता हुन्छ भन्ने रहेको पाइन्छ ।

आम प्रापकहरूको बुझाइमा मिडियाको अन्तर्वस्तु वास्तविक हो भन्ने रहे पनि त्यसको विधागत विशिष्टतालाई पनि यहाँ विचार गर्नु सान्दर्भिक हुन्छ । मिडियाका सबै अन्तर्वस्तु वास्तविक हुन्नन् । मिडियाले पस्किने समाचार, समसामयिक अन्तर्वस्तु, नियात्रा, संस्मरण, फिचरलगायतका विषयवस्तु वास्तविक हुन्छन् भने त्यहाँभित्रै रहेका टेलिफिल्म, टेलिड्रामा, उपन्यास अंश, कथालगायतका विधा काल्पनिक हुन्छन् ।

मिडियाका अन्तर्वस्तुलाई वास्तविक भनिए पनि तिनको उत्पादन प्रक्रियालाई गहिरोसँग हेऱ्यो भने मिडियाका अन्तर्वस्तु पनि कति वास्तविक र सत्य हुन्छन् ? भन्ने प्रश्न सदैव खडा हुन्छ र अनुसन्धानको विषय बन्न आइपुग्छ । मिडियाले पस्कने समाचार, समसामयिक अन्तर्वस्तुमा समेत मिडिया संस्थाको स्वामित्व, आय, राजनीतकि स्वार्थ, विभिन्न स्वार्थ समूहको प्रभाव आदिले प्रभावित हुने हुनाले सत्य तोडमोड हुने गर्दछ । समाचारको उत्पादन प्रक्रियालाई सूक्ष्म रूपमा अध्ययन गर्ने हो भने समाचारको छनोट, हेरफेर र प्रतिरूपीकरण जस्ता चरण हुन्छन् । संसारमा सञ्चालनमा रहेका हजारौँ समाचार एजेन्सीमध्ये कुल अन्तर्राष्ट्रिय समाचारको ९० प्रतिशत अंश केवल पाँचवटा ठूला र शक्तिशाली समाचार एजेन्सीहरूले उत्पादन र वितरण गर्छन् । त्यो पनि आफ्नो स्वार्थ, दृष्टिकोण र प्राथमिकताअनुसार । समाचारका लागि योग्य वा समाचार मूल्य भएका ९० प्रतिशतभन्दा बढी समाचारहरू एजेन्सी वा मिडियाको छनोटमा नै पर्दैनन् र ती कहिल्यै पनि समाचारका रूपमा सार्वजनिक हुँदैनन् । छनोटको यो चरणबाट पार पाएका स्वार्थ अनुकूलका समाचारहरूलाई मूल्य अभिवृद्धि गर्न वा थप प्रभावकारी पार्न सत्यलाई स्वार्थ अनुकूल हेरफेर, तोडमोड र पुनर्आकारित



उन्नाइसौँ शताब्दीभन्दा अगाडि मिडिया भन्नाले छापामाध्यम बुझ्नुपर्ने हुन्थ्यो, पछि प्रसारणमाध्यम पनि र अहिले मल्टिमिडिया डिजिटल प्लेटफर्म पनि बुझ्नुपर्ने अवस्था भएको छ । सूचना प्रविधिको तीव्र विकासले मिडियाको प्रकृति र स्वभाव, समाज र मानव संस्कृतिलाई पनि गहिरो प्रभाव पारिरहेको छ । विषयवस्तुका दृष्टिले पनि साहित्य र मिडिया दुवैमा नवीन दृष्टि र अभ्यासहरू पनि समय क्रममा विकसित हुँदै आएका छन् ।



गर्ने चरणमा व्यावसायिक जननशक्तिहरूले काम गर्दछन् र अन्तिम चरणमा सत्यको प्रतिरूप तयार पार्ने कार्य गर्छन् । यसरी आम मानिसले सत्य भनेको समाचार सत्य नभएर सत्यको प्रतिरूप मात्र हो अर्थात् रूपान्तरित सत्यको प्रतिरूप मात्र हो, जुन आर्थिक, राजनीतिक, शक्ति सम्बन्ध, सामाजिक परिवेशअनुसार प्रशोधित गरिएको हुन्छ ।

निःसन्देह साहित्य र मिडिया दुवैको भूमिका मानिसका विचार, अनुभव, अनुभूति, आवेश, प्रतिक्रिया आदिलाई सार्वजनिक गर्दै समाजलाई तीव्र गतिमा रूपान्तरणतर्फ डोऱ्याउनु नै हो । तर यी दुवैले आआफ्नो भूमिका कति प्रभावकारी रूपमा खेल्न सकेका छन् भन्ने प्रश्न सदैव अहम् बनेको छ र आलोचनाको विषय बनेको छ । साहित्यले पनि समाजको ऐना भनेर केवल यथार्थको चित्रण एवं कलाको पुनरावृत्ति मात्र गर्दै आएको तथा कतिपय साहित्यले त रूढीवादलाई पुनर्बल दिँदै समाजलाई प्रतिगमनतर्फ धकेलेको र मिडियाले पनि स्वार्थ समूहको चङ्गुलमा परेर निष्पक्ष भूमिका निर्वाह गर्न नसकेकोमा कटु आलोचना हुँदै आएको छ । दुवैले आवाजविहीनहरूको आवाजहरूलाई निर्णायक ढङ्गले सिर्जनात्मक ऊर्जाका साथ उठाउन सकेको देखिँदैन । बरु सम्भ्रान्त वर्गको हितलाई नै बल पुऱ्याउने गरी आफ्ना अन्तर्वस्तुलाई पस्किने गरेको अनुसन्धानका नतिजाहरूले देखाएका छन् । संस्कृतिको अभिलेखन, प्रवर्द्धन र संरक्षणका नाममा पनि दुवैले वैज्ञानिक दृष्टिले विश्लेषण र प्रस्तुति गर्न सकेका छैनन् ।

अभिव्यक्तिको माध्यम वा मिडियाको कुरा साहित्य र सञ्चारमाध्यमको सन्दर्भमा कुरा गर्दा दुई तह मोडेलको कुरा गर्नु उपयुक्त हुन्छ । प्रथम तहमा मानिसको मस्तिष्कमा विचारको बीज झिल्का सरी प्रस्फुटित हुने र विस्तारै विस्तारित, विकसित हुँदै मूर्तता ग्रहण गर्दछ । त्यसपछि त्यसलाई अभिव्यक्तिका लागि माध्यमको आवश्यकता पर्छ । त्यस्ता माध्यमहरूमा ललितकलाका विभिन्न माध्यमको आवश्यकता पर्छ । त्यस्ता माध्यमहरूमा ललितकलाका विभिन्न माध्यमसहित साहित्य पनि एक प्रभावकारी माध्यम हो, जसका लागि शब्दहरू आवश्यक पर्दछन् । प्रथम तहमा सर्जकले आफ्ना भव, विचार, अनुभूति शब्दहरूका माध्यमले साहित्यमा सिर्जना गर्दछ । अब यस मोडलको दोस्रो तहमा साहित्यलाई आम उपभोक्ता (प्रापक)सम्म पुऱ्याउन प्रभावकारी माध्यम आवश्यक पर्दछ । साहित्यको अन्तर्वस्तुलाई पाठकहरूको विस्तारित संसारसम्म छिटो, छरितो र प्रभावकारी ढङ्गले पुऱ्याउन उपयुक्त सञ्चारमाध्यमको आवश्यकता पर्छ । यसका लागि एक्काइसौँ शताब्दीका सक्षम सञ्चारमाध्यममार्फत तत्काल रचनाहरूलाई लक्षित पाठकसम्म पुऱ्याउने, बहुआयामिक अन्तर्क्रिया गर्ने, पृष्ठपोषण लिने र प्रभाव मूल्याङ्कन गर्नेसम्मको क्रियाकलापहरू गर्न सकिन्छ ।

**तह एक**




**सङ्केत**




मिडिया अभ्यासलाई अध्ययन गर्ने हो भने मूलप्रवाहका सञ्चारमाध्यमले साहित्यलाई आफ्नो मेनुको अपरिहार्य परिकारका रूपमा प्रापकसमक्ष पस्किने गरेका छन् । दैनिक पत्रिकाहरूले सप्ताहान्त परिशिष्टका रूपमा, प्रसारणमाध्यमले विशिष्टीकृत कार्यक्रमका रूपमा अनलाइन पोर्टलहरूले साहित्य मेनुअन्तर्गत विविध विधाका सामग्री पोस्ट गर्नेगरेका छन् ।

त्यसैगरी नेपाली सन्दर्भमा नेपाली साहित्यका विशिष्टीकृत अनलाइन पत्रिकाहरू पनि सञ्चालनमा रहेका छन् । साहित्य र सञ्चारको मूल कार्यहरू सुसूचित गर्ने, सचेतना वृद्धि गर्ने, विचार निर्माण गर्ने आदि हुन् । तर आलोचनात्मक दृष्टिले अध्ययन गर्नुपर्ने, चिन्ता र चिन्तन गर्नुपर्ने कुराचाहिँ साहित्य रचना र सञ्चारमाध्यमले

यी कार्यहरूलाई कतिको गम्भीरतापूर्वक लिएका छन् ? भूमिका निर्वाह गरेका छन् ? भन्ने हो । सर्जक र मिडिया दुवैले प्रापकसमक्ष पस्किने मेनुमा कतिको पोषणयुक्त खुराक सिर्जनात्मक ऊर्जाका साथ रचनात्मक ढङ्गले पस्कन खोजेका छन् भन्ने नै आजको मिडिया र साहित्यको मूल प्रश्न हो ।

साहित्यिक पत्रकारिताको जन्म र विस्तार पनि यही प्रस्तुत मोडेलको दोस्रो तहको उद्देश्य पूर्तिका लागि भएको हो । नेपालका सन्दर्भमा त पत्रकारिताको इतिहास नै साहित्यिक पत्रकारिताबाट भएको पाइन्छ । वि.सं. १९५५ मा प्रकाशित 'सुधासागर' साहित्यिक पत्रिका नेपालको पत्रकारिता इतिहासकै प्रथम प्रकाशन हो, जुन पहिलो अखबार गोरखापत्रभन्दा ३ वर्ष पहिले प्रकाशित भएको थियो ।

उन्नाइसौँ शताब्दीभन्दा अगाडि मिडिया भन्नाले छापामाध्यम बुझ्नुपर्ने हुन्थ्यो, पछि प्रसारणमाध्यम पनि र अहिले मल्टिमिडिया डिजिटल प्लेटफर्म पनि बुझ्नुपर्ने अवस्था भएको छ । सूचना प्रविधिको तीव्र विकासले मिडियाको प्रकृति र स्वभाव, समाज र मानव संस्कृतिलाई पनि गहिरो प्रभाव पारिरहे को छ । विषयवस्तुका दृष्टिले पनि साहित्य र मिडिया दुवैमा नवीन दृष्टि र अभ्यासहरू पनि समय क्रममा विकसित हुँदै आएका छन् । पर्यावरणीय मुद्दा, लैङ्गिक, मानवीय विकास, सामाजिक समावेशीकरण आदि मानवताका गहिरो विचार सँगसँगै उन्नत भएर आइरहेका छन् । साहित्यिक रचना तथा मिडिया अन्तर्वस्तु एवं संरचनामा यी अभ्यास भइ पनि रहेका छन् ।

प्रविधिको तीव्र विकास र यस्तो अभ्यासबाट अनेक जटिलताका साथसाथै सम्प्रेषणमा तीव्रता, अन्तर्क्रियात्मक विशेषतासहित अनेक अवसर सर्जक र प्रापक दुवैलाई प्राप्त भएको छ । यी अवसर हरूको सदुपयोग गर्दै सामाजिक-सांस्कृतिक रूपान्तरणका लागि साहित्य र मिडिया दुवै लाई प्रयोग गर्न सक्नुपर्छ । यसबाट समाजमा सबैको अपनत्व, समन्वय र साझापन, उन्नत विचार, सुसंस्कृति, आधुनिकतासहित मानव कल्याणका नवीन ढोकाहरू खोल्न सकिन्छ । ▪

कविता

# धेरै समय भाँच्चिसकेको रहेछ



◆ उदय निरौला

कस्तो बाटोको चोइटा थियो त्यो
कसैले कलिला हातमा गुलेली भिरायो
र हातका रेखाहरू पुछिदियो
अनि कहिल्यै नउठ्ने गरी सुताइदियो रेखाहरू
आँखाहरू
अनि शरीरका सबै अवयवहरू
त्यसपछि सडकमा कहिल्यै मुस्कुराएको देखिएन गुलमोहर
र देखिएन माथि लेकतिर खुसी उभिएको क्यामेलिया
अनि धुपी सल्लाहरू
धेरै ढिलो भइसकेछ
यतिबेलासम्म शरीर निकै कुरूप भइसकेको रहेछ
पुनः क्यामेलिया उठाउन
धुपी सल्लाहरू उभ्याउन
र सडकका गुलमोहरहरू फुलाउन
धेरै ढिला भइसकेको रहेछ ।
धेरै समय भाँच्चिसकेको रहेछ । ▪

# सिर्जना र स्रष्टाका बारेमा




अनुवाद



◆ खुशवन्त सिंह



दुई पटकसम्म न्युयोर्क टाइम्सका साहित्यफाँटका सम्पादकले मलाई फोन गरेर नइपलबारे एउटा शब्दचित्र तयार गर्न आग्रह गरेका थिए । त्यो वर्ष उनले नोबेल पुरस्कार हात पार्न सक्ने अड्कल भइरहेको थियो । मैले केही सामग्री सङ्कलन गरेँ । तर त्यो प्रतिष्ठित पुरस्कार त्यो वर्ष उनले पाएनन् । त्यतिखेर लाग्दै थियो, नोबेल पुरस्कार अङ्ग्रेजी भाषामा लेखे पनि एसियाली मूलका मिश्रित वर्णका यी लेखकले कहिल्यै पाउने छैनन् ।



**भारतीय लेखक खुशवन्त सिंहको परिचय एकै क्षेत्रमा सीमित छैन । सुरुमा वकालत र पछि कूटनीतिक सेवामा छिरेका उनी भारतको राज्य सभा सदस्यका रूपमा समेत मनोनीत भए । पछिल्लो समय विभिन्न कालमा अङ्ग्रेजी पत्रपत्रिका र साहित्यिक म्यागेजिनका सम्पादकका रूपमा समेत सक्रिय बने । उनको उपन्यास 'ट्रेन टु पाकिस्तान' भारत पाकिस्तान विभाजनको अभिघातमा केन्द्रित छ । यसबाहेक थुप्रै आख्यान र गैरआख्यान लेखेका छन् उनले । उनका लेखनमा तीव्र हास्यचेत, सघन व्यङ्ग्यवाण र यौनलगायतका विषयमा स्पष्ट स्वीकारोक्ति भेटिन्छ । प्रस्तुत लेख उनको आत्मवृत्तान्त 'ट्रुथ, लभ एन्ड ए लिटिल म्यालिस'अन्तर्गत रहेको 'अन राइटिङ एन्ड राइटर्स' अध्यायको नेपाली अनुवादको सम्पादित अंश हो । अनु. गणेश खनिया ।)**

कानुन व्यवसायबाट निजामती सेवा, अध्यापन हुँदै पत्रकारिता र लेखनतर्फ कसरी मोडिएँ भन्नेबारे पहिले पनि मैले उल्लेख गरिसकेको छु । लेखक बन्न के गर्नुपर्छ ? लेखनकार्य आनन्ददायी हुन्छ ? अनि लेखेर गुजारा चलाउन सकिन्छ ? भन्नेबारे तथा मैले चिनेका तथा मलाई प्रभावित पार्ने लेखकहरूबारे मेरो धारणा व्यक्त गर्न भनिएको थियो मलाई ।

स्कुल र कलेजमा खासै राम्रो गर्न नसके पनि मैले सानैदेखि लेखक बन्ने महत्त्वाकाङ्क्षा पालेको थिएँ । स्कुले जीवनमै मैले एउटा उपन्यास लेख्ने जमर्को गरेथेँ, नाम पनि जुराएँ, 'शिला' । रिबनले दुईचुल्ठो बाटेका अनि हाफप्यान्ट लगाएका फुर्तिला केटीहरू देखेर म लट्ठिन्थेँ । तिनैमध्येकी एक मेरी कल्पनाकी नायिका थिई । उसैलाई कल्पेर केही हरफ लेखेँ तर त्यसले गति लिएन । 'शिला' लेखन त्यहीँ अन्त्य भयो ।

कलेजमा पढ्दै गर्दा र पछि बेलायतमा कानुन व्यवसायीका रूपमा रहँदा मेरो लेख्ने चाहनाले मूर्त रूप लिन थाल्यो । कानुनी किताब पढ्दा पढ्दा मलाई दिक्क लाग्थ्यो । तर कविता र आख्यानमा रमाउँथे म । मैले बुझ्दै गएँ, कविता कविमनको स्वतस्फुर्त प्रवाह रहेछ अनि कविता इतरका लेखनका लागि चाहिँ व्यापक अध्ययन र समृद्ध शब्दभण्डार चाहिने रहेछ । किताब पढ्दै गर्दा साथमा शब्दकोश राख्थेँ र नयाँ शब्दको अर्थ खोज्थेँ । बाइबलका हरेक अध्याय केस्रा केस्रा केलाएर पढ्दै गएँ ।

नयाँ बाइबल अलि उपदेशात्मक लाग्यो जबकि पुरानो बाइबल साह्रै काव्यिक पाएँ । त्यतिखेर हल्काफुल्का सामग्री पनि उत्तिकै पढेँ मैले । गाउँले पन्जाबीबाट मध्यमवर्गीय अङ्ग्रेजीभाषी भद्रपुरुष बन्ने प्रयास गर्दै थिएँ म । अङ्ग्रेजी पत्रिका 'दी टाइम्स'को 'क्रसवर्ड पजल' समाधान गर्न घण्टौँ समय लगाउँथे । आफूले पढेका उपन्यासकारमध्ये एल्डोस हक्स्ली र समरसेट मौमबाट धेरै प्रभावित थिएँ म । हक्स्लीको जस्तो वाक्यांश र मौमको जस्तो कुटील र स्तरीय हास्यरस देखेर म भुतुक्कै हुन्थेँ । उनीहरूको जसरी लेखेर पाठकको ध्यानाकर्षण गर्ने लालसा सधैं रहिरह्यो मेरो । वास्तवमा यी कहलिएका लेखकहरूभन्दा बेलायत र अमेरिकामा किताब छापिएका दोस्रो श्रेणीका भारतीय लेखकहरूलाई मैले प्रेरणाको स्रोत मानेँ । मुल्कराज आनन्द, राजा राव, आरके नारायणलाई पढेपछि मलाई लाग्यो–यसरी त म पनि लेख्न सक्छु । उनीहरूका किताब विदेशमा छापिँदा मेरा पनि छापिनेछन् भन्ने लाग्यो । मेरो मूल्याङ्कन पूरै गलत ठहरिएन ।

दोस्रो पटक फेरि बेलायत पुगेँ, वकालती पेसा थालेँ । त्यही अवधिमा लेखनलाई पेसाकै रूपमा अँगाल्नेबारे गम्भीरतासाथ सोच्दै गएँ । चर्चित नारी तथा पुरुष स्रष्टाहरूको साथ र सङ्गत खोज्न थालेँ, उनीहरूका किताब किनेर हस्ताक्षर गराउँथे । फ्राँस्वा मोभियाकका किताबमा उनको हस्ताक्षर गराउन पाएँ साथै उनको तस्बिर पनि खिचेँ । अन्द्रे जिदले उनको महिला सचिवका नाममा छोडेको हस्तलिखित लेखोट भेटेँ । स्टेफन स्पेन्डर, मेरी म्याकार्थी, नर्मन मिलर, कम्टन म्याकेन्जी, ससेभर्ल सिटवेल, डाइलन टमस, रोजामन्ड लेहमेन, स्याम्युएल वेकेटजस्ता लेखकहरूसँग हात मिलाएँ । लेखक पुज्ने यस्तो केटौले रहर केही वर्षपछि मऱ्यो । लेखकलाई चिनेको भरमा कोही लेखक बन्न सम्भव छैन भन्ने छर्लङ्ग भयो मलाई । लेखन त एकान्त कर्म हो । आफैँले हो गर्ने, अरूको सहयोगले केही हुन्न । लेखन दुनियाँमा गुरु–चेला भन्ने कुनै सम्बन्ध हुँदैन । लेखक आफैँले आफैँलाई बाटो देखाउने हो, आफ्नो न्यायाधीश पनि ऊ स्वयं नै हो ।

लन्डनमा रहँदा मेरो 'हिस्ट्री अफ दी सिखस्' छापियो । गुरु नानकका भजन पनि अनुवाद गरी छपाएँ । लन्डनबाट दिल्ली फर्किंदा त मैले 'ट्रेन टु पाकिस्तान' उपन्यास आधाभन्दा धेरै लेखिभ्याएको थिएँ । अर्को एक महिना भोपालमा बसेर यसको बाँकी भाग पनि पूरा गरेँ । त्यसपछिका दुई वर्ष मैले अल इन्डिया रेडियोको बाह्य सेवामा रहेर काम गरेँ । तिनताका निराद सि. चौधरी, रुथ झावभाला र मनोहर मल्गाँवोल्करलाई चिन्ने मौका मिल्यो । उनीहरू मेरा परम मित्र बने । निरादको



दिल्लीका छापाहरूमा हिन्दीभाषी लेखक वात्सायन (अज्ञेय नाममा उनका किताब छापिएका छन्)लाई नोबेल पुरस्कार प्रदान गरेको खबर छापियो । केही दिनपछि थाहा भयो, त्यस वर्ष इजरायली लेखक एग्नोनलाई उक्त पुरस्कार दिइएको रहेछ । वात्सायनलाई यसबारे सोध्दा उनले सरल जवाफ दिए, `एग्नोनलाई अज्ञेय भनेर गलत बुझाइ भएछ ।' मलायलमभाषी कवि कमला दास नोबेलका लागि मनोनयनमा परेको समाचार त मैले छापेँ ।



'एन अटोबायोग्राफी अफ एन अन्नन इन्डियन' भर्खरै प्रकाशित भएको थियो । भारतीय सरकारी वृत्तमा यसले हङ्गामा मच्चाइरहेको थियो किनकि निराद बाबुले यो किताब बेलायती साम्राज्यप्रति समर्पण गरेका थिए । उनको अङ्ग्रेजी भाषामाथिको पकड, बङ्गाली गाउँको मिहिन वर्णन र भारतीय समस्याको चिरफार गर्ने अनौठो शैलीका कारण उनीप्रति आकर्षित थिएँ म । उनी सामाजिक बहिष्कारको सिकार भएको बेला मैले मित्रताको हात बढाएँ । उनले लगत्तै स्वीकारे ।

समसामयिक लेखकमा भीएस नइपल सबैभन्दा माथि छन् मेरा लागि । उनको पहिलो उपन्यास थियो 'ए हाउस फर मिस्टर विश्वास', यसैबाट नइपललाई पढ्न थालेको मैले पनि । क्यारिबियन भूगोलमा नपुगे पनि म निर्धक्क भन्न सक्छु– त्यहाँ रहेका भारतीयमूलका समुदायबारेको आधिकारिक वर्णन थियो त्यो । पात्रहरू सजीव थिए अनि उनीहरूको संवादमा हास्यरस धेरै थियो । अङ्ग्रेजी साहित्यका उदीयमान नक्षत्रका रूपमा उनको ख्याति बढ्दै थियो, लगत्तै उनी आफ्ना पुर्खाको थलो पछ्याउँदै भारत आइपुगे । उनीसँगै थिइन् उनकी बेलायती पत्नी, रत्तिभर खुसी देखिँदैनथिन् उनी । दिल्लीमा आइपुगेपछि उनीहरूले जे देखे त्यसबाट दुवै निराश थिए । भारतपुत्रका रूपमा स्वागत र सम्मान पाउने अपेक्षामा थिए उनी । धेरै भारतीयले उनको प्रशंसा गरेको आफ्नी श्रीमतीलाई देखाउन चाहन्थे शायद । त्यतिखेरसम्म नइपललाई पढ्ने भारतीयहरूको सङ्ख्या साह्रै न्यून थियो ।

म उनीहरूका लागि पथप्रदर्शक बने । मेरा साथीहरूको घरमा पुऱ्याएँ दुवैलाई । केही साथीले नइपलका किताब पढेका रहेछन् । दुवैलाई स्थानीय पुस्तक पसलमा लगेँ । त्यहाँ राखिएका उनका उपन्यासहरू देखाएर

उनलाई उत्साहित पार्न खोजेँ, आफ्ना किताबको बढ्दो माग देखेर हौसिए उनी । सुरज कुण्ड देखाउन लगेँ दुवैलाई । तुग्लाकावाद किल्लाको विशाल पर्खालछेउ हामीले स्यान्डविचको साथमा कफी पियौँ । नजिकै गाउँ थियो, केटाकेटी हामीलाई हेर्न धुइरिए । तिनका कपडा फाटेका थिए, नाकबाट सिँगान बगिरहेको थियो अनि चिप्रे आँखामा झिँगा भुनभुनाइरहेका थिए । ठीक यस्तै वर्णन छ उनको उपन्यास 'एरिया अव डार्कनेस'मा । उपन्यासमा सुरज कुण्डको मनमोहक दृश्यलाई उनले थोरै शब्दमा समेटेका छन् जबकि गाउँका फोहोरी केटाकेटीको लम्बेतान वर्णन छ । काश्मीरका सुन्तले फाँटको वर्णन गर्दा पनि शरदऋतुमा त्यहाँ फुलेका विविध सुन्दर फूलको वर्णनमा भन्दा उनको रुचि त्यहाँका महिलाहरूले फरिया उचालेर दिसा गरिरहेको दृश्यमा ज्यादा केन्द्रित छ । लाग्छ, फोहोर र दुर्गन्धिले नइपललाई बढी नै लोभ्याउँछन् ।

नइपल अलि सन्की पाराका थिए । भौतिक सम्पर्कबाट टाढै रहन्थे । अङ्कमाल गरेर स्वागत गर्न चाहनेबाट पनि परै बस्थे । कसैले उनको तस्बिर खिचेको फिटिक्कै मन पराउँदैनथे । पछिल्ला भारत भ्रमणताका उनको प्रसिद्धि ह्वात्तै बढेको थियो । बाहिर घुम्न जाने र भेटघाट गर्ने खालका निमन्त्रणालाई उनी सहर्ष स्विकाथे ाँ । त्यसो गर्दा उनलाई लेखन सामग्री सहजै मिल्थ्यो । एक पटक मैले पनि उनलाई एउटा पार्टीमा लगेको थिएँ । हामी दुई जना अलि चाँडै पुगेछौँ । एक हुल युवती पर्खालछेउ उभिरहेका थिए । हामी उनीहरूसँग नजीकिन खोज्दैथ्यौँ । तर उनीहरूमध्ये कसैले पनि हामीसँग कुराकानी गर्न चाहेनन् । पछि थाहा भयो, उनीहरू त त्यहाँ भेला हुने व्यापारीहरूको मनोरञ्जनका लागि बोलाइएका केटीहरू रहेछन् । नइपललाई मैले तत्कालीन मन्त्री राम निवास मिर्धासँग पनि भेटाइदिएँ । मिर्धाले उनका सबैजसो किताब पढेका रहेछन् । त्यो साँझ उनी निकै गदगद देखिए ।

दुई पटकसम्म न्युयोर्क टाइम्सका साहित्यफाँटका सम्पादकले मलाई फोन गरेर नइपलबारे एउटा शब्दचित्र तयार गर्न आग्रह गरेका थिए । त्यो वर्ष उनले नोबेल पुरस्कार हात पार्न सक्ने अड्कल भइरहेको थियो । मैले केही सामग्री सङ्कलन गरेँ । तर त्यो प्रतिष्ठित पुरस्कार त्यो वर्ष उनले पाएनन् । त्यतिखेर लाग्दै थियो, नोबेल पुरस्कार अङ्ग्रेजी भाषामा लेखे पनि एसियाली मूलका मिश्रित वर्णका यी लेखकले कहिल्यै पाउने छैनन् । केही पछि बेलायती सरकारले नइपललाई 'नाइटहुड'बाट सम्मान गऱ्यो । तर उनले आफ्नो नामको अगाडि 'सर' कहिल्यै प्रयोग गरेनन् ।

क्रिसमसको समय थियो । मेरा अमेरिकी प्रकाशक बार्नी रोसेटबाट मैले एलेन गिन्सवर्गको कविता सङ्ग्रह 'दी हाउल' उपहार स्वरूप पाएँ । कविताको विष्फोटक शैलीबाट म तरङ्गित भएँ । धन्यवाद ज्ञापन गर्दै उनलाई पत्रमा लेखेँ–गिन्सवर्गवारे अरू जान्न चाहन्छु । केही महिनापछि म अमेरिका पुगेँ, कोलम्बिया विश्वविद्यालयका मेरा प्राध्यापक मित्र जोन ह्याजार्ड र उनकी श्रीमती सुसनकहाँ थियो मेरो बसाइ । मेरा प्रकाशक रोसेटले एक साँझ खानाका लागि ग्रिनवीच होटलमा लगे । उनका अर्का अतिथि थिए एलेन गिन्सवर्ग ।

गिन्सवर्ग फोहोरी र लथालिङ्ग पाराका देखिन्थे । उनी मलाई झस्काउन खोज्दै थिए । भेट्नासाथ प्रश्नको वर्षा गरे, 'हस्तमैथुन गर्छौ ? समलिङ्गी हौ तिमी ? गाँजा तान्छौ तिमी ?' मलाई उनको व्यवहार केटाकेटी पाराको लाग्यो । एउटा चुरोट निकाले, सुर्तीमा सेतो पाउडर मिसाए । अनि जोडले ताने र नाकबाट धुवाँ फाले । 'तिमी पनि तान्छौ ?' उनले सोधे । 'हुन्छ' मैले भनेँ । 'तर मलाई चुरोट तान्ने कसरी थाहा छैन । केही खिली देऊ मलाई । म सुत्नुअघि तान्ने कोसिस गर्छु ।' घर फर्केपछि उनले दिएको चुरोट तान्ने प्रयास गरेँ । चुरोटको धुवाँ कसरी भित्र पुऱ्याउने, मलाई थाहा भएन । लगातार खोकी लागिरह्यो ।

केही वर्षपछि गिन्सवर्ग र उनका साथी पिटर ओर्लोभ्स्की मलाई खोज्दै मेरो दिल्लीस्थित घरमै आइपुगे । खद्दरको कमिज, लुङ्गी र चप्पलमा थिए दुवै जना । लामा लामा दाह्री कपाल थिए दुवैका, साह्रै फोहोरी देखिन्थे । होचा कदका र कालो वर्णका गिन्सवर्ग भारतीयजस्ता देखिन्थे । ओर्लोभ्स्की भने अग्ला र खरानी रङका थिए, भारतीय पोसाक लगाएका विदेशी भनेर उनलाई परबाटै ठम्याउन सकिन्थ्यो । केही महिना उनीहरू मसँग सम्पर्कविहीन रहे । वनारस, पटना, कलकत्ता घुमे । त्यहाँका सबैजसो हिन्दु मठमन्दिरको दर्शन गरे । साधुहरूको सङ्गत गरे, सँगै चिलिममा गाँजा भरेर ताने । लास जलिरहेको घाटछेउ सुते, कविता लेखे अनि समलिङ्गी सम्बन्धमा रहे । उनीहरूको भारत यात्राको धोको बाँकी नै थियो तर भिसाको म्याद सकिन लागेकाले अमेरिकी राजदूतावासमा पुगे । दूतावासले कुनै परिचित भारतीयबाट उनीहरूको असल आचरण झल्काइएको पत्र ल्याउने सल्लाह दिए । उनीहरू मलाई खोज्दै फेरि आए । गिन्सवर्गको दाह्री र जुँघा निकै लामो भइसकेको थियो । ओर्लोभ्स्की पनि उस्तै जुम्से थिए, मात्र उनको छालाको रङ गोरो थियो । यात्राको सबै विवरण सुनाए । सिफारिस पत्रमा उनीहरूले चाहेबमोजिम लेखिदिएँ । उनीहरूको भिसा अवधि लम्बियो । त्यसपछि भारतमा उनीहरू कहिल्यै भेटिएनन् ।

एक समय मैले अमेरिकास्थित प्रिन्सटन विश्वविद्यालयमा पढाएँ, गिन्सवर्गसँग अर्को भेट त्यहीँ भयो । त्यतिबेलासम्म उनी चर्चित बनिसकेका थिए । उनको कविता वाचन सुन्न विद्यार्थीहरूको भीड जम्मा भएको थियो । उनको अभिवादनमा कृतज्ञता त थियो तर उनले मलाई राम्ररी ठम्याउन सकेनन् ।

हालसालै गिन्सवर्गले भारत भ्रमण गर्दा कोरेका कविता छाप्ने अवसर पायो, भारतस्थित पेन्गुइन प्रकाशनले । पेन्गुइनका मेरा मित्रद्वय डेभिड दाविदार र जमिर अन्सारी निकै उत्साहित थिए । अमेरिकी पेन्गुइनबाट पहिल्यै छापिएका यी कविता पुनः छाप्ने काम पेन्गुइन, भारतले निकै सस्तोमा हात पारेको थियो । मेरा साथीहरूले सङ्ग्रहका कविता अनुमोदनका लागि मलाई थमाए । हेर्दै जाँदा गिन्सवर्गले कालीघाटमा लेखेको कवितामा मेरो ध्यान सोहोरियो । त्यो कविताको एउटा अंश थियो : 'हिन्दू देवीहरू सबै वेश्या थिए ।' तुरुन्तै मैले साथीहरूलाई फोन गरेँ । लगत्तै हामीले त्यो अंश हटाउने निधो गर्‍यौँ । सलमान रुस्दीको 'दी सटानिक भर्सेज' छापिएको कारण मुस्लिम कट्टरपन्थीहरू आक्रोशित भएको समय थियो त्यो । रुस्दीले मुस्लिम धर्मगुरु मोहम्मदका श्रीमतीहरूका बारे गरेको टिप्पणीभन्दा कैयौँ गुणा भयानक थियो गिन्सवर्गले हिन्दू देवीहरूमाथि गरेको कटाक्ष । यदि हामीले गिन्सवर्गका कविताहरू जस्ताको तस्तै छापेको भए पेन्गुइनको भारतीय प्रकाशनको त्यहीँ अवसान हुने निश्चित थियो र हाम्रो पनि ।

मकहाँ खासै लेखकहरू आउँदैनन् । तर गृष्मयामको एक दिन हिन्दी आख्यान जगत्का चर्चित दुई हस्ती उपेन्द्रनाथ अश्क र राजेन्द्र यादव मलाई भेट्न आए । उनीहरूको नाम त सुनेकै हो तर कुनै रचना पढेको थिइनँ । हिन्दी साहित्यमा आफ्नो योगदानको चर्चा गर्न दुवै उत्सुक थिए । यादवचाहिँ आफ्नो प्रशंसा आफैँ गर्न अप्ठ्यारो मान्दै थिए । उनी आफ्नी श्रीमती मनु भण्डारीको प्रसङ्ग उप्काउँदै थिए । मनु पनि लेखन क्षेत्रमै थिइन् । उनको उपन्यास 'महाभोज'ले राम्रै प्रशंसा बटुलेको थियो । सिनेमा पनि बन्यो उक्त उपन्यासउपर । एक बिहान हामीकहाँ नास्ताको क्रममा अश्कले मेरी श्रीमतीलाई सुनाउँदै थिए– 'म लेखक बन्नलाई नै जन्मेको जस्तो लाग्छ । अब्बल कथावाचक हुँ म ।' उनले थुप्रै उपन्यास लेखेका छन् । अलाहावादमा उनको आफ्नै प्रकाशन गृहसमेत छ । प्रख्यात लेखक हुनुको बाबजुद उनी अत्यन्तै आर्थिक अभावमा रहे ।

भारतका प्रादेशिक भाषामा कलम चलाउनेहरूसमेत आफ्ना उपलब्धि खुलेरै बखान गर्छन् । उर्दूभाषी लेखक मिर्जा गालिब पनि त्यस्तै थिए । उनी गर्व गर्थे– 'कविता त धेरैले लेख्छन् । तर मेरोजस्तो शैली र विचार कसैको छैन ।' अङ्ग्रेजी भाषामा लेख्ने अरू भारतीय लेखक पनि आत्मप्रशंसामा मग्न छन् । दोस्रो दर्जाका लेखकलाई पुरस्कार दिइन्छ, निर्णायकहरूले तिनका किताबै पढेका हुँदैनन् । राजदूत पदमा तिनकै नियुक्ति हुन्छ अनि माथिल्लो सदन (राज्य सभा) मा पनि तिनैलाई चयन गरिन्छ । यो पद्धतिको विरोध जसले गर्छ उसलाई ईर्ष्यालु भएको आरोप लगाइन्छ ।

अनौठो पक्ष अर्को पनि छ । बेलबेलामा भारतीय लेखकहरू नोबेल पुरस्कारका लागि मनोनयनमा परेको हल्ला चलाइन्छ । एक पटक त्यस्तै भयो । दिल्लीका छापाहरूमा हिन्दीभाषी लेखक वात्सायन (अज्ञेय नाममा उनका किताब छापिएका छन्)लाई नोबेल पुरस्कार प्रदान गरेको खबर छापियो । केही दिनपछि थाहा भयो, त्यस वर्ष इजरायली लेखक एग्नोनलाई उक्त पुरस्कार दिइएको रहेछ । वात्सायनलाई यसबारे सोध्दा उनले सरल जवाफ दिए, 'एग्नोनलाई अज्ञेय भनेर गलत बुझाइ भएछ ।' मलायलमभाषी कवि कमला दास नोबेलका लागि मनोनयनमा परेको समाचार त मैले छापेँ । पछि पश्चाताप भयो मलाई । दासले फोनमा रिसाउँदै र रुँदै मलाई झपारिन् । उनका छोराले त कानुनी पत्र नै थमाए मलाई– माफी नमागे अन्य प्रक्रियामा जाने चेतावनीसहित । पछि त्यो घटना त्यत्तिकै सेलायो ।

दैनिक तथा आवधिक पत्रपत्रिकाको सम्पादकको हैसियत तथा पेन्गुइन–भाइकिङको भारतीय संस्करणको मानार्थ सम्पादक हुनुको नाताले मैले भारतका क्षमतावान् युवा लेखकहरूलाई सक्दो प्रोत्साहन गर्न खोजेको छु । एमजे अकबर, बाची करकारिया यस्तै केही उदाहरण हुन् । पत्रिका, रेडियो र टीभीमा समीक्षा प्रकाशन/प्रसारण गरेर पनि नयाँ लेखकहरूलाई चिनाउने प्रयत्न गरेँ । अमिताभ घोष, उपमन्यु च्याटर्जी, गीता हरिहरण, समा फुतेहाली, एलन सिली, रुकुन अडवानी, रमेश मेनन, मुकुल केशवन, विक्रम सेठ केही यस्ता नाम हुन् ।

लेखनबाट के पाएँ त मैले ? पत्रपत्रिकामा मेरा थुप्रै स्तम्भ लेख छापिन्थे, त्यसबापत मनग्ये रकम आउँथ्यो । प्रकाशित किताबबापतको कमाइभन्दा त्यो बढी थियो । समग्र लेखनबाट मैले धेरै कमाएँ, म कर तिर्नेहरूमध्ये अग्रपङ्क्तिमा थिएँ । कमाइभन्दा लेखकका रूपमा भारतभर जसरी चिनिएँ, पढिएँ, त्यसबाट अझ सन्तुष्टि मिल्यो । कमाइ र प्रसिद्धिका अतिरिक्त लेखनले मलाई पूर्णताको आभाष दिलाएको छ । वकालत, कूटनीतिक सेवा वा अध्यापनमा म रम्न सकिनँ । हरेक दिन केही न केही लेखिरहने बानी परेको छ । हात चलिरहँदासम्म यसरी नै लेखिबस्ने इच्छा छ मेरो । ■

# साहित्य र पत्रकारिताबीचको फरक






◆ बबिता बस्नेत



पत्रकारितामा कसले के लेख्ने, कसको केमा विज्ञता भनेर 'बिट' छुट्याइएको हुन्छ । साहित्यमा सर्जकको मन र मस्तिष्कले जे चाह्यो, त्यही उसको विषय हो । एउटा पत्रकारले समाचार लेख्दै गर्दा आफूले देखेको कुरा पनि सर्सती लेख्न पाउँदैन, पुष्टिका लागि विभिन्न मानिसका भनाइ राख्नुपर्छ । तर साहित्यकारले आफ्ना पात्रहरूमार्फत धेरै कुरा भन्न सक्छ, निर्धक्क सन्देश दिन सक्छ ।



ब्रिटिस कवि तथा समालोचक म्याथु अर्नोल्डले पत्रकारितालाई 'हतारको साहित्य' भनेका थिए । सन् १८५० ताका उनले किन त्यसो भने होला भनेर सोच्दा यसै कारण भन्न सक्ने अवस्था छैन । किनभने पत्रकारिताको विगत र साहित्य दुवैको सम्बन्ध लेखनसँग भए पनि यी दुईबीच विभिन्नताहरू धेरै छन् । पत्रकारिताको सुरुवात अखबारी लेखनबाट भए पनि अहिले यसको दायरा निकै फराकिलो बनिरहेको छ । छापा, विद्युतीय अर्थात् रेडियो टेलिभिजन र अहिले अनलाइन जसलाई नयाँ मिडिया भन्ने गरिएको छ । मिडियाको विकास यति द्रुत तवरले भइरहेको छ कि अहिले नयाँ भनिएको कुरा कुनै पनि बेला पुराना हुन सक्छन् । प्रविधिको विकाससँगै मिडियाको विविधतामा पनि परिवर्तन भइरहेको छ । तर साहित्यमा त्यस्तो ठूलो परिवर्तन आएको छैन । विगतमा जेजस्ता साहित्यको रचना हुन्थे, त्यसैगरी अहिले पनि सिर्जनाहरू पुस्तकका रूपमा प्रकाशित भइरहेका छन् । हिजो अखबार, म्यागेजिन या पुस्तकमा मात्र छापिने रचना अहिले अनलाइनहरूमा प्रकाशित हुन्छन्, कम्प्युटर या मोबाइलमै ई–बुक पढ्न पाइन्छ । त्यो अलग कुरा भयो तर मिडियामा जस्तो सिर्जनाको क्षेत्रमा त्यति धेरै फरक पारेको छैन । प्रविधि र सामाजिक सञ्जालका कारण सिर्जनाहरू सहजै विश्वव्यापी भने बन्ने गरेका छन् ।

मिडिया र साहित्यको कुरा गर्दा यसको उद्देश्य नै फरक छ । पत्रकारिताको उद्देश्य कुनै पनि कुरामा सर्वसाधारणदेखि नीति निर्मातासम्मलाई झकझक्याउनु, नीति नियम तथा तिनको कार्यान्वयनमा के भइरहेको छ ? हुनुपर्ने के थियो, के भयो ? किन भयो ? किन भएन ? लगायतका कुरामा प्रश्न गर्नु र सार्वजनिक जानकारी दिनु हो । मिडियाले कुनै पनि विषयमा सूचना प्रवाह गर्छ, शिक्षा र मनोरञ्जन दिन्छ । पत्रकारितामा कम्तीमा पाँच 'क' कहाँ ? कहिल ? को ? किन ? कसरी ? हुनै पर्छ । पत्रकारिता सत्य तथ्यमा आधारित हुन्छ, पाँच 'क' साहित्यमा पनि आवश्यक हुन्छ तर कल्पना गरेर लेख्न पाइन्छ, मिल्छ । साहित्य तथ्यमा आधारित भए पनि हुन्छ तर हुनै पर्छ भन्ने छैन । पत्रकारितामा नाम, थर तल माथि पर्दा अप्ठ्यारो परिस्थिति आउन सक्छ, साहित्यमा सोची सोची आफ्नै हिसाबले पात्रको चारित्रिक विशेषता अनुरूप नाम राख्न पाइन्छ । पत्रकारितामा विश्वसनीयता, सत्यतालगायतका कुरा महत्त्वपूर्ण हुन्छन् । साहित्यमा विश्वासै लाग्न गाह्रो हुने कुरा पनि कल्पना गर्न पाइन्छ । तथापि साहित्यलाई समाजको ऐना मानिने हुँदा आफू र समाज वरिपरि हुने कुरा नै साहित्यमा लिपिबद्ध गरिन्छ । पत्रकारितामा 'इथिक्स अर्थात् संहिताको पालना गर्नु पर्छ । साहित्यमा के लेख्ने, के नलेख्ने बन्धन छैन । सिर्जनालाई विश्वमा कतै पनि संहिता लागू गरिएको छैन । कस्तो सिर्जना पस्कने व्यक्ति आफैँमा भर पर्छ । आफ्नो सिर्जनाको उत्तरदायित्व साहित्यकार आफैँले लिनुपर्छ । जुन निकै महत्त्वपूर्ण र चुनौतीपूर्ण कार्य हो । आफूले आफैँलाई संहितामा बाँधेर पठनीय रचना गर्ने भएकाले साहित्यकारहरूको संसार निकै फराकिलो हुन्छ, छ ।

पत्रकारितामा कसले के लेख्ने, कसको केमा विज्ञता भनेर 'बिट' छुट्याइएको हुन्छ । साहित्यमा सर्जकको मन र मस्तिष्कले जे चाह्यो, त्यही उसको विषय हो । एउटा पत्रकारले समाचार लेख्दै गर्दा आफूले देखेको कुरा पनि सर्सती लेख्न पाउँदैन, पुष्टिका लागि विभिन्न मानिसका भनाइ राख्नुपर्छ । तर साहित्यकारले आफ्ना

पात्रहरूमार्फत धेरै कुरा भन्न सक्छ, निर्धक्क सन्देश दिन सक्छ । साहित्यमा कलात्मक प्रस्तुतिको महत्त्व हुन्छ, पत्रकारितामा प्रस्तुति र शैली महत्त्वपूर्ण भए पनि सूचना र जानकारी ठूलो कुरा हो । पत्रकारले आफ्नो समाचार सुरु गरेपछि सकुन्जेलसम्म सम्बन्धित विषयमा मात्रै जानकारी राखेपुग्छ । साहित्यकारले आफ्नो सिर्जना सुरु गरेपछि आफैँले खडा गरेको पात्रका बारेमा अनेकौँ कोणबाट सोच्नु पर्छ । उसको प्रवृत्ति केलाउनुपर्छ, पात्रलाई जीवन्त रूपमा पाठकसामु राख्नका लागि ऊ आफैँ पात्र बनेर पात्रको भूमिका अनुरूप आफू रुनु, हाँस्नु, अप्ठ्यारो अवस्थाबाट गुज्रनु या सहज परिस्थितिको उपभोग गरेको महसुस गर्नुपर्ने हुन्छ, गर्न सक्छ । एउटा साहित्यकारले सिर्जनाको सुरु गरेपछि नसकुन्जेल आफूभित्रको द्वन्द्वबाट गुज्रनुपर्छ । यसो होला कि, त्यसो होला कि, यो पात्रलाई के ख्वाउने, के लाउँदा सुहाउला, कसरी बोल्दा ठीक होला... उसको हाउभाउ, कुराकानी गर्ने शैली सबैमा आफैँ डुब्नुपर्ने हुन्छ ।

उदाहरणका लागि म आफ्नै अनुभव यहाँहरूसँग राख्छु । 'मन्त्री पत्नीको एक साँझ' (जो पत्रिका र अनलाइनमा प्रकाशित छ) कथा लेख्दा म केही दिनसम्म साह्रै अप्ठ्यारो परिस्थितिबाट गुज्रिएँ । कथामा मन्त्रीकी पत्नीले आफ्नो विगतका बारेमा केही बोल्नुपर्ने अवस्था ल्याउन मैले कथामा एउटा पार्टीको आयोजना गरेँ । जाडोको महिना भएकाले मन्त्री निवासको कम्पाउन्डमा आगो बालिएको थियो, मानिसहरू 'ड्रिङ्क'मा रमाइरहेका थिए । मन्त्री पत्नी एक्लै आगो तापेर बसिरहेको बेला उनको हातमा वाइनको ग्लास राखिदिन मलाई निकै सोच्नु पर्‍यो । ग्लास राखिदिऊँ अर्कै सन्देश जाला, नराखिदिऊँ उनलाई भावुक कसरी बनाउने ? त्यत्तिकै एक्कासि आफ्नो कुरा कसले सेयर गर्छ ? त्यो माहोल र वातावरण बनाउन मलाई निकै गाह्रो भएको थियो । यस्ता परिस्थिति साहित्य सिर्जना गर्दा पटक पटक महसुस गरेकी छु ताकि समाचार या लेख लेख्दा त्यति धेरै सोच्नै पर्दैन । आफूसँग जे जानकारी छ त्यसैलाई मिलाएर लेख्दा हुन्छ । एउटा पत्रकार र साहित्य सर्जकका रूपमा आफूलाई राखेर हेर्दा पत्रकारिताभन्दा साहित्य सिर्जना मलाई बढी कठिन लाग्छ ।

मानौँ, कुनै ठाउँमा दुर्घटना भयो । एउटा पत्रकारको रूपमा समाचार लेख्दा उक्त घटनास्थलमा पुगेर दुर्घटनामा को पर्‍यो ? के कारणले भयो ? कसरी भयो ? कसले देखे ? दुर्घटना हुनको पछाडि बाह्य पक्षको हात छ कि छैन ? सबै जानकारी लिएर यदि रगताम्ये भएको रहेछ भने रगताम्य उसको शरीरको वर्णन गर्दै समाचार लेख्नुपर्छ । तर एउटा साहित्यकारले त्यस्तै प्रकारको दुर्घटनाको दृश्य खडा गर्नका लागि ती सबै कुराको कल्पना गर्दै आफूलाई र गताम्य भएको महसुस गर्नुपर्ने हुन्छ । आफ्नै परिकल्पनाले आफूलाई दुखाउनु पर्नेहुन्छ । पत्रकार शारीरिक रूपले पनि त्यतिकै सक्रिय हुनुपर्छ भने साहित्यकारले बसीबसी कल्पना र कलममार्फत धेरै कुरा लेख्न सक्छ ।

पत्रकारको भौतिक दुःख बढी छ, साहित्यकारको मानसिक र भावनात्मक दुःख धेरै हुन्छ । सुख र खुसीका क्षणमा पनि एउटा साहित्यकारले आफू गदगद हुँदै अनेकौँ माहोल तय गर्न सक्छ । एक्लै मुस्कुराउन सक्छ, खुलेर हाँस्न र आहा... को अनुभूति पनि गर्न सक्छ । त्यसैले पनि साहित्यकारहरूलाई मानिसले अलि फरक खालको मान्छेका रूपमा परिभाषित गर्छन् । साहित्य सिर्जना गर्दा समय र आफ्नै कतिपय परिस्थितिको ख्याल नै हुँदैन । आफैँ कमाउनुपर्ने, व्यावहारिक कुरा धान्नुपर्ने मानिसलाई साहित्य सिर्जना गर्न त्यति सहज हुँदैन । तर घर व्यवहार धान्ने खालको या भनौँ पैसा कमाउने काम गरिएन भने हाम्रो समाजमा आफ्नै परिवारका सदस्यबाट 'तिमीले के गरेका/गरेकी छौ र ? कथा, कविता या किताब मात्रै लेखेर के हुन्छ ?' भन्ने अवस्था बन्छ । सिर्जना कति ठूलो कुरा हो भनेर सबैलाई बुझाउन सकिँदैन । त्यसैले कति साहित्यकारहरूले आफ्नै मान्छेबाट अपहेलित जीवन बिताउनुपर्ने परिस्थिति बनिरहे को हुन्छ ।

साहित्यमा प्रभावकारी रचना थोरै लेखे पनि कालजयी हुन सक्छन् तर पत्रकारिता प्रायः आफूले गरुन्जेलका लागि मात्रै होजस्तो भएको पाइन्छ । विश्वका कुनै समयका चर्चित पत्रकारहरूका नाम लिन गाह्रो छ तर सदियौँअघिका चर्चित साहित्यकारको नाम अमर छ । तिनका कृतिका पुनः संस्करणहरू पनि प्रकाशित भइरहन्छन् तर पत्रकारितामा त्यस्तो हुँदैन । यद्यपि हिजोआज इन्टरनेटका कारणले कसैको जीवनी या लेखन भेट्न सहज भएको छ । तर विश्वमा विगतमा चर्चा कमाएका पत्रकारले के लेखेका थिए ? भनेर सामग्री पाउन गाह्रो छ । हामीकहाँ नै हेर्ने हो भने पनि गुरुप्रसाद मैनालीले जम्मा ११ वटा कथा लेख्नुभयो । विसं २०२६ सालमा प्रकाशित उहाँको कथा सङ्ग्रह 'नासो'को कैयौँ संस्करणहरू प्रकाशित भइरहेका छन् । करिब उहाँकै पुस्ताबाट पत्रकारिता सुरु गरेका पत्रकारहरूले लेखेका कुराको खासै चर्चा हुँदैन । खोज, अनुसन्धान गर्नेहरूका लागि बाहेक अरूको चासो को विषय पनि बन्दैन ।

एउटा पत्रकारको आँखाले हेर्दा जिन्दगीका सीमितताहरू धेरै छन् । जिन्दगीको मात्र होइन आकाश पनि सीमित छ । रेडियो, टेलिभिजनका फ्रिक्वेन्सीको दृष्टिकोणले हेर्दा अकाश सीमित छ । अहिले नै धेरै रेडियो टेलिभिजन भएका कारण हाम्रो फ्रिक्वेन्सी वितरणमा समस्या आउन सुरु भइसकेको छ । तर एउटा साहित्यकारको दृष्टिमा आकाश असीमित छ । कहाँदेखि कहाँसम्म हेर्ने ? जहाँ गए पनि धर्तीका रूपहरू बरु तराई, हिमाल, पहाडका रूपमा फरक छन् तर आकाश जहाँ पनि छ र उस्तै छ । आकाशको कुनै सीमा छैन । यसैगरी जिन्दगीलाई कता लाने ? के गर्ने ? कस्तो बनाउने ? मान्छेको मनमा के कुरा खेलाइदिने ? मस्तिष्कमा के कुरा सोच्ने बनाइदिने ? साहित्यकारका लागि आफ्नै हातमा छ, जुन कुरा पत्रकारले कहिल्यै गर्न सक्दैन । त्यस्तो गर्न थाल्यो भने उसले गरेको काम पत्रकारिता हुँदैन । ■

# स्रष्टा तारिणी : सङ्क्षिप्त विवेचना



समिक्षा



◆ शिवप्रसाद भट्टराई



उनले निर्देशक, उद्घोषक, समाचार लेखन, प्रकाशक र समाचारवाचकको काम पनि गरेका छन् । उनी विद्युतीय सञ्चारमाध्यमबाट समाचार वाचन गर्ने पहिलो व्यक्ति हुन् । यस क्रममा उनलाई निर्देशक र उद्घोषण क्षेत्रकै पहिलो व्यक्तित्वका रूपमा पनि लिइने गरेको पाइन्छ ।



नेपाली समाजमा तारिणीप्रसाद कोइराला (वि.सं. १९७९–२०३१) मूलतः राजनीतिक व्यक्तित्वको रूपमा सुपरिचित छन् । काठमाडौँका जेलहरूमा लामो समयावधिसम्म राजनीतिक बन्दीका रूपमा कष्टमय जेलजीवन व्यतीत गर्न विवश भएका उनले यो क्षेत्रमा अनेकौँ योगदान दिएका छन् । यस क्रममा विसं २००७ सालको जनक्रान्तिताका विराटनगरमा भएको मजदुर आन्दोलनको कमान्डको नेतृत्वको भूमिका अनि यसअघि देशमा बस्नै नसकिने किसिमको स्थिति सिर्जना गरिएका कारण विदेशमा लामो समयसम्म निर्वासित जीवन बिताउनुपरेको अवस्थामा पनि नेपालमा राजनीतिक परिवर्तनको आवश्यकता बोध गरी यस क्षेत्रमा उनले आफ्नोतर्फबाट दिनसकेको योगदान अविस्मरणीय रही आएको छ । देशमा स्वतन्त्रता र समान अवसर प्राप्तिका सन्दर्भमा स्वतन्त्र र स्वस्फूर्त आन्दोलन आरम्भ गर्ने प्रयोजनका लागि जनमानसलाई तयार गर्ने क्रममा उनले निर्वाह गरेको भूमिका अनि उनकै जीवन–सङ्घर्षका विविध आयाम र प्रसङ्गहरूका सम्बन्धमा भने सही सोधखोज र त्यसको विश्लेषणका आधारमा उनको समुचित मूल्याङ्कन भने अझै हुन सकेको पाइँदैन । यसका अतिरिक्त उनले नेपाली साहित्यको क्षेत्रमा आफ्ना कृतिहरूका माध्यमबाट नेपाली राजनीतिका क्षेत्रमा दिएको योगदानभन्दा पनि बढी महत्त्वपूर्ण स्थान सुरक्षित गर्न सकेको यथार्थको पनि अझै सही मूल्याङ्कन हुन सकेको पाइँदैन ।

तारिणीप्रसाद कोइराला पत्रकार पनि थिए । उनले पत्रकारिताको क्षेत्रमा पनि सक्रिय भूमिका निर्वाह गरेका छन् । 'दियालो', 'झङ्कार', 'उज्यालो', 'कल्पना', 'आँधी' नामका विविध साहित्यिक र दैनिक पत्रपत्रिकाहरूको सम्पादनका क्रममा उनले आफ्नो पत्रकार–व्यक्तित्वको यथेष्ट परिचय दिएका छन् । यसका माध्यमबाट सामाजिक मूल्य, मान्यता र आदर्श, यसप्रतिको नागरिक कर्तव्य अनि सत्यप्रतिको निष्ठाभाव आदिका पक्षमा उनले निर्भयपूर्वक कलम चलाएका छन् । पत्रपत्रिकाहरूमा उनका यससम्बन्धी विविध विचार–प्रधान लेखहरू प्रकाशित छन् । 'प्रजातन्त्र रेडियो'को संस्थापक भई यसको प्रसारण, विकास र विस्तारमा उनले निर्वाह गर्नसकेको भूमिका अविष्मरणीय रही आएको छ । आजको 'रेडियो नेपाल' यसकै विकसित रूप हो ।

नेपाली साहित्यको विविध विधामा पनि तारिणीप्रसाद कोइरालाले सार्थक योगदान दिनसकेको पाइन्छ । विविध पत्रपत्रिकामा उनका कथा, एकाङ्की, लेख आदि प्रकाशित छन् । उनले अनेकौँ गीत लेख्नुका साथै गाएका पनि छन् । खासगरी कथा र उपन्यास क्षेत्रका उनी एउटा सशक्त हस्ताक्षर अनि अविष्मरणीय स्रष्टा हुन् । बन्दी जीवनका क्रममा अधिकांश कृतिहरूको सिर्जना गर्ने तारिणीप्रसाद कोइरालाका 'सर्पदंश' (२०२६), 'रातो स्वेटर' (२०३८), 'फालिएको सामान' (२०४२) 'नैनी' (२०५६), 'अग्निवाटिका' (२०६८), 'तारिणीका कथा' (२०६९) शीर्षकको कथा सङ्ग्रह र 'तारिणीका कविता' (२०७१) नामक कविता सङ्ग्रह जस्ता मैलिक कृतिहरू प्रकाशित छन् । उनका विद्यार्थीहरूलाई 'महात्मा गान्धी' र 'चित्रलेखा' नामक दुईवटा अनुवादात्मक कृति पनि प्रकाशित छन् ।

'सर्पदंश' उत्कृष्ट बाल–उपन्यास हो र यो उनको प्रकाशित पहिलो कृति पनि

हो । यो उपन्यासमा बाल–संसार छ र यसमा उनीहरूको मनोवैज्ञानिक यथार्थको चित्रण छ । नेपाली साहित्य संसारमा उनको यो पहिलो औपन्यासिक कृति अमूल्य साहित्यिक धरोहरको रूपमा स्थापित छ । यसलाई तारिणीप्रसाद कोइरालाको उच्च कोटीको अद्वितीय बाल मनोविश्लेषणात्मक उपन्यासको रूपमा लिन सकिन्छ । बाल–साहित्यको इतिहास लेख्ने वा यससम्बन्धी अध्ययन–अनुसन्धान गर्नेहरूले यो उपन्यासलाई पृथक् राखेमा बाल–साहित्यप्रतिको न्याय मान्न सकिँदैन । किनभने यो उपन्यासमा खासगरी आठदेखि एघार वर्ष उमेर समूहका बालबालिकाको मनस्थितिको सूक्ष्म विश्लेषण गरिएको छ । यसमा उनीहरूका विविध स्थिति र संसारको चित्रण छ । यसका मूल पात्र कम्मु (दाजु) र निम्मी (बहिनी) हुन् । दुई मूल पात्रका साथै बेलरिया, फूलवती, मखमली, पहाडिया, सन्तु, डल्ली, रजिया, माइली, भाइचा, निमेष आदि विविध बाल–पात्रहरूको बेग्लाबेग्लै मनोविश्लेषण गरिएको यो उपन्यास एउटा उच्च कोटिको बालमनोवैज्ञानिक उपन्यासका रूपमा देखा पर्दछ । यसमा बाल क्रियाकलाप अनि बाल–रुचिहरूमा आधारित उनीहरूको बाल–संसार छ । यही बाल संसारमा उनीहरू रमाउन चाहन्छन् । तर सामाजिक परिवेश र परिस्थिति उनीहरूको बाल–स्वर्ग विपरीत भएर उभिदिन्छ । उनीहरूका इच्छा, आकाङ्क्षा, चाहना आदि सबै पक्ष कुन्ठित हुन पुग्छन् ।

यसरी बालबालिकाको सुख र दुःख, आशा र निराशा, यथार्थ र कल्पना आदि विविध पक्षको मनोवैज्ञानिक चिरफार यो उपन्यासमा गरिएको छ । विविध बाल पात्रहरूको चरित्र चित्रणका माध्यमबाट बाल–जीवनका विविध बृहत्तर सामाजिक परिवेशको विश्वसनीय वर्णन पनि उपन्यासमा छ । बालबालिकाको चेतनास्तर र उनीहरूका कल्पना र विविध सन्दर्भहरू उपन्यासभित्र सर्वत्र विद्यमान छ । बाल–जीवन र उनीहरूका विविध आरोह–अवरोहको सूक्ष्म विश्लेषण उपन्यासले गरेको छ र यी सबै पक्ष विश्वसनीयता र सहजताको गुणबाट टाढिएका छैनन् । औपन्यासिक लेखनको कलात्मक प्रतिभा तारिणीप्रसाद कोइरालाको यो उपन्यासमा पाइन्छ । यसै कारणले गर्दा पनि कोइरालाको 'सर्पदंश' उपन्यासलाई एउटा अनुपम र अभिनव कृतिका रूपमा आत्मसात् गर्न सकिन्छ ।

कतिपय समीक्षकहरूले यो उपन्यासलाई यौनिक विषयवस्तुमा आधारित उपन्यासका रूपमा पनि लिएका होलान् तर यसमा रतिरागसँगसम्बन्धी यौनिक क्रिया–प्रक्रिया र तन्नेरीपनको वर्णन–बाहुल्यता छैन । न्याउरी मुसाको दुलोमा हात हाल्नु, सुगन्धको पछाडि दौडनु, कम्मुले दिदीको छातीमा राम्ररी टाउको लुकाउनु र कपाल सुङ्नु, विविध किसिमका स्पर्शहरूको अनुभव गर्न खोज्नु आदिलाई यौनिकतासँग दाँजेर हेर्नु त्यति स्वाभाविक पनि हुँदैन । माथि नै भनियो, उपन्यासमा आठदेखि एघार वर्ष उमेर समूहका बालपात्रहरूको स्वाभाविक चरित्र चित्रण छ । उनीहरूमा विविध किसिमका बालसुलभ जिज्ञासा र कौतूहल पनि छ । यसमा विभिन्न बाल–पात्रहरूका मनोविज्ञानसम्मत विविध किसिमका तार्किक बहस र आआफ्नै किसिमको निष्कर्ष पनि छ । बाच्छीलाई अँगालो हालेर "भोक लाग्यो नानीलाई ?" भन्नु अथवा विविध रङलाई लोभलाग्दो आँखाले हेर्नु, आमाको काखमा बस्दा अपार आनन्दको अनुभव गर्नु, दिदी (सरिता)को कपालको चुल्ठो समाउन पाउँदा रमाउनु, खसी काट्न लागेको देखेर त्यसलाई हेर्न नसक्नु आदि विविध प्रसङ्गहरू बालसुलभ प्रवृत्तिहरू हुन् । विविध विषयमा जिज्ञासा राख्नु, तर्क गर्नु प्रश्नमाथि प्रश्न गर्दै जानु आदि पनि बाल प्रवृत्ति नै हो ।

उपन्यासका ठाउँठाउँमा प्रकृतिको रमणीय वर्णन पाइन्छ । निम्मी र कम्मु पनि प्रकृति र पुरुषका प्रतीक हुन् । प्राकृतिक रूपमा नै पाइने यिनका भिन्न स्वभाव र क्रियाकलापलाई प्रकृति चित्रणका माध्यमबाट प्रष्ट्याउने जमर्को पनि उपन्यासले गरेको छ । कम्मु मानव र मानवेतर सबै किसिमका प्राणीहरूका क्रियाकलाप गहिरिएर अवलोकन गर्छ । प्रकृतिका विभिन्न प्राकृतिक परिदृश्य, पदार्थ र तिनका क्रियाकलापमा रमाउने कम्मु यसैमा स्वर्गीय आनन्दको अनुभव र अनुभूति पनि प्राप्त गर्दछ । यो स्वतन्त्रता र उसको स्वत्वमाथिको आक्रमण ऊ कदापि मन पराउँदैन । पिसाब फेर्दा प्रकृति र पुरुषबीच पाइने ध्वनिका अन्तरहरूका सम्बन्धमा समेत कम्मु र निम्मीले बालसुलभ विचार–विर्मश गरेका छन् र "तिम्रो सानो प्वाल छ त्यसैले मेरो जस्तो पिसाब छरिँदैन मेरो चाहिँ ठूलो छ त्यसैले छरिन्छ र फिँज पनि निस्कन्छ" भन्ने निष्कर्ष निम्मीले निकालेकी छे । गाईको दूध दुहँदा निस्कने ध्वनि–तरङ्गहरूप्रति आकर्षण र गाईको गोबर हातमा थाप्दा भएको बेग्लै किसिमको अनुभव आदिका अनेकौँ प्रसङ्गमा पनि बालसुलभ जिज्ञासु प्रवृत्ति नै प्रखर बनेर उभिएको छ । यो प्रवृत्तिमा बाल–जीवन र जगत्बीचको सम्यक् चित्रण पाइन्छ ।

बालबालिकाहरू स्वभावैले चञ्चल हुन्छन् । 'सर्पदंश' उपन्यासमा अभिभावकहरूले विशेष रूपमा रेखदेख गर्नुपर्ने उमेर समूहका चञ्चल बालबालिकाहरूको बाहुल्य छ । यिनै बालबालिकाहरूको मनस्तत्वको बहुआयामिक विश्लेषण कथाकार कोइरालाले गरेका छन् । यसका माध्यमबाट कथाकारले बालबालिकाको मस्तिष्कलाई उर्ध्वगामी व्यक्तित्व–विकासका मार्गमा प्रवृत्त गराउन अग्रसर हुनुपर्ने आवश्यकतामा प्रकाश पार्दै उनीहरूका यावत् समस्याहरूलाई बाल–मनोविज्ञानसम्मत रूपमा समाधान गर्न सबै जागरुक हुनुपर्ने सन्देश दिएका छन् ।




बालबालिकालाई यस दिशामा अग्रसर गराउनुभन्दा जानेर वा नजानेर पनि उनीहरूका भावनामा चोट पुऱ्याउने र उनीहरूको व्यक्तित्वलाई कुन्ठित र खण्डित तुल्याउने दिशामा कतै हामी परिचालित त भइरहेका छैनौ ? भन्नेतर्फ राम्रो हेक्का राख्न सक्नुपर्ने आवश्यकतामा उपन्यासले मनग्य प्रकाश पारेको छ ।

वास्तवमा बालबालिकाको विकास उनीहरूको वरिपरिको वातावरणमा नै निर्भर गर्दछ । वातावरण नै सबै कुराको उपज पनि हो । किनभने उसले जे–जस्तो किसिमको वातावरण पाउँछ तदनुरूप नै उसको चरित्र निर्माण हुँदै जान्छ । 'सर्पदंश' उपन्यासले यही मनोवैज्ञानिक सिद्धान्तहरूलाई राम्ररी आत्मसात् गरेको पाइन्छ । यसकै सापेक्षतामा बालबालिकाको मनस्थिति, आजको वातावरण र परिवेशको तुलनात्मक विवेचना उपन्यासले गरेको छ । बालबालिकाको मानसिक स्तरको सही विकास र उनीहरूको मनोबल उँचो उठाउन व्यवहारवादी मनोवैज्ञानिक सिद्धान्तलाई आत्मसात् गर्दै अघि बढ्नुको विकल्प पनि छैन । यही यथार्थमाथि राम्ररी दृष्टिपात गरिएको 'सर्पदंश' उपन्यासले बालबालिकाको पारिवारिक परिवेश, उनीहरूका आशा–निराशा, उनीहरूका बीच पाइने विविध किसिमका विषमता, अन्तर्द्वन्द्व, मानसिक उद्वेग, प्रकृतिप्रतिको आकर्षण, आफूभन्दा ठूलालाई हेर्ने दृष्टिकोण आदिलाई उनीहरूकै मनस्थिति र मनोदशाका माध्यमबाट केलाउने समीचीन प्रयास गर्न सकेको पाइन्छ ।

'सर्पदंश' आफैँमा एउटा वियोगान्त उपन्यास हो । प्रारम्भदेखि नै पाठकलाई आफूतिर तान्न सफल यो उपन्यासको अन्त्य निकै हृदयविदारक छ, जसले पाठकको मनस्थितिलाई निकै नराम्ररी खलबल्याउन पुग्छ । निम्मी कम्मुका प्रति जहिले पनि सहयोगी भावना राख्छे । कम्मु विविध किसिमका दुलामा हात घुसार्न पाउँदा निकै रमाउने गर्थ्यो । दाजुको यो भावनालाई बुझेकी बहिनी निम्मी कम्मुका लागि न्याउरी मुसोले बनाएको नयाँ–नयाँ दुलो खोजिदिने गर्थी । यसै क्रममा एक दिन एउटा दुलोमा हात घुसार्दा दुलोभित्र बसिरहेको सर्पले कम्मुको हातमा टोकिदिन्छ । यसको विषको प्रवाहकै कारण कम्मुको हृदयविदारक किसिमले मृत्यु हुन्छ । निम्मुको मनमोहक बाल–स्वर्ग अकस्मात् र अप्रत्याशित रूपमा नराम्ररी उजाडिन पुग्छ । ऊ कम्मुको मायाबाट पृथक् हुनुपर्दा निकै नै विचलित हुन्छे । निम्मीको मनोदशाको मनोवैज्ञानिक किसिमले शल्यक्रिया गर्दै उपन्यासकारले 'सर्पदंश' उपन्यासको उपसंहार गरेका छन् । उपसंहार निकै मार्मिक छ र यसले लामो समयसम्म पाठकको मनमा विविध किसिमका उद्वेग सञ्चार गराउने सामर्थ्य पनि बोकेको छ ।

तरिणीको जीवनकालमा उनले लेखेका यही एउटा 'सर्पदंश' नामक औपन्यासिक कृति मात्र प्रकाशमा आएको पाइन्छ । यसले नै उनलाई नेपाली साहित्यको क्षेत्रमा चर्चाको शिखरमा पुऱ्यायो । उनका जीवनकालपछि प्रकाशित हुन पुगेका अन्य औपन्यासिक र कथात्मक कृतिहरूमा भने यौन–मनोविज्ञानको सूक्ष्म विश्लेषण गरिएको पाइन्छ । मानिसभित्र लुकेर बसेका विविध किसिमका मनोभावहरूको मनोवैज्ञानिक शल्यक्रिया गरी त्यसलाई प्रकटीकरण गर्ने सामर्थ्य उनका उपन्यास र कथाकृतिहरूले राखेका छन् ।

'नैनी' महाकाव्य पनि उनको एउटा सुन्दर सिर्जना हो । अशान्त मनमा शान्तिको सञ्चार गराउन र मनमा विश्वासको भावना अभिवृद्धि गर्ने कार्यमा पनि अत्यन्त सफल कृतिका रूपमा देखा पर्दछ । यो कृति र 'तारिणीका कविता' शीर्षकको कविता सङ्ग्रहले जीवनको अर्थ र अस्तित्व कुनै पनि स्थितिमा खतरायुक्त हुनु हुँदैन भन्ने उनको विचारको प्रतिनिधित्व गरेको छ । यी दुवै कवितात्मक कृतिले उनीभित्रको कवि व्यक्तित्वको राम्रो परिचय दिन सकेको छ । 'विद्यार्थीका लागि महात्मा गान्धी' शीर्षकको अनुवादात्मक कृति महात्मा गान्धीको सादा जीवन, उच्च विचार, नैतिक मूल्य, मान्यता र आदर्श आदिका माध्यमबाट छात्रछात्राहरूको चरित्र निर्माण गर्ने उद्देश्यले प्रकाशित हुन पुगेको पाइन्छ । यही कारणले गर्दा यो अनुवादात्मक कृतिको पनि एउटा बेग्लै महत्त्व र स्थान सुरक्षित छ । त्यसैगरी 'चित्रलेखा' शीर्षकको उनको अर्को अनुवादात्मक कृति पनि प्रकाशित छ । यो विश्व साहित्यको क्षितिजमा नै ख्याति कमाएका भगवतीचरण वर्माद्वारा लिखित उनको सबैभन्दा उत्कृष्ट मानिएका मनोविज्ञानसम्मत औपन्यासिक कृतिको अनुवाद हो ।

अनेकौँ भाषामा यो कृतिको अनुवाद पनि भएको छ । यस किसिमको महत्त्वपूर्ण कृतिलाई नेपाली भाषामा अनुवाद गर्ने काम तारिणीप्रसाद कोइरालाले अत्यन्त कुशलतापूर्वक गरेका छन् ।

तारिणीप्रसाद कोइरालाका केही कृतिहरू नयाँ संस्करणका रूपमा पुनर्मुद्रित भएका छन् । यस क्रममा विशेष गरी लिपि बुक्स प्रालिको नाम यहाँ संस्मरणीय हुन पुग्छ । यसैगरी कोइरालाका नयाँ कृतिहरूको खोजीमेली गरी त्यसलाई प्रकाशमा ल्याउने काममा 'तारिणी–रोशा स्मृति कोष'को सक्रियता पनि प्रशंसनीय छ नै । 'अग्निवाटिका' (२०६८) शीर्षकको उपन्यास यसको एउटा दृष्टान्त हो । यसमा मानिसका यौन प्रवृत्ति र यससम्बन्धी मनोवृत्तिमा आधारित क्रियाकलापलाई अनेकौँ कोणबाट मनोवैज्ञानिक विश्लेषण गर्ने काम उपन्यासकारले गरेका छन् । उनको यो कृतिलाई पनि नेपाली उपन्यास विधाको एउटा नवीन र उत्कृष्ट प्राप्तिका रूपमा ग्रहण गर्न सकिन्छ । उनका सबै कृतिहरूले नेपाली साहित्यकै श्रीवृद्धिमा राम्रो योगदान थप्न सकेका छन् । उनले निर्देशक, उद्घोषक, समाचार लेखन, प्रकाशक र समाचारवाचकको काम पनि गरेका छन् । उनी विद्युतीय सञ्चारमाध्यमबाट समाचार वाचन गर्ने पहिलो व्यक्ति हुन् । यस क्रममा उनलाई निर्देशक र उद्घोषण क्षेत्रकै पहिलो व्यक्तित्वका रूपमा पनि लिइने गरेको पाइन्छ ।

विं. सं. १९९६ देखि 'शारदा' मासिक पत्रिकामा उनका अनेकौँ उत्कृष्ट कथाहरू प्रकाशित हुन थाले । उनको पहिलो प्रकाशित कथा 'आमाको हृदय' वि. सं. १९९६ मा 'शारदा'मा नै छापिएको र उनको साहित्यिक व्यक्तित्वको परिचय दिने काम पनि यही पत्रिकाले गरेको पाइन्छ । यसपछि पनि 'शारदा' पत्रिकामा उनको विविध शीर्षकका अनेकौँ कथा प्रकाशित भएका छन् । उनी बहुमुखी प्रतिभा सम्पन्न व्यक्तित्व थिए भन्ने कुरा उनका अनेकौँ सार्थक क्रियाकलापहरूले नै परिभाषित गर्दै आएका छन् । यस क्रममा उनको साहित्यक योगदानलाई राम्ररी बुझ्न उनका हालसम्म प्रकाशित हुन सकेका सबै अब्बल साहित्यक कृतिहरू आफैँमा पर्याप्त छन् ।

यसै क्रममा उनका सुपुत्र ज्योतिप्रसाद कोइराला र बुहारी इन्दिरा कोइरालाको सत्प्रयासमा प्रकाशित 'तारिणीप्रसाद कोइराला एक दृष्टि : अनेक स्मृति' शीर्षकको स्मृति ग्रन्थ (२०६८) र होमप्रसाद भट्टराईको 'तारिणीप्रसाद कोइरालाका कथामा मनोविज्ञान' शीर्षकको विद्यावारिधि शोधप्रबन्ध (२०७०) ले पनि उनको लेखन प्रवृत्ति र विशेषताका सम्बन्धमा राम्रो प्रकाश पारेको छ । पुस्तकको रूपमा यो शोधप्रबन्ध अझै पुस्तकका रूपमा भने प्रकाशमा आउन सकेको पाइँदैन । यसका अतिरिक्त उनका बारेमा विविध पत्रपत्रिकाका अनेकौँ स्रष्टाले कलम चलाएका पनि छन् । यसै क्रममा नवराज कट्टेलद्वारा सम्पादित 'तारिणीप्रसाद कोइरालाका समग्र कथाहरू' शीर्षकको कृति पनि प्रकाशमा आएको भेटिन्छ । यति हुँदाहुँदै पनि तारिणीप्रसाद कोइरालाको समग्र पक्षको उचित सोधखोज र मूल्याङ्कन पर्याप्त रूपमा हुनसकेको मान्न नसकिने अवस्था अझै पनि रही आएको तथ्यलाई अस्वीकार गर्न सकिँदैन ।

नेपालमा मनोवैज्ञानिक साहित्य सिर्जना गर्ने ख्यातनामा साहित्यकारहरूका कृतिका सापेक्षतामा तारिणीप्रसाद कोइरालाका कथा र औपन्यासिक कृतिहरू बीसमा उन्नाइस छैनन् । बीसमा बीस नै छन् र ती हृदयस्पर्शी एवं मार्मिक पनि छन् । यसको सम्यक् विवेचनाको आवश्यकता भने अझै पनि खट्किएको छ । विसं १९७९ सालको माघ १० गते भारतको बनारसमा जन्मिएका तारिणीले बाउन्न वर्षको समयावधि पार हुन पाउँदा नपाउँदै विसं २०३१ सालको वैशाख महिनामा आफ्नो इहलीला समाप्त गरेको पाइए पनि यो अल्प समयावधिमा उपर्युक्त किसिमले उनले विविध क्षेत्रमा दिएको योगदान निश्चय पनि अतुलनीय छ । स्पष्ट छ– उनले अनेकौँ क्षेत्रमा आफ्नोतर्फबाट सशक्त भूमिका निर्वाह गरेका छन् । यस किसिमका भूमिका पनि सोधखोज गरी प्रकाशमा ल्याउनु आवश्यक छ । सबै सत्य तथ्यको खोज, अध्ययन, अनुसन्धान र त्यसको सत्यापन गरी यसका साथै उनका सबै पाण्डुलिपिहरूलाई कृतिका रूपमा प्रकाशमा ल्याउन सके नेपाली साहित्यको श्रीवृद्धिमा त्यसले थप यथेष्ट योगदान दिन सक्ने तथ्यमा असहमति जनाउन सकिँदैन ।

समग्रमा भन्नुपर्दा नेपाली साहित्य र अन्य क्षेत्रहरूमा समेत उनले दिन सकेको योगदानको उच्च मूल्याङ्कन अझै हुन सकेको छैन । देशमा लोकतान्त्रिक गणतन्त्रात्मक राजनीतिक व्यवस्था स्थापना भए पनि राज्यस्तरबाट तारिणीप्रसाद कोइरालाको योगदानको उच्च मूल्याङ्कनका सन्दर्भमा उचित किसिमले ध्यान दिन नसकेको यथार्थ पनि छ । नेपाली साहित्यको क्षेत्रले पनि उनका साहित्यिक शिल्प, कलात्मक शैली, प्रयोगात्मक क्षमता र अभिव्यक्ति आदिका प्रति कुनै पूर्वाग्रह नराखी सही मूल्याङ्कन गर्न अग्रसर हुनुपर्ने आवश्यकता अझै खट्किएको छ । नेपाली साहित्यकै एउटा होनहार स्रष्टाको उचित सम्मान गर्नु र एक किसिमले उनीप्रतिको उपेक्षाभावलाई चिरेर अघि बढ्नु यस क्षेत्रमा लाग्नु सबैको जिम्मेवारी र दायित्व पनि हो भन्नु निश्चय पनि अत्युक्ति हुने छैन । स्रष्टाको सिर्जना र यस क्षेत्रमा उसले दिएको योगदान कुनै पनि स्थितिमा महत्त्वहीन हुन सक्दैन र हुनु पनि हुँदैन । अतितमा जे भयो, भयो । वर्तमानले यो आवश्यकतालाई राम्ररी मनन गर्न सक्नुपर्छ । यही नै आजको आवश्यकता र समयको माग पनि बनेको छ भन्नु अत्युक्ति हुने देखिँदैन । ■

# थोरै बिउ कतै बाँकी थियो कि !






◆ राजेश खनाल

●●●

नाचघर, सभागृह, प्रज्ञा प्रतिष्ठानको प्रेक्षालय, अनि त्यहाँ नाटक देखाउन नपाए कीर्तिपुरस्थित अडिटोरिएम; यी सबैतिर कुनै न कुनै नाटक मञ्चन भइरहेका हुन्थे । दर्जनौं नाट्य संस्थाहरू रङ्गमञ्चमा क्रियाशील थिए । कहीँकतै हल खाली भएको सम्झना छैन ।

●●●

साहित्यिक पत्रकारिताको ढोका कहिले खुल्यो ! यतातिर सोच्ने हो भने म कताकता बरालिन्छु । जसका बारेमा केही सोचिएकै थिएन, त्यतातिरको लक्ष्य, चुली देखिने कुरो पनि भएन । यस्तोमा अगाडिको यात्रामा पाइला लम्काउने कुरै थिएन ।

तर बिउ तीस वर्षअघिदेखि नै ब्याडमा अल्झिएको रहेछ कि ! त्यस्तै लाग्छ । यो मेरो भ्रम पनि हुन सक्छ । कहिलेकाहीँ भ्रममै रमाउँदा पनि आनन्द त लाग्छ नि ।

यद्यपि यो भ्रम होइन, यथार्थ हो । यदि अन्तरकुन्तरमा बिउ नअङ्किएको भए साहित्यिक पत्रकारिताले तान्दैनथ्यो होला । आज यसरी साहित्यिक पत्रकारितामा रमाइन्थेन होला ।

थोरै भए'नि त्यसले बल पक्कै दिएको हो । त्यही बलले आज पाइला अघि सर्दैछ ।

२०५२/५३ सालदेखि एफएम रेडियो परम्परा भित्रियो । त्यसैले भित्र्यायो मलाई पनि आवाजको परिवेशमा । अनि रेडियोमा विभिन्न कार्यक्रम सञ्चालन गर्दै गइयो । सुरुमा गुडनाइट एफएम । पछि केएटीएच एफएम ९७.९ (अहिलेको इमेज) ।

त्यहाँ प्रवेशसँगै गजल कार्यक्रमसँग जोडिएँ । परन्तु एउटा साहित्यिक कार्यक्रमसँग म जोडिएको छु भन्ने हेक्का कहिल्यै भएन !

साहित्यको काव्य विधामा गजलको आफ्नै महत्त्व छ । आज गजल विधाले बेजोडको उचाइ लिएको छ । मैले इमेज रेडियोमा 'साम–ए–गजल' चलाउँदा गीत गजलको कार्यक्रमका रूपमा मात्रै चलाएँ, न कि साहित्यिक ।

साहित्यको एउटा विधा यो पनि हो भन्ने सोच नै भएन कहिल्यै ! जब कि कार्यक्रम चलाउँदा हिन्दी/उर्दू गजल बजाए पनि (रेकर्ड भएका नेपाली गजल कम थिए) अनेकानेक साहित्यिक पत्रपत्रिकाहरूमा प्रकाशित नेपाली गजलहरू वाचन गर्दै आएको थिएँ ।

यसै क्रममा थाहा पाएको थिएँ, नेपाली गजल लेख्ने पनि टन्नै छन्– मनु ब्राजाकी, बूँद राना, ज्ञानुवाकर पौडेल, सनतकुमार, रवि प्राञ्जल, करुण थापा, ललिजन रावल, वियोगी बुढाथोकी, दिव्य गिरी, रामलाल जोशी, श्रेष्ठ प्रिया पत्थर, कृष्णहरि बराल, घनश्याम परिश्रमी, गोपाल अश्कलगायत ।

यसरी हेर्दा रेडियोमा साहित्यिक कार्यक्रम नै चलाइरहेको थिएँ कि । जब कि मानसिक रूपमा साहित्यिक कार्यक्रम सञ्चालन गरिरहेको छु भन्ने नै थिएन !

हठात् 'सारस्वत'को सञ्चालन मेरो काँधमा आइपुग्यो । रेडियोमा साहित्यिक कार्यक्रम भनेर घोषित प्रस्तुति थियो 'सारस्वत', जुन श्रीओम श्रेष्ठ रोदनले सञ्चालन गर्थे । र, उनले एफएम छोडेपछि स्टेसन म्यानेजर भरत शाक्यले कार्यक्रम मेरो जिम्मा लगाएका थिए ।

साताको एक घण्टा बज्ने यस कार्यक्रममा साहित्यकारहरूसँगको कुराकानी प्रस्तुत हुँदै आएको थियो ।

यो प्रस्तुति मेरा लागि सहज थिएन् । 'साम–ए–गजल'मा धेरै साहित्यकारका

गजल वाचन गरे पनि साहित्यकारहरूसँग मेरो खासै सङ्गत थिएन् । त्यसैले श्रीओमले एफएम छोडे पनि ‘सारस्वत’मा भूमिगत उपस्थिति भने जनाइरहे, मेरा लागि । उनले मलाई हरेक कार्यक्रमको निर्माण र प्रस्तुतिमा सहयोग गरे ।

एफएम रेडियोमा साहित्यिक कार्यक्रम सञ्चालनमा त आयो तर त्यसले सोचेजस्तो व्यापार दिन नसकेको तर्क गर्दै कार्यक्रम बन्द भयो । त्यसपछि साहित्यिक कार्यक्रमका लागि भनेर समय नै तोकिएन !

आज विचार गर्दा लाग्छ, एफएमहरूमा नगेन्द्रराज शर्मा र रोचक घिमिरेजस्ता अग्रज साहित्यिक पत्रकारझैँ सोच्ने कोही भइदिएको भए कसै न कसैले ‘सारस्वत’लाई सञ्चालन गरिरहेका हुने थिए ।

साहित्यिक पत्रकारितामा म यसरी नै छिरेँ । बिनाकुनै टेको । तर बिउ उहिलेकै थियो, जतिखेर योगानन्द वैद्य दाइले ‘यौवन डाइजेस्ट’का लागि केही लेख्न भन्थे र म धर्मयुग, मुक्ता, सरिताबाट अनुवाद गर्दै बुझाउँथे । छापिन्थ्यो पनि ।

जागृति साप्ताहिकका सम्पादक शक्तिराम भण्डारी (सान्दाइ) पनि यदाकदा पत्रिकामा साहित्यिक सामग्री राख्ने गर्थे । त्यसैले मलाई लेख्न हौस्याउँथे । त्यसैले त उतिखेर गरिएको सुदूरपश्चिम यात्राबारे संस्मरण लेख्न हौस्याए । मैले लेखेँ, सायद यात्रा विवरण । छापियो पनि ।

उप्रान्त एक दिन सान्दाइले एक जनासँग कुराकानी गरेर फिचर बनाउन भने । ती मानिस थिए, गुमानसिंह चाम्लिङ । जो दार्जिलिङबाट काठमाडौँ आएका थिए । उनी पुतलीसडकबाट कुमारी हल जाने बाटोको एउटा होटलमा बसेका थिए ।

कवि साहित्यकार चाम्लिङसँगको साहित्यिक भलाकुसारी जागृतिमा छापियो । के छापियो कसरी छापियो, आज स्मृतिमा छैन । वश, उनीसँगको भेटघाट मात्रै सम्झनामा छ ।

यसरी नै बिउ बाँकी रहेको थियो होला साहित्यिक पत्रकारिताको ! योसँगै अर्को बिउ रङ्गमञ्च पत्रकारिताको थियो । तिनताक नाटक हेरिन्थ्यो अनि त्यसबारेमा साप्ताहिक पत्रिकाहरूमा लेखिन्थ्यो ।

तीसको दशकको अन्त्य र चालीसको प्रारम्भको त्यो समय नेपाली नाट्य क्षेत्रले गज्जबको उचाइ पक्डेको थियो । नाटकले सबैलाई तानेको थियो । सिनेमा हेर्नभन्दा पनि नाटक हेर्न बढी दर्शक आएका हुन् कि भन्ने भान हुन्थ्यो ।

नाचघर, सभागृह, प्रज्ञा प्रतिष्ठानको प्रेक्षालय, अनि त्यहाँ नाटक देखाउन नपाए कीर्तिपुरस्थित अडिटोरिएम; यी सबैतिर कुनै न कुनै नाटक मञ्चन भइरहेका हुन्थे । दर्जनौ नाट्य संस्थाहरू रङ्गमञ्चमा क्रियाशील थिए । कहीँकतै हल खाली भएको सम्झना छैन ।

अझै सर्वनाम नाट्य समूहले त सडक नाटक अभियान नै सुरु गरिसकेको थियो । सर्वनाम मञ्चमा मात्रै होइन, सडकमा पनि नाटक गर्थ्यो ।

म सभागृह र नाचघरमा हुने नाटकहरूको नियमित दर्शक थिएँ । कुनै पनि समूहले गरेको नाटक होस् अथवा नाचघरकै नाटक किन नहोस्, हेर्न पुग्थेँ । हल मात्रै नभएर सडकमै उभिएरै कति नाटक हेरेको छु ।

त्यसैताका जागृतिसँगै नेपालवाणी, नेपाल पुकार, प्रकाशदीपसहित आधा दर्जनभन्दा बढी साप्ताहिक पत्रिकाहरूसँग म आबद्ध थिएँ । कतै न कतै केही न केही लेखिरहन्थेँ । त्यसैले नाटक हेर्‍यो र तिनका विषयमा टिप्पणी लेख्यो ।

यसैगरी मेरो साहित्यिक पत्रकारिता (?) चलिरहेको थियो । नाटक पनि साहित्यको एउटा विधा भएकाले नाटक र त्यसका कलाकारहरूबारे लेखिनुलाई साहित्यिक पत्रकारिता भन्न सकिन्थ्यो होला ।

मभने त्यसबेला साहित्यिक पत्रकारिता गरिरहेको थिइनँ । साहित्यिक पत्रकारिताको मार्गमा छु, यो ज्ञान ममा पटक्कै थिएन । यो विषयलाई लिएर कसैले केही भनेका पनि होइनन् । मनले मलाई मूलधारकै पत्रकारिता गराइरहेको थियो ।

त्यो समय पुस्तकालयमा भेटिएका साहित्यिक पत्रिकाहरू पढिन्थ्यो । विशेषगरी गोरखापत्र शनिबारीय पृष्ठ, मधुपर्क, रचना, अभिव्यक्ति, रूपरेखा, दीपिकासँगै हिन्दी भाषाका सारिका, हंस र कादम्बिनी । त्यसबाहेक पुस्तकालयमा भेटिने मुक्ता, सरिता, नवनीतलगायतले ध्यान खिच्थे ।

साहित्यिक पत्रिकाहरूले उहिल्यै ध्यान ताने पनि साहित्यिक पत्रकारिताले निकैपछि मात्रै आफूतिर आकर्षित गर्‍यो । त्यसैले एक पटक साहित्यिक पत्रिका निकाल्ने टुङ्गोमा हामी केही साथीभाइ पुगेका थियौँ ।

केही साथीहरूको एउटा जमघटमा साहित्यिक पत्रिका प्रकाशन गर्ने कुरो उठ्यो । हामी छ भाइ थियौँ जमघटमा । वासु, रमेश, उद्धव, सुरेन्द्र, राजेन्द्र र म उपस्थित त्यस जमघटमा केही गर्नुपर्छ भन्ने छलफल गर्द मलाई जिम्मा लगाउनेगरी साहित्यिक पत्रिका प्रकाशनको चाँजोपाँजो मिलाइयो ।

तर केही दिनमै ‘साहित्यिक पत्रिका निकाल्न गाह्रो हुन्छ । बरु डाइजेस्ट म्यागेजिन निकालौँ’ भन्ने कुरो चल्यो । त्यसो त डाइजेस्ट म्यागेजिनको प्रकाशन पनि सहज थिएन । तथापि साहित्यिक पत्रिकाभन्दा केही सजिलो हुने सबैले ठान्यौँ । साहित्यिक पत्रिका भाषागत रूपमा अत्यन्तै बलियो हुनुपर्ने, प्राप्त सामग्री पनि स्तरीय हुनुपर्ने भएकै कारण डाइजेस्ट सजिलो ठानिएको थियो ।

यसरी नै एउटा पत्रिका सुरु गरियो ।

त्यो पनि समयमा प्रकाशित गर्न सकिएन । जहिल्यै तोकेको मितिभन्दा दुई चार महिना पर धकेलिने ! प्रकाशित भए खर्च धान्न गाह्रो । विज्ञापन छाप्न त सकिन्थ्यो तर पैसो उठाउन सकिन्थेन । त्यसैले असमय त्यो पत्रिका स्थगनको मार्गभित्र पस्यो ।

यति बेलासम्म पनि श्रीओमसँग निकट सम्बन्ध भएकाले उनले पटक पटक साहित्यिक पत्रकारितामा लाग्न भनिरहे । तर मैले टार्दै गएँ ।

जब हिमालय टाइम्स दैनिकमा आर्टिकल (विचार) पृष्ठ हेर्न थालेँ, त्यसपछि भने शनिबारका लागि साहित्यिक लेख-रचनाको खोजीमा जुट्नुपर्ने भयो । साहित्यिक रचनाको खोजी बाध्यता थियो । हरेक शनिबारका लागि दुई-चार रचना आवश्यक पर्थ्यो । कथा, कविता, निबन्ध, यात्रा संस्मरण, साहित्यकारसँगका कुराकानी । (यही समयमा मेरा संस्मरणहरूले पनि जन्मिने मौका पाएका हुन् ।)

आज बाह्रखरी डिजिटल न्युजको साहित्य पृष्ठ संयोजनले साहित्यिक पत्रकारिता कति गम्भीर विषय हो भन्ने सिकाएको छ । अर्थात् जेजसो गरेर भए पनि साहित्यिक पत्रकारितामा होमिएपछि अनुभूत भएको छ, साहित्यिक पत्रकारिता वास्तवमै कठिन कार्य हो । सजिलो छैन । सहज पनि छैन ।

सहज छैन, सजिलो छैन भन्दाभन्दै पनि यसैमा एकोहोरो लाग्नेहरूले आज पनि छापा माध्यमबाट साहित्यिक पत्रिका निरन्तर प्रकाशित गर्दै आएका छन् । निःशुल्क वितरण गरिनु त्यो अर्के पाटो हो । तर प्रकाशित भइरहेका छन् । यतातिर लाग्नेलाई ऊर्जा दिइरहेका छन् ।

'अभिव्यक्ति'का नगेन्द्रराज शर्मा, 'रचना'का रोचक घिमिरे पचास साठी वर्षअघिदेखि साहित्यिक पत्रकारितामा छन् । निरन्तर छन् । ती दुवै, हामीजस्ता अनुज पुस्ताका लागि उत्प्रेरक छन् । यी दुवैसँगको सङ्गतले साहित्यिक पत्रकारितामा लाग्ने हामीजस्तालाई अथाह बल मिल्छ । ऊर्जा प्राप्त हुन्छ । यस्तै ऊर्जा समेटेरै त छापा माध्यमका दायित्व, जनमत, शिवपुरी सन्देश, शारदा, नवप्रज्ञापन, शब्दाङ्कुर, कल्पतरु, शब्द संयोजनलगायतका दर्जनौँ पत्रिका निरन्तर प्रकाशित भइरहेका छन् । र, निरन्तरताको दौडाइमा छन्, तिनका सम्पादकहरू ।

अनि तिनै अग्रजहरूको निरन्तरताबाट ऊर्जा ग्रहण गर्दै पछ्याउँदो छु म पनि, समयानुकूलको डिजिटल मिडियाबाट । ▪

कविता

# ढुङ्गामा फलाउन खोजेको विश्वास



◆ पुरुषोत्तम दाहाल

ढुङ्गा फोर्‍यो
र, बाली लगायो
माटो थिएन,
पानी पटाउने प्रयास गर्‍यो

आकाश जमिन जोड्ने कुरा गर्छ ऊ
न जोडिएको आकाश र जमिन कहाँ छ र ?
विश्वास त हो मनको
विश्वास मानिसको नै हो
जे भने पनि पत्याउने भएपछि ।

उसले ढुङ्गा छाडेर
हावामा बाली लगाउन थालेको छ ।
पानी चाहिँदैन उसलाई अब
शब्द र अक्षरमा नै
उसको बिरुवा हुर्कने विश्वास छ ।

हावा, आवश्यक भएन उसलाई
ढुङ्गामा रोपेको बिरुवा
न उम्रिँदै मरिसकेछ ।
उसले जोडेको आकाश र जमिनको कथा
खण्डहरमा परिणत भयो ।
मानिसको विश्वास हराएपछि
उसका शब्द र अक्षरमा
बाँचेको विश्वास
एक्लै कसरी बाँच्न सक्छ र ?
भनिन्छ, मानिसको मनबाट
विश्वास हराएपछि
ईश्वरको समेत मृत्यु हुन्छ ।
हामी साधारण मानिसको त के कुरा ?
जहाँ जे रोपे पनि,
बिनाविश्वास त्यो कसरी बाँच्न सक्थ्यो ? ▪

**बूनपा-१०, कपन, नारायणचोक**

# पत्रकारिता र साहित्यको 'प्याज चिन्तन'






◆ केदार वाशिष्ठ



सूचना र सञ्चार प्रविधिको विकासले लेखनका विधा निर्माण र पृथकीकरण पनि गर्न थालेको छ । इन्टरनेट र वेबसाइटको प्रयोग र स्मार्ट फोनको पहुँच आममानिसमा पुगेपछि संसार मान्छेको हत्केलामा आइपुगेको छ । यसले नवप्रवर्तनका अवसर पनि जुटाइदिएको छ जुन आमसञ्चारको क्षेत्रमा पनि प्रयोग भएको छ । त्यस्तैमध्येको एक ब्लग लेखन हो ।



गोरखापत्र प्रकाशन शैली, गोरखापत्र संस्थान समाचार नीति तथा प्रकाशन निर्देशिका, २०८० निर्देशिका र गोरखापत्र खोज ब्युरोको अवधारणा र कार्यविधि औपचारिक रूपमा व्यवस्थापनलाई हस्तान्तरण गरेको तेस्रो दिन २०८० वैशाख १० गते कार्यकक्षमा नै रहेको बेला बेतार फोन (मोबाइल)मा घण्टी बज्यो ।

फोन उठाएर बोलेँ । उताबाट केही नभनी प्रश्नबाटै सुरु भयो, 'अब त हल्का भयो होला नि ?' स्वर परिचित नै थियो ।

प्रश्न गरेँ, 'केको हल्का ?'

जवाफ आयो, 'शैली सकेकामा ।'

हामीले एउटै उपसमितिमा रहेर गोरखापत्र प्रकाशन शैली तयार पारेका थियौँ र त्यसको छपाइयोग्य अन्तिम मस्यौदा पनि सँगै भएर बुझाएका थियौँ । गोरखापत्र प्रकाशन शैलीको सम्पादकका हिसाबले अलि जिम्मेवारी ममा नै थियो, त्यसैले यो हल्का सोधनी थियो । खासमा उपसमिति र त्यसले बनाएको एउटा कार्यदलका सबै सदस्य जम्मा भएर संयोजक गोरखापत्र दैनिकका निमित्त सम्पादक शिवकुमार भट्टराईले गोरखापत्र संस्थानका कार्यकारी अध्यक्ष विष्णु सुवेदी र महाप्रबन्धक लालबहादुर ऐरीसमक्ष प्रतिवेदनसहित बुझाएपछि सबै जना नै हल्का मात्र महसुस गरेका थिएनौँ; फुल्का पनि भएका थियौँ ।

यसै पृष्ठभूमिमा फोन आएको रहेछ मधुपर्कका सम्पादक जयदेव भट्टराईबाट एउटा कामका लागि । काममा लगाउने उहाँको अलि बेग्लै शैली छ । मधुपर्कको आमसञ्चार र साहित्य विशेषाङ्कका लागि माग्नुपर्ने रहेछ लेख, त्यो पनि छोटो समय दिएर ।

उहाँको फोन आउनु केहीअघि मात्र मधुपर्ककै नायबकार्यकारी सम्पादक त्रिभुवनचन्द्र वाग्लेले एक प्रसङ्गमा मधुपर्कले विशेषाङ्क निकाल्न लागेको जानकारी गराउनुभएको थियो । त्यसमा जोडिन म लोभिइसकेको थिएँ तर मुखफोर्न भने सकेको थिइनँ ।

मलाई पनि विशेषाङ्कमा समेटिन मन थियो, नयाँ लेखुँ कि 'नयाँ बोतलमा पुरानो रक्सी' हालेर उपहार दिऊँ भन्ने दोधार हुँदाहुँदै पर्सिसम्म लेख दिन म तयार भएको थिएँ किनकि आफूले गर्ने प्रयास केही नगरी त्यसै 'अङ्गुर अमिलो' मात्र बनाउनुहुन्न भन्नेमा म जहिले पनि दृढ छु । तथापि नयाँमा के दिने भन्ने खाका दिमागमा थिएन । यो लेख्दै गर्दा पनि म के लेख्दैछु भन्ने यकिन छैन । कसैका मनोगत लहडी कुरा सबैका लागि रोचक र उपयोगी हुन्छन् भन्ने हुँदैन; हुनुहुँदैन । यतिसम्मका लागि माफी चाहान्छु ।

यति हुँदाहुँदै पनि विषयको उठानका लागि मैले यही परिघटनालाई नै चयन गरेँ र त्यसैमा सञ्चार र साहित्यको केही लिपापोती गर्ने धृष्टता गर्दैछु । सम्भवतः रिपोर्ताज वा ब्लग पत्रकारिता र साहित्यलाई जोड्ने र तिनको फरक पनि देखाइदिने विधा हुन् । यो लेखाइ पनि त्यसै जगमा संरचना ठड्याउने जमर्को हो । कस्तो बन्छ र कस्तो जँच्छ त्यो महत्त्वपूर्ण कुरा हुन्छ ।

मलाई लाग्छ अन्तिम समयमा आएर केही लेख भन्नु र एघारौँ घण्टामा

केही लेख्न स्वीकार गर्नुमा साहित्य र समाचारको केही सम्बन्ध छ। समयसीमा (डेडलाइन) पत्रकारिताको अत्यन्तै महत्त्वपूर्ण पक्ष हो साहित्य सिर्जनामा त्यो अलि फराकिलो हुन्छ। सायद पत्रकारिता र साहित्य सिर्जनाको समयसीमाका बीचतिर पर्दछ साहित्यिक पत्रकारिताको समयसीमा। भाषा साहित्यमा रुचि र पेसा पत्रकारिता अँगालेकाले आफ्नै कार्यालयबाट नै सुरु गर्नु प्रासङ्गिक हुन्छ किनभने गोरखापत्र नेपालको पत्रकारिताको विश्वविद्यालय र नेपाली भाषा र साहित्यको उन्नयनको संवाहक पनि हो।

गोर्खापत्र वा गोरखापत्र विसं १९५८ देखि नेपालमा पत्रकारिता र भाषा साहित्यलाई दुई काँधमा राखेर निस्किएको अनवरत यात्री हो। त्यसै यात्रीका सहयोगीका रूपमा पछि विभिन्न उद्देश्य, प्रयोजन, प्राथमिकता र लक्षित वर्गका आधारमा गोरखापत्र संस्थानका विभिन्न प्रकाशन छन्। तीमध्ये नेपाली पत्रकारिताको नै मूलप्रवाह गोरखापत्रलाई समाचारपत्र, मधुपर्कलाई साहित्यिक, युवामञ्चलाई युवाको खुराक र मुनालाई बालपत्रिका भनेर चिनिन्छ, चिनाइन्छ।

भाषा शैलीकै कुरा गर्ने हो भने पनि तिनमा आनका तान फरक छ किनभने तिनले निरपेक्ष रूपमा आफ्नो पत्रिकाको मात्र प्रतिनिधित्व नगरी समग्र साहित्यिक, युवा र बाल पत्रकारितालाई नै निर्देशित पनि गर्दछन्। तिनमा प्रस्तुत हुने समाचार सामग्री नेपाली भाषाका मात्र होइन विश्व्यापी सबै भाषाका तत्तत् विषय क्षेत्रसँग सम्बन्धित पत्रकारिताका मूलभूत सिद्धान्त र मान्यतालाई आत्मसात् गर्ने हुन्छन्, नभएको भए हुनुपर्छ। भाषाको फरक भनेको गोरखापत्र र दी राइजिङ नेपालका समाचार सामग्री नपढी झलक्क हेराइमा पनि स्पष्ट भेद थाहा पाउने भाषिक प्रस्तुतिको लिपिगत भिन्नता मात्र होइन।

### 'प्याज चिन्तन'

आम बुझाइमा पत्रकारिता भनेको समाचारसँग सम्बन्धित विधा हो भन्ने हुन्छ तर त्यसले अखबारी पत्रकारिताबाहेक अरूलाई बिरलै समेट्छ। पत्रकारिताका नै विभिन्न भेद रहेको सन्दर्भमा आमसञ्चार र साहित्यको सम्बन्धको गुदी केलाउनु प्याजका पत्र उक्काएर त्यसभित्र गुदी फेला पार्नु नै हो। शङ्कर लामिछानेको शब्दमा चाहिँ त्यो 'प्याज चिन्तन' हो। 'प्याज चिन्तन' अमूर्त हुन्छ र त्यसरी गुदी केलाउँदै जाँदा त्यसले आँखामा जलन गराउँदै स्वाभाविक होइन अप्राकृतिक आँसु पनि झारिदिन्छ।

खासमा 'प्याज चिन्तन' पनि लामिछानेको होइन, उनकै शब्दमा त 'चिन्तन प्याज'[१] हो। तथापि ती शब्द उनका मात्र होइनन्, सबैका हुन्। कसैले ठ्याक्कै उही प्रयोग गर्छ कसैले यताको उता र उताको यता गरेर मौलिकता दिने चेष्टा गर्दछ। पाठकले भने त्यसको हेक्का पाउँछ र मौलिकता हो कि, हेराफेरि हो कि अझ भन्ने हो भने चोरी हो भन्ने पत्ता लगाउँछ। पाठकको शक्ति यति हुन्छ कि कुनै लेखक, साहित्यकार वा पत्रकार र सबै सबै पेसाकर्मी र समाज सेवाधर्मीको पनि धरातल खुस्काइदिन्छ। शङ्कर लामिछानेको लेखनी बन्द गराउने पनि पाठक नै हो।[२] त्यसैले समाचारमा होस् वा साहित्यमा पाठकबाट सचेत र सजग रहनु पर्दछ। पाठकको 'प्याज चिन्तन'ले अपार खुसी वा अप्राकृतिक आँसु पनि झारिदिन्छ। शङ्कर लामिछानेको दशा पछिल्लो भयो।

### समाचार र साहित्य

प्रश्न उठ्छ समाचार र साहित्यमा के फरक छ ? कि समानता छ ? धेरै पत्रकार र धेरै साहित्यकारलाई यी प्रश्नको उत्तर थाहा छ कि छैन मलाई थाहा छैन। एउटा के कुरा चाहिँ थाहा छ भने सचेत पाठकले यसको फरक मजाले थाहा पाएका हुन्छन्। त्यसैले हरेक कुरा पाठक वा लक्षित वर्गलाई ध्यानमा राखेर लेखिनुपर्छ। पाठक केन्द्रित समालोचनाको आधार यही हो। सूचना प्रविधिको विकास र समाचार तथा साहित्यलाई आम पाठकसमक्ष पुऱ्याउन त्यसको व्यापक प्रयोगसँगै सामाजिक सञ्जालमा हुने लेखक र पाठकबीचको वास्तविक समयको अन्तर्क्रियाले त समाचार वा साहित्यलाई अझ निखारिने अवसर दिएका छन्।

यस अर्थमा पनि समाचार र साहित्यको सम्बन्ध देखाउँदा तिनका निरपेक्ष परिभाषाको तुलना काम लाग्दैन। अर्थात् जेमा नयाँ कुराघ अथवा अचम्मको कुरा समाचार[४] हुन्छ त्यो समाचार हो भन्ने परिभाषा काम लाग्दैन। त्यस्तै शाब्दिक अर्थ खोज्दै हितैषी लेखाइ[५] वा रसात्मक वाक्य काव्य (साहित्य)[६] अथवा सुन्दर शब्दको सुन्दर पदक्रम

१ 'एब्स्ट्रयाक्ट चिन्तन-प्याज' शङ्कर लामिछानेको निबन्ध सङ्ग्रहको नाम र एउटा निबन्धको शीर्षक पनि हो। उक्त निबन्ध सङ्ग्रहका लागि लामिछानेलाई विसं २०२४ सालको मदन पुरस्कार प्रदान गरिएको थियो।

२ 'आभाँ गार्देको सौन्दर्यशास्त्र' शीर्षकको लेख मौलिक नभई माइकल कर्बीको लेखमा आधारित भएको भनी कुमुदिनी नामकी पाठकको पत्रपछि शङ्कर लामिछानेले त्यो स्वीकार गर्दै अब आफूले साहित्यिक सन्न्यास लिने भनी कलम बन्द गरेका थिए। ती कुमुदिनी को थियो भन्ने अहिलेसम्म खुलेको छैन। कतिपयले लामिछाने आफैले गर्नका लागि त्यो पाठक पत्र आफैले लेखेको हुनसक्ने पनि अनुमान गरेका छन्। साहित्यिक पत्रकारितामा यस्ता विषयमा तथ्य उजागर गर्ने गरी खोजी वा अनुसन्धान भएको पाइँदैन।

३ If it's new, important information, it's news. https://www.vocabulary.com/dictionary/news

४ "When a dog bites a man, that is not news, but if a man bites a dog, that is news." – Charles Anderson Dana (1819-1897)

५ 'सहितस्य भाव साहित्य' अर्थात सबैको हितको भाव नै साहित्य हो।

६ 'वाक्यं रासात्मकं काव्यम्' अर्थात सरस लेखाइ काव्य हो। - आचार्य विश्वनाथ

साहित्य[७] हो भन्नेजस्ता परिभाषाभन्दा बेग्लै पहिचान साहित्यको खोज्न थालिएको छ। यी परिचायक परिभाषाका केही उदाहरण मात्र हुन्।

समाचार र साहित्यको सम्बन्ध र पृथकता पनि देखाउने गरी बेग्लै परिभाषा भएका छन्। त्यसैमा म्याथ्यु आर्नोल्डले भनेका छन्, 'पत्रकारिता हतारमा लेखिने साहित्य हो।'[८] पत्रकारिता र समाचार अन्तर्सम्बन्धित तर बेग्लाबेग्लै अर्थ दिने र परिपूरक शब्द पनि हुन्। समाचार पत्रकारिताको पेसागत क्रियाकलापको उपज हो जबकि साहित्य सबै खालका लेखाइको पाठगत संरचना पनि हो।[९] तथापि यी दुवैको आधार अध्ययन, खोज र अनुसन्धान हुन्। सूचना, मनोरञ्जन, शिक्षा समाचार र साहित्य दुवैका लक्षित प्रतिफल हुन्।

समाचार र साहित्य दुवै साहित्यिक रचना हुन् र दुवैको रचनाका लागि समय अत्यन्त महत्त्वपूर्ण हुन्छ। दुवैको लेखनका लागि समय सीमा हुने भए पनि समाचारको समय सीमा कडाइसाथ पालना गर्नुपर्ने भएकाले हतारको साहित्यमा परिपक्वता पनि नहुन सक्छ।

साहित्य सिर्जना र पत्रकारिताबीच धेरै भिन्नता पनि छन्। सामान्यतया साहित्य धेरै रचनात्मक र अभिव्यक्तिपूर्ण हुन्छ भने पत्रकारिता पाठकलाई सूचित गर्न बढी केन्द्रित हुन्छ। पत्रकारिता अधिक वस्तुनिष्ठ हुन्छ र साहित्यमा प्रायः व्यक्तिगत परिप्रेक्ष्य पनि हुन्छ। म्याथ्यु अर्नोल्डकै अनुसार पत्रकारिता विशुद्ध साहित्य हो। तर त्यो पत्रिका वा अखबारको प्रकृतिमा पनि निर्भर हुन्छ। अखबारभन्दा म्यागेजिनमा समाचारको स्तर बढी साहित्यिक हुन सक्छ किनभने त्यसका लागि ठूलो समय सीमा रहेको हुन्छ।[१०]

पत्रकारिता आफैँमा साहित्यिक गुणयुक्त पनि हुन्छ र आवश्यक भएजस्तै स्तरको अनुसन्धान र विश्लेषण साहित्यका लागि समाचारका लागि आवश्यक हुन्छ। त्यसैले १८औँ शताब्दीमा उपन्यासको उत्थानका लागि पत्रकारिताको योगदान निकै नै रहेको मानिएको थियो। खासगरी आख्यान साहित्यका लागि पत्रकारिताको योगदान विशेष महत्त्वको हुन्छ। अखबार र उपन्यास दुवैले नवीनता र परिस्थितिजन्य विवरणका लागि मात्र नभई लेखनको यथार्थवादी शैली, मनोरञ्जनको चिन्ता र दैनिक जीवनका लागि सम्मानमा पनि महत्त्वपूर्ण औपचारिक गुण साझेदारी गर्दछन्।[११] निबन्धको हकमा त त्यसको संरचना र सूचनाको प्रयोगमा पत्रकारिताबाट धेरै लाभ लिएका उदाहरण प्रशस्तै छन्।

यस आधारमा समाचार र साहित्य दुवै कला हुन् वा कलात्मक लेखाइ हुन्। साहित्य पाठकले दोहोऱ्याएर पढून् भन्ने अभिप्रायले कलायुक्त हुनुपर्छ तर समाचार एक पटक पढिएर पनि तत्काल प्रभाव छाड्ने क्षमतायुक्त कलात्मक हुन्छ। त्यसैले हतारको साहित्य मानिए पनि पत्रकारिताका आधारभूत पद्धति हुन्छन्, जुन साहित्य लेखनभन्दा आधारभूत रूपमा नै भिन्न छन्। त्यसैले यी दुई बेग्लाबेग्लै विधा हुन् र यिनका पनि विधागत भिन्नताकै आधारमा यिनको पहिचान स्पष्ट हुन्छ। नाटक, कविता, कथा, उपन्यास, निबन्ध आदि साहित्य हुन् भने आर्थिक, साहित्यिक, राजनीतिक, खेल, खोज आदिका समाचार दिने विशिष्टीकृत विधा पत्रकारिताका क्षेत्र हुन्। साहित्यको तुलनामा पत्रकारिताको गति तीव्र हुन्छ एक हिसाबले भन्ने हो भने खरायो र कछुवाको दौडको प्रतियोगिता। पत्रकारिताको गति समसामयिकताका आधारको हुन्छ भने साहित्य दीर्घकालमा पनि प्रभाव छाड्ने गरी लामो समयसम्म जीवित रहन्छ।

यसबाट के पनि स्पष्ट हुन्छ भने समाचार लेखनमा समयको जुन हतारो हुन्छ, साहित्य सिर्जनामा त्यस्तो हुँदैन। हतारको साहित्यमा परिक्वता नहुन पनि सक्छ तर त्यसको परीक्षण भने समाचारको ग्राहकले गरिरहेको हुन्छ। त्यो ग्राहक सामान्य पाठक, श्रोता, दर्शक, विश्लेषक वा अध्येता जो पनि हुन सक्छ। यो पाठकीय परीक्षणको भूमिकाले समाचारलाई तथ्यपूर्ण, सन्तुलित, विश्वसनीय बनाउन प्रेरित गर्दछ। त्यसैलाई पत्रकारिताका सामान्य सिद्धान्तका आधारका रूपमा लिने गरिन्छ।[१२] यसले समाचारलाई बेग्लै विधाका रूपमा स्थापित गर्दै साहित्यको निकट पनि बनाउँछ।

समाचारलाई साहित्यको निकट बनाउने कुरा यी दुवैको माध्यम पनि हो। दुवैको कारोबार भाषाका माध्यमबाट हुने गर्दछ। त्यसैले भाषामा आधारित जुनसुकै सञ्चारलाई साहित्यका रूपमा नै लिइन्छ। त्यो लेख्य वा कथ्य जुनसुकै भेदको पनि हुन सक्छ।

भाषा वस्तु तथा भावको यादृच्छिक वाक्प्रतीक रहेको भन्ने स्थापित मान्यताका आधारमा लिपि प्रतीकहरूको पनि प्रतीक हुन्छ।[१३] समाचार होस् कि साहित्य सिर्जना दुवैका

---

७ "Poetry is the best words in the best order." - Samuel Taylor Coleridge (1772-1834)

८ … journalism “literature in a hurry.” - Matthew Arnold (1822-1888) https://niemanreports.org/articles/1959-the-pursuit-of-journalism

९ Journalism vs Literature - What's the difference? | WikiDiff

१० https://malaysiandigest.com/the-difference-between-narrative-and-literature-journalism/

११ Ellis, Markman. "Newspapers and Literature." 17th and 18th Century Burney Newspapers Collection. Detroit: Gale, 2007. https://www.gale.com/intl/essays/markman-ellis-newspapers-literature

१२ भट्टराई, केदार (सम्पा. २०८०)। गोरखापत्र प्रकाशन शैली। काठमाडौँ : गोरखापत्र संस्थान, पृष्ठ ४२ र ५१

१३ भट्टराई, केदार (२०७०)। नेपाली भाषामा प्रविधिको प्रयोग। स्नातक तहको अप्रकाशित शोधपत्र, त्रिभुवन विश्वविद्यालय, त्रिचन्द्र कलेज, नेपाली स्नातकोत्तर कार्यक्रम

लागि भाषाजस्तै लिपिको अपरिहार्यता रहन्छ। लिपिले मानव मनको अभिव्यक्तिलाई चित्र वा सङ्केत प्रदान गर्दै दृश्य रूप प्रदान गर्ने हुँदा लिपि भाषाको उन्नत प्रविधिका रूपमा रहेको हुन्छ। यो साहित्य र समाचार दुवैका लागि अनिवार्य आवश्यकता हो । भाषाबाट नै लेखनलाई कलात्मक र शैलीगत रूपमा उजिल्याउने काम हुन्छ ।

भाषा मानवीय वस्तु भएको र मानवको वैचारिक प्रकटीकरण र सूचनाको तिर्खाका कारण भाषिक कार्यसम्पादनबाट नै समाचारको प्रचलन सुरु भएको भन्न सकिन्छ । त्यसैलाई साहित्यको आरम्भ पनि मान्न सकिन्छ । कालान्तरमा निखारिँदै त्यसको विकास भएको हुन सक्छ, जसको स्पष्ट आकृति पत्रकारिताको पृष्ठभूमि रहेका सफल लेखक साहित्यकारका कृतिमा पाइन्छ । अङ्ग्रेजी लेखक र सामाजिक आलोचक चार्ल्स डिकेन्स (सन् १८१२–१८७०)को साहित्यिक जीवनको सफलताका आधार पत्रिकामा छापिएका कथा र व्याख्यात्मक निबन्धलाई मानिन्छ ।[१४] तीमध्ये धेरैजसो पहिलो पटक अखबार वा पत्रिकामा लेखको रूपमा प्रकाशन भएका थिए। साहित्य कल्पनाशीलताको उपज मान्नेले तिनीहरूलाई सधैँ काल्पनिक मान्थे पत्रकारितामा ती तथ्यपूर्ण पनि हुन्थे। उनका रचना समकालीन समाजका धेरै टिप्पणी हुन्थे । त्यसैका आधारमा उनी सफल उपन्यासकार बनेका थिए।

अङ्ग्रेजी मात्र होइन रुसी भाषामा पनि पत्रकारको पृष्ठभूमिबाट साहित्यकारको सफलता पाएका व्यक्ति भेटिएका छन्। बेलारुसकी खोज पत्रकार, निबन्धकार तथा जनइतिहासकार[१५] स्भेत्लाना अलेक्जेन्द्रोभान अलेक्सिभेइच (सन् १९४८– ) का कार्यलाई लिने गरिन्छ । उनको लेखन, गायन र अभिनयको सम्मिश्रित लेखन (पोलिफोनिक राइटिङ) अ मनुमेन्ट टु सफरिङ एन्ड करेज इन आवर टाइम (हाम्रो समयका दुःख र साहसको स्मारक)का लागि सन् २०१५ को साहित्यतर्फको नोबेल पुरस्कार प्रदान गरिएको थियो ।[१६]

नेपाली सन्दर्भको चर्चा गर्दा मोतीराम भट्ट (विसं १९२३–१९५३) साहित्यिक पत्रकारिताका मार्गदर्शक मानिन्छन् । मोतीरामले नै बनारसबाट प्रकाशित पहिलो नेपाली मासिक पत्रिका 'गोर्खा भारत जीवन' प्रकाशन थालेका थिए । उक्त पत्रिकाको प्रकाशन वर्षमा भने विसं १९४२ र विसं १९४३ भनी विवाद छ ।[१७] नेपालमा पशुपत छापखानाको स्थापना, भानुभक्त आचार्यको जीवनी लेखेर खोज परम्पराको पनि उनले उजागर गरेका थिए।

त्यसका साथै नेपाली पत्रकारिताको थालनी नै साहित्यिक पत्रिकाबाट भएको थियो । विसं १९५५ मा प्रकाशित 'सुधासागर'का प्रति फेला नपरे पनि नेपालको पत्रकारिताको इतिहासको त्यो आरम्भ थियो । त्यसलाई समाचार र भाषा साहित्यको दोहोरो सेवकका रूपमा 'गोर्खापत्र'ले विसं १९५८ देखि आजपर्यन्त काम गर्दै आएको छ । त्यसैमध्येका एक 'गोरखापत्र'मा काम गरेर पत्रकारिता र साहित्य दुवै क्षेत्रमा सफल भैरव अर्याल (विसं १९९३–२०३३) हुन् ।

हास्यव्यङ्ग्यका मूर्धन्य अर्यालले पत्रकारिताको जगबाट आफूलाई साहित्यमा स्थापित गराएका छन् भने साहित्यका बहुमुखी प्रतिभा बालकृष्ण सम (विसं १९५९–२०३८) विसं २०१२ मा 'गोरखापत्र'का प्रधान सम्पादक रहेर पत्रकारितामा पनि योगदान गर्ने व्यक्ति भएका थिए। साहित्यिक पत्रकारिता त साहित्य र पत्रकारितालाई जोड्ने पेसा नै भइहाल्यो एउटै व्यक्तिको क्षमताले पनि साहित्य र समाचारमा स्थान खोज्ने यी दुई उदाहरणले समाचार र साहित्य लेखनमा केही समानता खोज्छ भन्न सकिन्छ।

ऋद्धिबहादुर मल्ल (विसं १९५५–२०२५)ले विसं १९९१ मा 'शारदा' मासिक प्रकाशन सुरु गरेपछि नेपाली साहित्यिक पत्रकारिताको विकासमा नयाँ आयाम थपिएको हो । त्यसपछि 'रूपरेखा'का उत्तम कुँवर, रचनाका रोचक घिमिरेको योगदान उल्लेख्य छ । साहित्यिक पत्रिकाका रूपमा 'मधुपर्क' र 'गरिमा'ले साहित्य र साहित्यिक पत्रकारितालाई बेग्लै आकार र उचाइ दिएका छन् ।

## रिपोर्ताज र साहित्य

समाचार र साहित्य दुवैमा प्रचलनमा ल्याइने शब्द रिपोर्ताज (reportage) हो। यो फ्रेन्च भाषाको रिपोर्ट (report) मा एज (age) मिलेर बनेको छ। रिपोर्टको अर्थ प्रतिवेदन गर्नु भन्ने हो। रिपोर्ताजको अर्थचाहिँ कुनै घटनाको वर्णन गर्नु हो।[१८] घटनाको वर्णन भन्नाले त्यसमा सत्य तथ्यको प्रस्तुति समाचारको निकट हुन्छ भने मौलिकता वा कल्पनाशीलताको लिपापोती र भाषिक कलात्मक निखार पनि परेको हुन्छ जुन साहित्यको निकट हुन्छ । त्यसमा अध्ययन अनुसन्धान पनि थपिएको हुन सक्छ । यिनै अर्थगत र संरचनागत समानताका कारण साहित्य र रिपोर्ताजको भेदमा केही अलमल हुन्छ। कविता, कथा, उपन्यास, नाटक, लघुकथा आदिका विधागत भिन्नताका आधारमा साहित्यलाई स्पष्ट

१४ https://www.britannica.com/biography/Charles-Dickens-British-novelist

१५ जनइतिहास भनेको राज्य वा शासकीय वर्गभन्दा पनि व्यक्तिको इतिहासको खोजी हो। यसलाई मौखिक इतिहास (Oral History) का रूपमा पनि लिइन्छ। विभिन्न माध्यमबाट त्यसको अभिलेखीकरण गरिन्छ।

१६ https://www.nobelprize.org/prizes/literature/2015/summary/

१७ वाशिष्ठ, केदार (२०७९)। 'गोर्खा पत्रिकाहरु'को पदचाप। गोरखापत्र दैनिकको १२२ औं वार्षिकोत्सवका अवसरमा विसं २०७९ वैशाख २४ गते प्रकाशित विशेषाङ्क

१८ https://www.etymonline.com/word/reportage

रूपमा चिनिन्छ । रिपोर्ताजचाहिँ समाचार रिपोर्ट गर्ने कार्य वा प्रक्रियालाई अवलोकन वा दस्तावेज गरिएका घटनाको विवरण दिनका लागि लेख्ने गरिन्छ ।

साहित्यमा आख्यान र गैरआख्यानको पनि अर्को भेद छ । यसले कथात्मक गुण नभएका गैरआख्यान लेखाइमा पर्ने यावत् रचनालाई साहित्यको परिभाषामा समेट्छ । यस अर्थमा रिपोर्ताज पनि साहित्यमा पर्न आउँछ ।

मूलतः साहित्य विद्यालय र विश्वविद्यालयमा परम्परागत रूपमा अध्ययनका विषय पनि हुन् । रिपोर्ताज पनि पछिल्लो समयमा साहित्य र पत्रकारिता दुवै विषयमा समेटिन थालेको छ । त्योभन्दा पनि यो आमसञ्चार क्षेत्रमा कार्यरत जनशक्तिको रुचिको लेखाइ बन्दै गएको छ ।

## ब्लग र समाचार

सूचना र सञ्चार प्रविधिको विकासले लेखनका विधा निर्माण र पृथकीकरण पनि गर्न थालेको छ । इन्टरनेट र वेबसाइटको प्रयोग र स्मार्ट फोनको पहुँच आममानिसमा पुगेपछि संसार मान्छेको हत्केलामा आइपुगेको छ । यसले नवप्रवर्तनका अवसर पनि जुटाइदिएको छ जुन आमसञ्चारको क्षेत्रमा पनि प्रयोग भएको छ । त्यस्तैमध्येको एक ब्लग लेखन हो ।

पत्रकारिता कुनै सञ्चारमाध्यममा आबद्ध भएर वा स्वतन्त्र रूपमा पनि पत्रकारले गर्ने पेसागत काम हो । ब्लग भने पत्रकार वा अरू पनि व्यक्तिले ताजा विषयमा सत्य तथ्य खोज्दै लेख्ने बेवसाइटमा लेख्ने लेखन हो । ब्लग शब्द वेब र लग दुईको नवनिर्माण हो, जसमा वेबको अङ्ग्रेजी वर्ण 'बी' को आधा उच्चारण 'ब्' मा र 'लग' जोडिएको छ । 'लग' शब्द पानी जहाजका चालक दलले राख्ने घटनाको क्रमबद्ध लेखाइका लागि प्रयोग भएको मानिन्छ ।[१९]

ब्लग लेखनमा कुनै विवादास्पद वा उजागर नभएका पाटा खोतल्दै सिलसिलेवार रूपमा प्रस्तुत गरी वेबसाइटमा राखिन्छ । त्यसो गर्दा विभिन्न स्रोत र सन्दर्भ सामग्रीलाई पनि प्रस्तुत गरिन्छ वा मूल स्रोतसम्म पुगेर पाठकले आफैँ निष्कर्ष निकालोस् भन्ने अभिप्राय राखिन्छ । त्यसका लागि बहुमाध्यमको पनि प्रयोग गरिएको हुन्छ ।

समाचारमा भने स्रोतको उल्लेख गर्दै पुष्टि र सन्तुलनको प्रयास हुन्छ । ब्लग व्यक्तिगत, प्राज्ञिक वा पेसागत पनि हुन सक्छ । अहिले विभिन्न विश्वविद्यालयहरूले प्राज्ञिक ब्लग लेखनका लागि औपचारिक शिक्षण नै थालेका छन् । सञ्चारमाध्यमहरूले आममानिसलाई समेट्न उनीहरूका ब्लग लेखाइलाई आफ्ना वेबपोर्टलमा स्थान दिन सक्छन् । तिनमा अन्य विषयका अतिरिक्त भाषा र साहित्यका सामग्रीलाई पनि स्थान दिन सकिन्छ ।

## लिटरेचर रिभ्यु अर्थात् पूर्वकार्यसमीक्षा

साहित्यसँग जोडिएको लेखन अनुसन्धानको क्षेत्रमा अनिवार्य प्रयोगको अर्को एउटा पक्ष पूर्वकार्य समीक्षा वा पूर्वाध्यायन हो । अङ्ग्रेजीमा यसलाई लिटरेचर रिभ्यु भन्ने गरिएको छ । लिटरेचरको नेपाली आमप्रयोगको समानार्थी साहित्य हो र रिभ्यु भनेको समीक्षा वा पुनरवलोकन हो ।

कुनै नयाँ विषयमा खोजी गर्दा वा पुरानो विषयको पनि नयाँ शिराबाट अध्ययन गर्दा पहिले प्रकाशमा आइसकेका तथ्य र तथ्याङ्कलाई नयाँसँग तुलना गर्नुपर्ने हुन्छ । त्यसैलाई पूर्वकार्यसमीक्षा वा लिटरेचर रिभ्यु भनिन्छ ।

व्यवस्थित र योजनाबद्ध अनुसन्धान वा आकस्मिक खोजीमा पनि यो कार्य गरिने भएकाले समाचार र साहित्य दुवैमा यसको प्रयोग हुन्छ । यसको प्रयोजनका लागि सबै किसिमका अभिलेखित सामग्री साहित्यकै वर्गमा पर्दछन् । पुस्तक, पत्रिका, जर्नल, वेबसाइटका सामग्री, सरकारी वा गैरसरकारी निकाय वा संस्थाका सूचना सामग्री एवं दस्तावेज सबै साहित्यका रूपमा रहेका हुन्छन् । तिनमा लेखाइ वा छपाइका सामग्री मात्र नभएर श्रव्य वा श्रव्यदृश्य अभिलेख वा ताजा सामग्री पनि साहित्यकै रूपमा रहन्छन् अर्थात् भाषागत प्रयोजनका सबै सामग्री साहित्य हुन् । तर समाचार र अन्य साहित्यिक प्रयोजनका लागि तिनको प्रयोग पद्धति र स्रोत सन्दर्भ उल्लेख गर्ने परम्परा भने बेग्लै छ । फेरि त्यसले समाचार र साहित्यको भिन्नता देखाउँछ ।

## टुङ्ग्याउनी

मानव विकास क्रममा भाषाको आविष्कार भएदेखि नै सूचना सम्प्रेषण हुन थालेको अनुमान गरिन्छ । विभिन्न कालखण्डका अभ्यास हुँदै भाषाका यादृच्छिक वाक्प्रतीक निर्माण भएका हुन् । लिपिको आविष्कारले त्यसलाई अरू व्यवस्थित गर्दै लग्यो र अहिले सूचना सम्प्रेषण र साहित्य रुचिको क्षेत्र वा पेसा वा व्यवसाय पनि बनेको छ ।

सूचना प्रविधिको विकास र प्रयोगले त्यसलाई अरू व्यापक बनाइदिएको छ । साथै विभिन्न विधागत र विषय क्षेत्रगत प्रयोग समाचार र साहित्य लेखन दुवैमा हुन थालेको छ । त्यसको उपयोगले आममानिसको जीवनलाई सहज बनाइदिनुका साथै अवसरका नयाँ पाटा पनि दिएको छ । सञ्चार र साहित्यले त्यसको सदुपयोग गर्नुपर्दछ । त्यसका लागि चाहे मूल पत्रकारिता होस् वा साहित्यिकलगायतका विधागत पत्रकारितामा होस् फेरि अध्ययन र अनुसन्धानको आवश्यकता छ । ■

---

१९ https://twp.duke.edu/sites/twp.duke.edu/files/file-attachments/blogging-introduction.original.pdf

तर

# आमसञ्चार, पत्रकारिता र साहित्यकारिता






◆ त्रिभुवनचन्द्र वाग्ले



आमसञ्चार र साहित्यको सम्बन्ध तर गम्भीर रूपमा हेर्दा सञ्चार प्रक्रियामा साहित्यले सन्देशलाई मनोरञ्जनात्मक, सिर्जनशील, प्रभावी र कालजयी बनाउन सहयोग गर्छ । साहित्यले सञ्चार कला वृद्धि गर्छ, सन्देशको आयु वृद्धि गर्छ । गुणस्तर वृद्धि गर्छ । सञ्चार प्रक्रियालाई रङ्गीन बनाउँछ । ज्ञान अभिवृद्धि गर्छ ।



साहित्य र आमसञ्चारको सम्बन्ध व्यापक छ । आमसञ्चार र साहित्य मात्रै भनिए पनि यस सन्दर्भमा आमसञ्चार साधन पनि मिसिन्छन् । यसो भएपछि साहित्य, आमसञ्चार र आमसञ्चार साधनबीचको सम्बन्ध, भिन्नता र परिपूरकताबारे स्पष्ट हुनुपर्छ । साहित्य निराकार अभिव्यक्ति तथा बुझाइ हो, जबकि आमसञ्चार एक प्रक्रिया हो । आमसञ्चार साधन परिभाषित, सरल र सआकार प्रविधि हो ।

आधुनिक शिक्षण सङ्कायमा आमसञ्चार तथा पत्रकारिता पढाइ हुन थालेपछि आमसञ्चार, आमसञ्चार साधन, पत्रकारिताका परिभाषा तय गर्ने र घोक्ने प्रवृत्ति बढेको छ तर यस्ता परिभाषाले यन्त्रलाई मात्र 'सञ्चार साधन' भनिदिए । मानिसभन्दा ठूलो 'सञ्चार साधन' अरू केही हुन सक्दैन भन्ने सत्यमा आमसञ्चार साधनको आधुनिक परिभाषा दिने विद्वान्ले ध्यान दिएनन् । व्यासले ऋषिमुनिलाई सुनाएका ज्ञान (सन्देश, अनुभव) नै वेद भएकाले वेदभन्दा ठूलो सन्देश र व्यासभन्दा ठूलो 'सञ्चार साधन' कुनै यान्त्रिक प्रबन्ध हुन सक्लान् ? अहिले आएर भनिएको छ– 'आमसञ्चार फैलाउन प्रयोग गरिने कुनै पनि प्रविधिजन्य साधन आमसञ्चारका माध्यम हुन् ।' यो त अति सीमित परिभाषा हो । एउटा गन्धर्व आफैँमा सञ्चार साधन हो । सञ्चारकर्मी पनि हो । प्रेषक र प्रापक पनि हो । सञ्चार प्रक्रियामा व्यक्ति स्वयम्ले साधनका रूपमा पनि काम गर्छ । राजनीतिमा कार्ल मार्क्सले मानिसलाई उत्पादनको साधन भनेका छन् । आधुनिक अर्थशास्त्रले 'मानव संसाधन' भनेर मानिसलाई उत्पादनको 'साधन' भनेको छ । यसर्थ विद्यालय तहका पुस्तकमा भनिएझैँ आमसञ्चारका साधन भनेर पत्रपत्रिका, रेडियो, टेलिभिजन, अनलाइनको मात्र नाम लिइयो र मानिसलाई 'आमसञ्चार साधन' भनेर स्वीकार गरिएन भने आमसञ्चार र मानव महत्त्वको बृहत् अर्थ बुझ्न सकिँदैन ।

## आमसञ्चार र साहित्य

आमसञ्चार प्रक्रिया हो, साहित्य कन्टेन्ट (सामग्री) हो । साहित्यलाई विशाल अर्थमा बुझ्ने हो भने मानिसका बोलिवचन सबै साहित्य हुन् । विज्ञान, दर्शन, अर्थशास्त्र, राजनीति शास्त्र, समाज शास्त्र के होइनन् साहित्य ? चिकित्सकले बिरामी जाँचेको लिखत, प्रहरीले अपराध अनुसन्धान गर्दा तयार पारेका मुचुल्का सबै साहित्य हुन् । यस्ता असीमित क्षेत्र तथा परिभाषालाई साँगुरो पार्दै अहिले आएर सुन्दर अभिव्यक्ति, मनोरञ्जनात्मक लेख्य/अलेख्य प्रस्तुति, समाजलाई हित गर्ने भनाइ, विचार तथा सन्देश र सिर्जनशील लेखनलाई साहित्य भन्न थालिएको छ । महाकवि सोमनाथ सिग्देलले सर्वसाधारणलाई मुग्ध पार्ने अभिव्यक्तिलाई साहित्य भन्नुभएको छ ।

नाटक, कविता, आख्यान (कथा/उपन्यास) र निबन्धजस्ता चार विधा र विधाभित्रका उपविधालाई मात्र साहित्य भनिएजस्तै आमसञ्चारका साधनको परिभाषा र प्रकारलाई पनि छापा र विद्युतीय गरी दुईवटा मात्र खुम्च्याउन सकिन्छ तर नेपालको सन्दर्भमा शिलालेख आमसञ्चारको सशक्त साधन हुन् भन्नुपर्छ । यस्तै शङ्ख, सारङ्गी र ढोलकलाई आमसञ्चारका भन्नुपर्छ । सञ्चार साधन र आमसञ्चार

साधनमा भिन्नता देखाउने एउटा आधार प्रविधि हो भने शिलालेख, सारङ्गी, शङ्ख र ढोलकमा प्रविधि प्रयोग भएका छैनन् ? छन् भने यिनलाई आमसञ्चार साधन भन्नुपर्छ ।

यस्ता आमसञ्चार साधनबाट प्रसारित हुने सबै सन्देश वा अनुभूति हुन् साहित्य हुन् । यिनै सन्देश वा अनुभूतिलाई एक व्यक्ति वा स्थानबाट अर्को व्यक्ति वा स्थानसम्म प्रसार गर्नु सञ्चार प्रक्रिया हो । यस्ता सन्देश वा अनुभूति कुनै साधनमार्फत पठाइएमा ती आमसञ्चारका साधन हुन् । आमसञ्चारका तत्त्वहरू प्रेषक, सङ्केत, प्रतिसङ्केत, सन्देश, साधन, प्रापक र फिडब्याक (प्रतिक्रिया) बिना आमसञ्चार प्रक्रिया पूरा हुँदैन । यहाँ प्रेषक, साधन र प्रापक औजार हुन्, जसले सन्देश फैलाउन यान्त्रिक काम गर्छन् तर सङ्केत, प्रतिसङ्केत, सन्देश र फिडब्याक साहित्य हुन् जसले भाषा (सङ्केत)मार्फत विचार, प्रतिक्रिया, जनमत बनाउन सहयोग गर्छन् ।

सङ्क्षेपमा भन्नुपर्दा आमसञ्चार प्रक्रिया हो, जसले आम रूपमा उत्पादित सामग्री (सन्देश)लाई प्रविधिमार्फत ठूलो सङ्ख्याका उपभोक्ता (पाठक, दर्शक/श्रोता)सम्म पुऱ्याउँछ। त्यो सामग्री भनेको 'साहित्य' पनि हो, आमसञ्चार साधन (प्रविधि)मार्फत जसको प्रसार हुन्छ । यति नै हो आमसञ्चार र साहित्यको सम्बन्ध तर गम्भीर रूपमा हेर्दा सञ्चार प्रक्रियामा साहित्यले सन्देशलाई मनोरञ्जनात्मक, सिर्जनशील, प्रभावी र कालजयी बनाउन सहयोग गर्छ । साहित्यले सञ्चार कला वृद्धि गर्छ, सन्देशको आयु वृद्धि गर्छ । गुणस्तर वृद्धि गर्छ । सञ्चार प्रक्रियालाई रङ्गीन बनाउँछ । ज्ञान अभिवृद्धि गर्छ । एलएसआरडब्लू अर्थात् लर्निङ (सिकाइ), स्पिकिङ (बोलाइ), रिडिङ (पठन) र राइटिङ (लेखन)ले सञ्चारलाई प्रभावी बनाउँछ । यसलाई नेपालीमा सिकाइ, बोलाइ, पढाइ र लेखाइ 'सिबोपले' भनौँ । यी कार्यबिना साहित्यको उठान र विस्तार हुँदैन । यी काम आमसञ्चारका साधनद्वारा गरिने भएकाले साहित्य र आमसञ्चारका साधनबीच गहिरो सम्बन्ध देखिन्छ । आमसञ्चार साधनको कार्य सूचना, शिक्षा, मनोरञ्जन प्रदान गर्नु उत्प्रेरणा बढाउनु र सामाजिकीकरण गर्नु हो भनेर जानिसकेपछि यसको कार्य साहित्य प्रवर्द्धन पनि हो भनिरहनु पर्दैन ।

## आमसञ्चार साधन, आमसञ्चार र साहित्यको सम्बन्ध

आमसञ्चार साधन, आमसञ्चार र साहित्यको परिचयमा स्पष्ट भइसकेपछि यिनका कार्य र अन्तर्सम्बन्धबारे पनि स्पष्ट हुनुपर्छ । नेपालमा आमसञ्चारका परम्परागत साधनमा शिला, ताम्र, भोज ताडपत्र, तमसुक, सरकारी लिखत, शङ्ख, घण्ट, ढोलक, झ्याली, नाट्यशाला, गीत, भजनका खाल, बाजाहरू खासगरी सारङ्गी; चराहरू जस्तै परेवा, काग, कोइलीजस्ता पक्षलाई सम्झनुपर्छ । भारतबाट धार्मिक पुस्तक ल्याएर नेपालमा पढ्ने पढाइने गरिन्थ्यो । यस्ता पुस्तक, पुस्तिका, पम्प्लेट, सबैले नेपालमा सहित्यको श्रीवृद्धिमा योगदान दिँदै आए । गोर्खाभारत जीवन (१९४८), सुधासागर (वि.सं. १९५५), गोरखापत्र (१९५८) रेडियो नेपाल (विसं. २००७)पछि नेपालमा आधुनिक आमसञ्चारको युग भित्रियो भन्न सकिन्छ । सुरुमा दैनिक चार घण्टा प्रसारण सुरु गरेको रेडियो नेपालमा भजन र गीतजस्ता साहित्यिक कार्यक्रम बजाइएको थियो । आमसञ्चार साधन, आमसञ्चार र साहित्यको कार्य वा हेतु सूचना शिक्षा/ज्ञान, मनोरञ्जन प्रदान गर्नु, उत्प्रेरणा दिनु र सामाजिकीकरणमा सहजता दिनु हो । यस कोणबाट पनि आमसञ्चार साधन, आमसञ्चार र साहित्यबीच गहिरो सम्बन्ध रहेको पुष्टि हुन्छ । सुरुमा एरिस्टोटलले सञ्चारको मोडालिटी तयार गर्दा प्रेषक, सन्देश र प्रापकजस्ता तीन तत्त्व मात्र सञ्चार प्रक्रियामा  रहन्छन् भनेका थिए । पछि आएर आधुनिक अन्य विद्वान्हरूले 'साधन'को पनि परि कल्पना गरे । नन्लिनियर मोडल अफ कम्युनिकेसनका व्याख्याताहरूले सञ्चार प्रक्रिया पूरा हुन फिडब्याकको आवश्यकता दर्शाउँदै यसको महत्त्व पनि व्याख्या गरे । फिडब्याक भनेकै एक प्रकारको साहित्य हो । अझ सोमनाथ सिग्देलले भनेझैँ मन्त्रमुग्ध बनाउन सकियो भने फिडब्याक अझ प्रभावकारी हुन्छ र यसले सञ्चारको गुणस्तर वृद्धि गर्छ । सञ्चारको प्रभाव, छाप र गुणस्तर वृद्धिका लागि भनाइभन्दा गीत वा उखान प्रभावी हुनुले यसलाई पुष्टि गर्छ ।

सन्देशबिना सञ्चार प्रक्रिया पूरा हुँदैन । यसरी नै प्रेषक, माध्यम, सङ्केत, प्रतिसङ्केत र प्रतिक्रिया (फिडब्याक) पनि सञ्चार पूरा गराउन आवश्यक पर्ने तत्त्व हुन् । सङ्केत र प्रतिसङ्केत (भाषा, बोलाइ र बुझाइ, कोड/इन्कोड) प्रत्यक्षतः साहित्य हुन् । यस अर्थमा पनि सञ्चार/आमसञ्चार र साहित्यको सम्बन्ध रहन्छ । अलिकति फरक के हो भने भाषाबिना पनि सञ्चार हुन्छ तर भाषाबिना साहित्य सहज छैन ।

## आमसञ्चार, आमसञ्चार साधन, पत्रकारिता र साहित्य

व्यापक अर्थमा पत्रकारिता पनि साहित्य हो । साहित्य पनि पत्रकारिता हो । पत्रकारिता वर्तमान साहित्य हो । साहित्य विगतको पत्रकारिता हो । अर्नोल्ड म्याथुले भनेको वाक्य धेरैले दोहऱ्याउँछन्– 'पत्रकारिता हतारको साहित्य हो ।' यो हतारको मात्र होइन जनसामान्यको साहित्य पनि हो । यसको प्रभाव जनसमान्यमा छिटो पर्छ र मर्छ । पत्रकारिताको आयु कम छ तर साहित्यको आयु लामो हुन्छ । आज होमरले लेखेका साहित्यको बारेमा जुन र जसरी चर्चा हुन्छ त्यसरी नै  त्यसबेलाका समाचारको चर्चा हुँदैन ।




तत्क्षणका लागि भने समाचारको प्रभाव बिजुली चम्केजस्तो हुन्छ साहित्यको प्रभाव दियो बलेजस्तो। पत्रकारिताका कार्य पनि आमसञ्चार वा आमसञ्चारका साधन समानै छन्। यसर्थ छापा, वा विद्युतीय माध्यमबाट गरिने पत्रकारितामा साहित्यजन्य सामग्री राखिएका हुन्छन्। यसका उपभोक्ता र बजार पनि छ। साहित्यिक सामग्री नराखी सायदै कसैले आमसञ्चारको प्रयोग र पत्रकारिता गर्ने आँट गर्ला। यस सन्दर्भमा प्रकाशन, पत्रिका र पत्रकारिताबारे पनि स्पष्ट हुनुपर्छ। प्रकाशन र पत्रिका माध्यम भए। पत्रकारिता प्रक्रिया वा पेसा हो। नेपालका हरेकजसो पत्रिकाले साहित्य सामग्री राखेका हुन्छन्। साहित्यिक पत्रिका पनि छन्, जसले 'समाचार' नराखेर पनि आफूलाई जीवन्त बनाउन सकेका छन् तर समाचार पत्रिकाले कुनै न कुनै रूपमा, भलै परिशिष्ट प्रकाशित गरेर पनि साहित्यिक सामग्री दिनैपर्ने हुन्छ।

मधुपर्क, रचना, अभिव्यक्ति, शिवपुरी सन्देश, दायित्व यसैले पत्रिका कम र 'साहित्यिक प्रकाशन' हुन् भनेर बुझियो भने पत्रिका र प्रकाशनबीचको भिन्नता देखाउन सकिन्छ। यदि यस्तो भिन्नता हुँदैनथ्यो भने न्युज मिडिया र मिडियाबीचको भिन्नता देख्न सकिँदैन। जुन मिडिया (माध्यम/साधन)ले समाचारलाई प्रधानता दिन्छ भने त्यो न्युज मिडिया समाचार पत्रिका हो, जस्तै गोरखापत्र। जसले समाचार नभएर अन्य सामग्री मूलतः साहित्यलाई प्रधानता दिन्छ भने मिडिया हो, जस्तो मधुपर्क। यसै सन्दर्भमा पत्रिका र प्रकाशनको भिन्नता बुझ्नुपर्छ। गोरखापत्र पत्रिका हो, मधुपर्क प्रकाशन हो भनिरहनुपर्दैन। मधुपर्कले साहित्यलाई प्रधानता दिएकाले मधुपर्क साहित्यक प्रकाशन हो।

**पत्रकारिता र साहित्यिक प्रकाशन**

आमवक्ताले साहित्यक पत्रकारिता भनिरहेका सुनिन्छ। शाब्दिक अर्थमा मात्र विवाद नगर्ने हो भने पत्रकारिताले मूलतः सत्य घटनाको तथ्य/जानकारी सङ्कलन, लेखन, सम्पादन र सम्प्रेषण गर्छ। यी कार्यलाई पत्रिकाको प्रक्रिया पनि भनिन्छ। साहित्यकारिता (साहित्यिक प्रकाशन)ले 'सत्यमा आधारित' समाचार होइन काल्पनिक सन्देश वा सामग्रीको रचना, सङ्कलन, लेखन, सम्पादन र सम्प्रेषण गर्छ। साधारणतया पत्रकारले समाचारको घटना रचना गर्दैन तर साहित्यकारले सिर्जनामार्फत घटनाको रचना गर्छ। साहित्य र पत्रकारिताबीच यस्ता धेरै आधारभूमि भिन्न छन्। पत्रकारिता 'सत्य' चट्टानमा उम्रन्छ जबकि साहित्य कल्पनाको सागर वा सगरमा फैलन्छ। यसैले पत्रकार र साहित्यकारमा ठूलो भिन्नता छ। यही भिन्नता पत्रकारिता र साहित्यकारितामा पनि हुन्छ। हामीले पत्रकारितालाई कि 'सूर्यदेखि सूर्यमुनिसम्म' भनेर अति व्यापक, बृहत् र असीमित परिभाषामा बुझ्नुपर्छ। यसो हो भने पत्रकारितालाई पनि 'साहित्य' भन्न सकिन्छ। म्याथुले भनेजस्तै। होइन भने साहित्यका चार विधा र त्यसभित्रका उपविधा मात्र साहित्य हुन् भनियो भने म्याथुको सनातनी उदाहरण दिएर पत्रकारितालाई साहित्य भन्न सकिँदैन।

आधुनिक शिक्षाले सामान्य (जनरल) नभएर विशिष्टीकृत (स्पेसिफिक) अध्ययन क्षेत्रलाई सम्बोधन गर्छ। यस अर्थमा पत्रकारिता वा साहित्यको परिभाषा असीमित बनाउनु हुँदैन। यस्तो असीमित परिभाषाले अन्य विधाको स्वतन्त्र अस्तित्त्व स्वीकार गर्दैन् अर्थात् साहित्य वा पत्रकारितालाई सबैथोक भनियो भने इतिहासको अस्तित्त्व भेटिन्छ, मनोविज्ञान र समाजशास्त्र स्वतन्त्र विधा रहन सक्दैनन्। यसर्थ पत्रकारिता वा साहित्यलाई जनरल होइन स्पेसिफिक बनाउनुपर्छ। यति गरियो भने पत्रकारिता र साहित्य भिन्न विधा हुन् भन्ने स्पष्ट हुन्छ। पत्रकारिता र साहित्यिक प्रकाशनका भिन्नताबारे धेरै बोल्नु पर्दैन।

'साहित्यिक पत्रकारिता' यो आफैँमा गलत र अस्पष्ट बुझाइ वा अवधारण हो । साहित्यिक पत्रकारिता दुई अर्थमा भनिने गरिएको पाइन्छ । एक, रोचक घिमिरे र नगेन्द्रराज शर्माले रचना र अभिव्यक्तिमार्फत 'साहित्यिक पत्रकारिता' गर्नुभएको छ भनिन्छ । अर्को, कसैले समाचार पत्रिका वा प्रसारण माध्यममा साहित्यलाई बिट बनाएर पत्रकारिता गरेको छ भने यसलाई पनि 'साहित्यिक पत्रकारिता' भनेर बुझिने गरिएको छ । विधाको स्वतन्त्र अस्तित्त्वका दृष्टिले यी दुवै बुझाइ गलत छन् । रोचक घिमिरे र नगेन्द्रराज शर्माले 'पत्रकारिता' गरिरहनु भएको छैन । उहाँहरूले साहित्यिक कर्म वा प्रकाशन गरिरहनु भएको छ । यसलाई 'साहित्यकारिता' भन्नुपर्छ । कसैले साहित्य प्रधान कार्यक्रम चलाएर वा पत्रिकामा साहित्यिक गतिविधिलाई 'बिट' बनाएर पत्रकारिता गरेको छ भने त्यो 'साहित्यिक पत्रकारिता' नभएर पत्रकारिताको एउटा बिट वा विषय मात्र साहित्य हो भन्नुपर्छ ।

कतिपयले छापा पत्रकारिता, विद्युतीय पत्रकारिता, अनलाइन पत्रकारिता पनि भन्छन् । खासमा यी पत्रकारिताका प्रकार होइनन् । यी त आमसञ्चार साधनका भिन्नता मात्र हुन्, जसले पत्रकारिताको स्वरूपलाई केही प्रभाव पार्छन् । विद्युतीय साधन हुन्छ, विद्युतीय पत्रकारिता हुँदैन । पत्रकारिताको परिभाषा, प्रक्रिया, मूल्य, मान्यता, आचारसंहिता कुनै पनि कोणबाट छापा पत्रकारिता र विद्युतीय पत्रकारिता भनेर भिन्नता गरिएको पाइँदैन । साधन र प्रविधिको भिन्नताले पत्रिका, रेडियो, अनलाइनमा कति लेख्ने, कसरी लेख्ने भन्ने भिन्नता हुन्छ । यो त माध्यमहरू प्रकृतिले ल्याएका लेखन र प्रस्तुतिगत भिन्नता हो । यसैका आधारमा 'छापा पत्रकारिता, विद्युतीय पत्रकारिता' भन्नु 'खानु' र 'ज्युनार' गर्नुजस्तै हो । सर्वसाधारण हातले भात खान्छन् । ठूलाबडा चम्चाले भुजा ज्युनार गर्छन् । चम्चा र हातको प्रयोगका आधारमा भात र भुजा, खानु र ज्युनारमा कस्तो भिन्नता देख्ने, देखाउने ? यसर्थ साहित्यिक पत्रकारिता, खोजी पत्रकारिता, अर्थ–उद्योग पत्रकारिता भन्नु पनि बौद्धिक विलाशिता हो । यिनलाई पत्रकारितामा बिट (विषय) वा आयाम भन्न सकिन्छ । यसरी बिटका आधारमा पत्रकारितालाई छुट्याउँदै जाने हो भने एक दिन खेलकुद पत्रकारिता फुटेर क्रिकेट पत्रकारिता र क्रिकेटभित्र पनि टेस्ट र एक दिवसीय क्रिकेट 'पत्रकारिता' बन्नेछन् । पत्रकारितामा बिट विभाजन गर्न सकिन्छ तर साहित्यमा जसरी आख्यान, निबन्ध, नाटक र कविताजस्ता विधा विभाजन गर्न मिल्दैन ।

## पत्रकारिता र साहित्यिकारिता

साहित्यिक कर्मलाई पत्रकारिता भन्ने कि साहित्यकारिता ? गम्भीर छलफलको विषय बन्नुपर्छ । म्याथुले भनेझैँ पत्रकारितालाई नै 'साहित्य' (हतारको) भनौँ न त । पत्रकारितालाई साहित्य भन्न को को सहमत हुनुहुन्छ हात उठाऔँ न त । उमेरको हिसाबले पनि पत्रकारिताभन्दा साहित्य र साहित्यकारिता जेठो हो । पत्रकारिताभन्दा साहित्यकारिता प्रभावी र दीर्घजीवी पनि छ । पत्रकारिता र साहित्यकारिताका लक्षित वर्ग पनि भिन्न छन् । यिनको उद्देश्य (हेतु), आधारभूमि, पनि भिन्न छन् । यिनै आधारमा साहित्य/साहित्यकारिता तथा पत्रकारितालाई एकआपसबाट छुटाउनुपर्छ । भिन्न विधा बनाउनुपर्छ । होइन भने पत्रकारिताको दलन साहित्यकारिताले स्वीकार गर्नुपर्छ ।

राजनीतिक भाषामा भन्ने हो भने यस्तो प्रवृत्तिलाई पत्रकारिताको 'विस्तारवादी चरित्र' भन्न सकिएला । समाजको आवश्यकतामा नयाँ नयाँ अध्ययन विधा अस्तित्त्वमा आउँछन् । विधाहरू विभाजित हुन्छन् । फेसन डिजाइन, हाम्रा अग्रजले कल्पना गरेका थिए र कुनै दिन, उच्च शिक्षाको एक विधा बन्नेछ ? त्यस्तै अर्थशास्त्रलाई विभाजन गर्दै विकास अध्ययन, ग्रामीण अर्थशास्त्र, व्यष्टि र समष्टि अर्थशास्त्र किन भनिएको होला भन्ने प्रश्नले पनि पत्रकारिता र साहित्यकारिता एउटै विधा होइनन् भन्ने स्पष्ट गर्छ । उत्तरआधुनिकवादले स्थापित मान्यता, मूल्य, परम्परा, नेतृत्व, केन्द्रीयता, परिभाषा, विश्वासलाई नयाँ परिवेशमा व्याख्या गर्छ । केन्द्रीयताको विघटन गर्छ र नयाँ नयाँ उपकेन्द्रको अस्तित्त्व देखाउँछ । पत्रकारिताको केन्द्रीयता भत्काएर 'साहित्यकारिता'को स्वतन्त्र अस्तित्त्व विनिर्माण गर्ने कि ? पत्रकारिताको शासनमा साहित्यकारितालाई दमित द्वारपाले बनाउने हो गम्भीर बहस हुनुपर्छ ।

आमसञ्चार र सहित्यका चुनौती

पछिल्ला दशक आमसञ्चारका साधनको विकासले यसबाट संप्रेषित हुने सन्देशका स्वरूपमा परिवर्तन आएका छन् । यस्ता साधनबाटबाट साहित्यभन्दा सूचनाको प्रवाह तीव्र र प्रभावकारीरूपमा हुने गरेको छ । मिडिया र न्यूज मिडिया भनेर जसरी विभाजन गर्ने गरिएको छ संप्रेषित सामग्रीको आधारमा आमसञ्चार साधनलाई पनि साहित्यप्रधान र गैरसाहित्य प्रधान भनेर विभाजन गर्न सकिन्छ । साहित्यप्रधान सञ्चारसाधनको प्रभावकारिता कमजोर भएका छन् । सामाजिक सञ्जालको उपस्थितिले परम्परागत साहित्यप्रधान आमसञ्चारका साधनमा चुनौती थपिदा छन् । लामालामा रचनाका सट्टा सामाजिक सञ्जाल (माध्यम) मा गरिने घोचपेच र छोटा प्रतिक्रियात्मक रचनाको लोकप्रियता बढ्दो छ । अहिलेको अवस्थामा परम्परागत आमसञ्चारका साधनमात्र चुनौतीमा परेका छैनन्, यस्ता साधनले संप्रेषण गर्ने साहित्यिक रचना, रचनाकार, सम्पादक, पाठक, प्रकाशक वितरणका पुराना संरचना, मान्यता, रजगज आदिमा चुनौतीको चौबाटोमा छन् । ■

# आमसञ्चार र साहित्य



दृष्टिकोण


◆ अभय श्रेष्ठ

तत्काल विशाल समुदायसम्म पुग्ने माध्यम नै आमसञ्चार हो । त्यसैले भन्नैपर्ने हुन्छ, सबै सञ्चारमाध्यम आमसञ्चार होइनन् । साहित्यिक रचना स्वयंमा सञ्चारमाध्यम हो । कुनै समयको साहित्यिक हवाईपत्र प्रकाशनदेखि मधुपर्क, गरिमा, समकालीन साहित्य, कविता, अभिव्यक्ति, रचना, भानु, मिर्मिरे, समष्टि, समकालीन साहित्य, सयपत्री, रूपान्तरण, थायभु, नवप्रज्ञापन, कलाश्री, शिवपुरी सन्देश, जुही जस्ता साहित्यिक पत्रिका पनि आमसञ्चार होइनन् । आधुनिक अवधारणाअनुसार भन्ने हो भने राजनीतिक आग्रहसाथ प्रकाशित अधिकांश नेपाली साप्ताहिक पनि आमसञ्चार होइनन् । जनसाधारणसम्म सूचना प्रवाह गर्नुभन्दा बढी तिनको उद्देश्य केवल 'हस्तिहाडको बुर्जामाथि विराजमान प्रभुको उपासना गर्नु र प्रसाद झार्नु' हो । अलिअघिसम्म टेलिभिजन, रेडियो, एफएम, केही राष्ट्रिय दैनिक, केही साप्ताहिक, केही पाक्षिक, थोरै मासिक खास अर्थमा आमसञ्चार मानिन्थे । आज यीभन्दा  पनि अगाडि टिकटक, फेसबुक, ट्विटर, इन्स्टाग्रामलगायत सामाजिक सञ्जाल र युटुब आमसञ्चारका रूपमा देखा परेका छन् ।

●●●

आधुनिक युगमा आमसञ्चार मानिसका लागि पलपलको आवश्यकता हो । यसको निरन्तर दबाबबाट राजनीतिक सत्ता नै विघटन भएका अनेक उदाहरण छन् । तर यस्तो प्रभावशाली माध्यमले साहित्यलाई गम्भीरतापूर्वक सम्प्रेषण गर्नुपर्ने सामग्रीका रूपमा लिएको छैन । यसले गर्दा हाम्रा यी माध्यममा साहित्यले उचित स्थान पाएको छैन । जति पाएको छ, त्यहाँ कीरालाई हीरा र हीरालाई कीरा बनाइएको छ ।

●●●

आधुनिक युगमा आमसञ्चार मानिसका लागि पलपलको आवश्यकता हो । यसको निरन्तर दबाबबाट राजनीतिक सत्ता नै विघटन भएका अनेक उदाहरण छन् । तर यस्तो प्रभावशाली माध्यमले साहित्यलाई गम्भीरतापूर्वक सम्प्रेषण गर्नुपर्ने सामग्रीका रूपमा लिएको छैन । यसले गर्दा हाम्रा यी माध्यममा साहित्यले उचित स्थान पाएको छैन । जति पाएको छ, त्यहाँ कीरालाई हीरा र हीरालाई कीरा बनाइएको छ । अधिकांश आमसञ्चारमा साहित्यको मर्मसँग अपरिचित मानिसहरू साहित्यिक सामग्री सम्प्रेषण गरिरहेका हुन्छन् । यसले गर्दा 'लिलिपुट मानवहरू'ले विशाल मानवको छवि बनाएका अनेक उदाहरण छन् । सम्बन्धित सञ्चारकर्मीसँग 'सुसम्बन्ध' राख्न सक्ने कमजोर स्रष्टाले पनि आमसञ्चारमा ठूलो ठाउँ पाउँछ । जति सिर्जनशील भए पनि सञ्चारकर्मीसँग टाढा रहने स्रष्टाको नामनिसान देख्न दुर्लभ हुन्छ । यसले गर्दा आम पाठकबीच साहित्यको छवि धमिलिन्छ । कस्मेटिक साहित्यको जतातते प्रकाशन र प्रसारण भएपछि मौलिक साहित्य ओझेल पर्छ । अर्कातिर प्रकाशन वा प्रसारणका लागि स्तरीय साहित्य छान्न नसक्नु वा प्रकाशक, प्रबन्ध निर्देशकदेखि कम्प्युटर अपरेटरसम्मका श्रीमान्, श्रीमती, प्रेमी, प्रेमिका र आफन्तको सस्तो प्रलापलाई साहित्यका रूपमा छाप्नुको पीडा आमसञ्चारका साहित्य सम्पादकहरू 'आजभोलि स्तरीय साहित्य लेखिएकै छैन' भनेर व्यक्त गर्छन् ।

**भाषाको सत्ता**

भनिन्छ, भाषामाथि वर्चस्व राख्नेसँग एउटा सत्ता पनि निहित हुन्छ । फ्रान्सेली भाषामा यससम्बन्धी एउटा रोचक अध्ययन भएको छ । फ्रान्समा राज्यक्रान्तिअघि साहित्यकार नै 'भाषाको प्रभु' थियो । सन् १७८९ मा भएको फ्रान्सेली राज्यक्रान्तिसँगै भाषामाथि साहित्यकारको जमिनदारी अन्त्य भयो । भाषालाई अर्कै उद्देश्यका लागि प्रयोग गर्ने बेग्लै वर्गको उदय भयो । सय वर्षबीच यस्ता अन्य वर्ग, उपवर्ग देखापरे जो साहित्यबाटै पूरै पृथक् थिए तर बदलिँदो समाज तिनीहरूप्रति नै बढी आकर्षित

थियो । पत्रकार, राजनीति विश्लेषक, समसामयिक टिप्पणीकार तिनीहरूमध्ये केही थिए । यसै प्रसङ्गमा फ्रान्सेली चिन्तक रोलाँ बार्थले साहित्यकारका लागि 'अथर' र अन्य लेखकलाई 'राइटर' शब्द प्रयोग गरेका थिए।

फ्रान्सेली भाषामा भएको यो अध्ययन हाम्रो सन्दर्भमा पनि ठ्याक्कै मिल्दो देखिन्छ । प्रजातन्त्र पुनर्स्थापनापछि यहाँ पनि आमसञ्चारको द्रुत विकास भयो भने भाषामाथि साहित्यकारको एकलौटी जमिनदारीको अन्त्य । त्यसअघि यहाँ पनि साहित्यकार नै देशका प्रमुख पत्रकारका रूपमा स्थापित थिए । आमसञ्चारले यहाँ पनि साहित्यलाई भन्दा बढी समाज विज्ञान, राजनीति विश्लेषण, मनोरञ्जनलाई बढी महत्त्व दियो । साहित्यलाई उचित स्थान दिइएन । दिइए पनि महत्त्वपूर्ण ठानिएन । यसले गर्दा भाषाको सबैभन्दा शक्तिशाली माध्यम आम पाठकबाट टाढा भयो । विगतमा 'शारदा' वा 'रूपरेखा'मा प्रकाशित रचनाबारे भएका चर्चा–परिचर्चा अब एकादेशका कथा भइसके । साहित्यिक पत्रिकामा प्रकाशित रचनाबारे सम्बन्धित लेखक नै अनभिज्ञ हुने स्थिति छ भने आम पाठकको हालत के होला ?

फ्रान्समा मौखिक सम्प्रेषणको माध्यम मुद्रित भाषाले विस्थापित गरेपछि अखबारमा लेखिरहेका त्यहाँका ठूला साहित्यकार एमिल जोला, भिक्टर ह्युगो, बाल्जाकलगायतले भाषालाई नै पेसा बनाएका थिए । जोलाहरू पत्रकार थिएनन् । पत्रपत्रिकामा उनीहरू साहित्य नै लेख्थे । त्यतिखेर विकल्पको अभावमा साहित्यको ठूलो उपभोक्ता वर्ग थियो । साहित्यकारहरू मिथकीय नायक थिए । भारतमा रवीन्द्रनाथ टैगोर पूरै देशका गुरुदेव थिए । शरतचन्द्र चट्टोपाध्याय सिनेमाका नायकजस्तै कति किशोरी र युवतीका सपनाका राजकुमार थिए । नेपालमै पनि भानुभक्त आचार्य, लेखनाथ पौडेल, लक्ष्मीप्रसाद देवकोटा वा बालकृष्ण समको कत्रो शान थियो ! शासकहरू लेखकसँग भित्रभित्र थरहरी हुन्थे । आज हेर्नुस्, समाजमा साहित्यकार बेग्लै ग्रहको प्राणीजस्तो छ । यता पत्रकारलाई रिझाउन तस्कर, प्रशासक, ठूला उद्योगपतिदेखि मन्त्री, प्रधानमन्त्रीसम्म लागिपरेका देखिन्छन् । साहित्यकारको सामाजिक मानमर्दन कतिसम्म छ भने पत्रकारिता पेसा अपनाएको कुनै साहित्यकार जनसाधारणसामु आफ्नो परिचय साहित्यकारका रूपमा होइन, पत्रकारकै रूपमा दिन चाहन्छ । पत्रकारितामा धाक, रवाफ, शान सबै छ । तुलनामा साहित्यमा त्यस्तो केही छैन । साहित्यिक पृष्ठभूमि भएका नाम चलेका पत्रकारहरू कुनै दिन आफू साहित्यकार थिएँ भन्न पनि हिचकिचाउँछन् किनभने तिनलाई समाजमा धाक जमाउनुछ । साहित्यकारको परिचयमा सामाजिक धाक जमाउन सम्भव छैन । मार्क्सवादी आलोचक टेरी एगलटनले साहित्यकारको सामाजिक पतनबारे रमाइलो विश्लेषण गरेका छन् । उनका अनुसार साहित्यकारको सामाजिक पतनको मुख्य कारण खुलाबजार अर्थनीतिसँगै फस्टाएका नयाँ पेसाको आकर्षणसँग प्रतिस्पर्धा गर्न नसक्नु हो । स्तम्भकारका रूपमा खगेन्द्र सङ्ग्रौलालाई छाप्न सबैजसो आमसञ्चारले प्रयास गर्छन् । तर कथाकार खगेन्द्र सङ्ग्रौलालाई त्यही रूपमा स्विकारिँदैन । साहित्यकारको सामाजिक पतनको यो जति ज्वलन्त उदाहरण अरू के होला ?

## नाफाघाटाको युग

पुँजीवादी अर्थ व्यवस्थाले मानिसलाई खन्चुवा, उपभोगी, महत्त्वाकाङ्क्षी र आत्मकेन्द्रित बनाइदिएको छ । आज हेर्नुस्, सहरका हरेक डबलीमा, कौसी कौसीमा, भान्छामा, सवारीसाधन छेक्नेगरी सडकमा, गल्ली र गोरेटोमा, खेतमा, भिरपाखामा, रुखमा, जलमा, थलमा यत्रतत्र मूलतः किशोरी र युवतीहरू टिकटक बनाउन नाचिरहेका भेटिन्छन् । कुनै युवती 'धान गोड्ने बेला भो गैरीखेतैमा' भन्ने गीतमा नृत्य गर्दा किन आफ्नै अङ्गतिर सङ्केत गर्छिन् ? युट्युबमा किन हरेकजसो सामग्रीमा यौनप्रेरित शीर्षक राखिन्छ ? किन त्यहाँ शीर्षक एउटा हुन्छ र सामग्री अर्कै हुन्छ ? किन आजका महिला लेखकहरू लेखन साधना छाडेर टिकटकको कृत्रिमतामा रमाइरहेका छन् ? यी सबको जवाफ हामीले पुँजीवादी युगकै अन्तर्यमा खोज्नुपर्ने हुन्छ ।

पुँजीवादी अर्थ व्यवस्थासँगै विकसित आमसञ्चारको प्रकृति हेर्दा लाग्छ, राजनीतिका विभिन्न पाटा समाचारका बिट बनेजस्तै चाँडै नै यहाँ किशोरी र युवतीको सौन्दर्य विशेषज्ञ पत्रकारहरूको उदय हुनेछ । त्यसमा पनि युवतीका आँखाको मादकता, मुस्कानको आकर्षण, छालाको चमक, ओठ, हिप र छातीको कमनीयताबारे विशेषज्ञ पत्रकारहरू हुनेछन् । अमेरिका, युरोप हुँदै भारतसम्म भित्रिसकेको पत्रकारको यो वर्ग नेपालमा पनि चाँडै नै देखापर्ने छन् । 'नवनायिकाको पिठ्युँमा मैथुनरत घोडा' वा 'सिसीभित्र यौनकला' प्रवृत्तिका शीर्षक त्यसकै ग्रान्ड रिहर्सल हो ।

## अन्त्यमा

भेनेज्वेलाकी अभिनेत्री एलिसिया क्याकाडो भन्छिन्, 'ग्लामर अस्थायी हो, चेतना सधैँका लागि ।' सिर्जना चेतना हो । त्यसका चुनौतीहरू अनेक छन् । आर्टिफिसियल इन्टिलिजेन्सको युगमा च्याटजीपीटीजस्ता च्याटबोटले कविता, कथा र निबन्धसमेत लेखिदिन थालेको छ । तर जसरी रोबोटमा प्राण हुँदैन, त्यसैगरी त्यस्ता रचनामा हृदयको झङ्कार हुँदैन । साहित्यमा शान, धाक र रवाफ छैन तर आत्मा र चेतना छ । स्रष्टाको काम सिर्जना गरेर सभ्यता निर्माण गर्ने हो, नाफाघाटा हेर्ने होइन । नाफाघाटा हेर्ने भए उसले सिर्जना छाडेर तस्करी सुरु गर्नुपर्ने हुन्छ । ■

**twitter@avayashrestha**

# क्रियाशील शब्दशिल्पी



◆ जय भट्टराई



पात्र

**सहर यसका गल्ली र सडकहरू उत्तिकै साँगुरो छ । कस्सिएर हिंड्नेका लागि कहीँबाट कहीं पुग्न पनि आधा घण्टा लाग्दैन । विमानस्थल त्यहीँ छ र पशुपतिनाथ पनि त्यहीँ छन् । तर पनि यस्तो लाग्छ– काठमाडौँ टाढाटाढासम्म फैलिएको छ र साह्रै विस्तृत छ । किनभने काठमाडौँको दूरीलाई समयले नाप्दैन, थकाइले नाप्छ । यहाँ जो पनि आउँछ, त्यो थाक्छ । थकाइ यस सहरको स्थायी रोग हो ।**

यही सहरमा जीवनको सात दशक बिताउनुभएका किशोर नेपाल थाक्नुभएको छैन, स्थायी रोगबाट टाढै हुनुहुन्छ, उहाँकै सहरमा । आफ्नै निबन्ध (यो काठमाडौँ, हामो काठमाडौँ)मा भनेजस्तो । निरन्तर क्रियाशील किशोर नेपालको अलग चिनारी । यही क्रियाशीलताभित्र अटाएका छन् साहित्य, पत्रकारिता, साहित्यिक पत्रकारिता । ७२ वर्षको उमेरको सँघार टेक्दै गरेका उहाँ, उहाँकै कार्यालयको सँघार टेकेर उभिएको छु यतिखेर किशोर नेपाललाई गरिने सम्बोधनमा स्पष्ट हुन । उहाँ साहित्यकार कि पत्रकार ? निरन्तर यी दुवै क्षेत्रमा सिर्जनशील बनेर बिताएका ५६ वर्षहरूमा यस्ता प्रश्नको उत्तर दिन उहाँ अघि सर्नुहुन्न, सायद आफ्नै योगदान र सिर्जनाका बारेमा आफैँले के भन्ने लाग्दो पनि होला । समष्टिमा उहाँ दुवै हो । दुवैमा उत्तिकै पोख्त । उहाँको व्यक्तित्व र योगदानले पनि यसै भन्छ । शब्दमै जीवन बिताउने शब्दशिल्पी भनेर सम्बोधन गर्न मन लाग्छ एकमुष्ठ रूपमा । चिन्ताका क्षणहरू नामक निबन्ध सङ्ग्रह पढ्नेहरूका लागि उहाँ सशक्त निबन्धकार हो, अर्के प्रस्तर पढ्नेहरूका लागि उहाँ सफल कथाकार हो । आफैँलाई चित्त नबुभ्ने कथा पाठकसमक्ष पस्केर त्यसको तुक नदेख्ने उहाँले पछिल्ला समय कथा लेखनमा त्यति जाँगर चलाउनुभएन । उपन्यास र अनुवादका कृतिका कुरा त छँदैछन् । पत्रकारितामा बढी समय दिन थालेपछि साहित्यकार किशोर नेपाल के ही समय साहित्यबाट हराएजस्तै हुनुभयो । केही समय मात्र हो, त्यसपछिका समयमा उहाँका मेरो समय, शक्तिको अवतरणलगायत निबन्धका कृतिहरू प्रकाशित भए । यसै मेसोमा जोड्नुपर्ने हुन्छ पाताल र सहरको कथा उपन्यासलाई पनि । लघु उपन्यास रङ्ग मण्डल पनि प्रकाशमा आइसकेको हो पहिले नै । एउटा लेखक नलेखी कसरी बस्न सक्छ र ? उहाँ पनि बस्नुभएन प्रकाशनमा केही सुस्ताएको चाहिँ पक्कै हो । मेरो समय यसैको साक्षी हो । साहित्यका विविध विधामा कलम चलाए पनि उहाँको लेखन निबन्धमै चुलिएको छ । निबन्धकै बारेमा उहाँका धारणाहरू बढी सार्वजनिक भएका छन्, निबन्धमै उहाँ बढी खुलस्त हुनुभएको पनि छ । साढे तीन दशकअघिको भेट सम्भँदै छु म, बत्तीसपुतलीस्थित उहाँकै निवासमा । त्यतिखेरको संवाद पनि निबन्धमै केन्द्रित थियो– नेपाली गद्य साहित्यमा आफ्नो कीर्ति स्थापना गर्ने अभीष्ट राखेरभन्दा मैले आफ्ना पारिवारिक चिन्ताका समस्या मन र मस्तिष्कको स्वच्छताका लागि निबन्धहरू लेखेँ ।

●●●

साहित्यबाट थालिएको यात्रामा पत्रकारिता मिसिन पुगेपछि किशोर नेपालको पहिचान पत्रकारितामा बढी चुलिँदै गयो । कुनै बखत चिन्ताका क्षणहरू, अर्के प्रस्तर जस्ता निबन्ध र कथाका कृतिबाट यी दुवै विधामा नाम कमाउने उहाँ साहित्यकारभन्दा पत्रकारका रूपमा बढी क्रियाशील बन्नुभयो ।

●●●

किशोर नेपालको किशोर अवस्था नै हो उहाँको जीवनको उकाली ओराली । पाँच वर्षको उमेरमा बाबु गुमाएपछि आइपरेका आर्थिक समस्या, साहित्य लेखन र पत्रकारिताको थालनी किशोरवयकै सेरोफेरोमा भए । कविता लेखेर थालिएको साहित्य यात्रामा पहिलो पारिश्रमिक दस रुपियाँ खल्तीमा हालेर गजक्क परेका दिनदेखि आजसम्मको दिनमा थचक्क बसेको पनि सायदै होला । दौडादौडको जीवन, रहरलाग्दो, आरिसै लाग्ने सक्रिय



जीवन बाँच्नुभएको छ उहाँले । छापा पत्रकारिता, रेडियो पत्रकारिता, टेलिभिजन पत्रकारिता, अनलाइन पत्रकारिता सर्वत्र काम गरेको अनुभव सँगालेको उहाँले १८ वर्षको उमेरमै पत्रकारिताको थालनी दिनमानको संवाददाता भएर गर्नुभयो । १५ वर्षसम्म त्यसैमा संलग्न हुनुभयो । गोरखापत्र, नागरिक, कान्तिपुर, नयाँसडक, ब्रोडसिट कमै होलान् उहाँले नेतृत्व नलिएको । देशान्तर साप्ताहिकको इतिहास र उहाँको योगदान कसले बिर्सन सक्ला र ? स्तम्भकारका रूपमा पनि त्यत्तिकै क्रियाशील । युवा उमेरमा गोरखापत्रमा हाम्रा गाउँघर लेखेर अघि बढेको विगत कान्तिपुर गाथासम्म आइपुग्दा धेरै पढिने र लोकप्रिय स्तम्भकारको चिनारी बनिसकेको छ उहाँको ।

साहित्यमा पत्रकारिताको फ्युजन गरेर लेख्न सक्ने साहित्यकारको चिनारी, पत्रकारितामा पनि साहित्यिक मिठास दिन सक्ने छवि बनेको छ । साहित्यबाट अलि टाढिएर पत्रकारितासँग नजिकिएको जस्तो देखिए पनि साहित्यसँगको साइनो उस्तै छ ।

म पत्रकारितामा पनि साहित्य लेख्छु । लेखन निरन्तर छ, छापिन मात्र कम भएको हो । तपाईं नढाँटी भन्नुस् त साहित्य पहिलेजस्तो छ त अहिले ? पछिल्ला समय मलाई त्यति जाँगर पनि चलेको छैन । लेखन बलजफ्ती लेखेर हुँदैन । अद्‌भुत बनाउँछु भनेर कुँदी कुँदी कहिल्यै लेखिनँ आफूलाई लागेको र देखेको, अनुभूत गरेका कुरा सर्सती लेखेको हुँ । चिन्ताका क्षणहरूकै सन्दर्भमा मेरा पाठक, समीक्षकजस्तै म पनि सन्तुष्ट छु ।

कविता लेखेर (२०२४ को लुम्बिनी सन्देश) साहित्यमा आउनुभयो, कविता लेख्न कम गर्नुभएको हो ?

बत्तीसपुतलीस्थित उहाँकै कार्यालयमा छौँ हामी । त्यही थलोले दिन्छ उहाँको क्रियाशीलताको उदाहरण । पत्रकारितामा क्रियाशील भए पनि साहित्यमा अलि सुस्ताएको हो कि भन्ने चासो हो मेरो । कविता लेख्छु भनेर लेख्ने हो भने त्यो कवितै हुँदैन । कविता त स्फुरण हुनुपर्छ अनि पो लेखिन्छ कविता । कविता फुटकर रूपमा प्रकाशमा आइरहेका छन् । सङ्ग्रह निकाल्नेचाहिँ जाँगर छैन । पुर्ख्यौली थलो नुवाकोट भए पनि काठमाडौँको खिचापोखरीमा बस्थ्यो उहाँको परिवार, त्यतिबेलाको समयमा जान्नेबुझ्नेले छोरै जन्मन्छ भनेर लख काटेपछि उहाँलाई जन्माउनकै लागि उहाँकी आमालाई ओलिनकाठमा चढाएर झिल्टुङ, नुवाकोट लगेको केही समयमा उहाँको जन्म भयो विसं २००९ मा ।

अहिले साहित्य साहित्यजस्तो छैन, पत्रकारिता पत्रकारिताजस्तो लाग्दैन उहाँलाई र पनि जोडिनुभएको छ उहाँ यी दुवै क्षेत्रमा । यी दुवै क्षेत्रले दिएको नाम र दाम नै जीवनको मूल काम बनेको छ । झुत्रे भनेर सुरुवाती दिनमा लेख्ने किशोर नेपाल टिपटप भएर हिँडेर कलमका माध्यमबाट चिनिएको पनि धेरै भइसक्यो । बाबुको निधनपछि आइपरेका घरायसी समस्या र आर्थिक उपार्जनका लागि किशोरावस्थामै जीवन धान्ने पेसा बन्न पुग्यो पत्रकारिता । बालक पत्रिकामा पहिलो कविता छापिएपछि पाएको दस रुपियाँ खल्तीमा बोकेर साढे दुई रुपियाँको नयाँ कमिज सिलाएको आफ्नै विगत सम्झिँदा पनि रोमाञ्चित बनिदिनुहुन्छ उहाँ । समय सधैँ एकनास कहाँ रहन्छ र ? पत्रकारिता र साहित्यले चुलिएको व्यक्तित्व प्रधानमन्त्रीको प्रेस सल्लाहकार, गोरखापत्रको महाप्रबन्धक, नेपाल टेलिभिजको अध्यक्ष, पत्रकार महासङ्घको सभापति भएर पनि बिते ।

साहित्यबाट थालिएको यात्रामा पत्रकारिता मिसिन पुगेपछि किशोर नेपालको पहिचान पत्रकारितामा बढी चुलिँदै गयो । कुनै बखत चिन्ताका क्षणहरू, अर्कै प्रस्तरजस्ता निबन्ध र कथाका कृतिबाट यी दुवै विधामा नाम कमाउने उहाँ साहित्यकारभन्दा पत्रकारका रूपमा बढी क्रियाशील बन्नुभयो ।

साहित्य र पत्रकारितामा पहिलेजस्तो चार्म खेख्नुहुन्न । “पत्रकारितालाई व्यावसायिकको नाममा असरल्ल पारिएको छ, मिसन त हुनुपर्‍यो नि । १२३ वर्षको गोरखापत्रले व्यावसायिक बन्न अझै सकेको छैन, शब्द मात्र क्वाइन गरियो, यथार्थमा हाम्रो पत्रकारिता व्यावसायिक बन्न सकेको छैन ।” थकाइलाई स्थायी रोग बनाएको यही सहरको कथाव्यथामा चासो राख्ने उहाँ भन्नुहुन्छ– म पनि थाकिसकेँ । पहिलेजस्तो चाँडै उठ्न सक्तिनँ, राति ढिलोसम्म बसेर काम गर्न सक्दिनँ । यो त उहाँले भन्ने कुरा हो, हामीले देखेको र चिनेको किशोर नेपाल क्रियाशील व्यक्तित्व जसको जीवन शब्द साधनामै बित्यो, अहिले पनि शब्द साधनामा रमाइरहनुभएको छ । शब्दसँग खेल्न रुचाउने उहाँ लेखनलाई रोमान्स ठान्नुहुन्छ र पाठकलाई रोमाञ्चित पार्नुहुन्छ र त किशोर नेपालको अलग र सम्मानित चिनारी बनेको छ साहित्यमा, पत्रकारितामा । ■

# आखिर रहेछ बिस्टा एक....



◆ विवश वस्ती




कता-कताबाट ममा सुँगुर पाल्ने सोख पलायो। घरसंसारमा अनेक घरपालुवा जन्तुपन्छीहरू त थिए नै तर किनकिन अरू घरपालुवाभन्दा तुलनात्मक रूपमा भद्र, इमानदार र कर्तव्यनिष्ट सुँगुर हो भन्ने तत्त्व बोध भयो र पालनपोषण गर्ने रुचि पलायो।

एक दिन। मैले नितान्त बाल-सुँगुरलाई सुशोभित तरिकाले गृहप्रवेश गराएँ। बाल-सुँगुरको गृहप्रवेशसँगै अरू घरपालुवाहरू भने अस्वाभाविक ढङ्गले रूष्ट देखिन थाले।

बाल-सुँगुरको गृह आगमन तिनीहरूका निम्ति अप्रत्याशित नै थियो। घृणास्पद नजरले समेत नियाल्ने थाले, बाल-सुँगुरलाई। स्वामिभक्तको अद्वितीय नमुना पेस गर्ने कुकुर मदेखि टाढा हुन थाल्यो। नभए त्यो कुकुर सधैँभरि मसित लुट्पुटिन चाहन्थ्यो।

एउटा सुगा पालेको थिएँ, पिँजडाबन्द। उसले सधैँभरि गाउँथ्यो- 'गोपी कृष्ण कहो।' म पनि उसको स्वरलहरीमा आफ्नो भद्दा स्वर मिसाउँदै भन्थेँ, 'कहो, गोपीकृष्ण नै कहो। यो संसारमा गोपीकृष्णभन्दा कहने अरू कुन चिज छ र ?'

विडम्बना ! सुगाले पनि बन्द गर्‍यो- आफ्नो मीठास स्वरालाप।

एक हिसाबले सुँगुरको आगमनलाई लिएर अरू घरपालुवाहरूले विद्रोहका मसिना भिक्रोहरूमा आगो सल्काउन थाले।

००

दिन-प्रतिदिन सुँगुरले मेरो स्नेह एवं सद्भाव प्राप्त गर्दै गयो। एकाध दिन त मेरो स्नेह पाए पनि उसले कुनै प्रतिक्रिया जनाउन उचित ठानेन तर बिस्तारै मेरो अपार स्नेहका कारण उसले आफ्नो आनीबानीमा तात्त्विक फरकपना ल्याउँदै गयो। अचम्म त के भइदियो भने उसको आगमनका कारण विद्रोही मनोदशामा उभिएका/असंवेदित मानवका रवैयाका कारण बच्छ्युँभैँ बिच्किएका अरू घरपालुवाहरूमा पनि क्रमशः सन्तुष्टिका अपार भावहरू देखिन थाले।

मप्रति कुकुरको स्वाभिभक्ति पुनः ब्युँतियो। कोमामा व्यस्त बिरामीझैँ। सुगाले उही पुरानै लयमा स्वरलहरी गुन्जाउन थाल्यो र मतिर विनम्र नजरले हेर्दै र नियाल्दै रटाइएको भाषामा भन्न थाल्यो, 'गोपीकृष्ण कहो...।' खज्मजिएको लय पूरै फर्कियो। यी सबैका कारण थिए- तिनै सुँगुर र उसको समृद्ध आनीबानी।

००

म सुँगुरलाई हरेक कोण-प्रतिकोणबाट सभ्य बनाउन चाहन्थेँ। यही नै थियो, मेरो एक मात्र अभीष्ट। सबैका नजरमा असभ्य, फोहोरी र लद्दु प्राणीका रूपमा दृष्टिगोचर हुने, टीकाटिप्पणीको भागीदार बन्न बाध्य सुँगुरलाई म शतप्रतिशत रूपमै फेर्न चाहन्थेँ। ऊप्रति युगौँदेखि पसारिएको दृष्टिकोणमा आमूल परिवर्तन ल्याउन चाहन्थेँ। अतः त्यसकै निम्ति म क्रियाशील थिएँ।

००

बित्दै गए दिनहरू। हुँदाहुँदा उसमा अकल्पनीय परिवर्तनहरू आउँदै गयो। अरू घरपालुवाहरू पनि ऊप्रति मोहित र कृतज्ञ देखिन थाले र ऊसँग तत्क्षण नै घुलमिल हुन चाहे। उसको क्रियाकलापले ऊ एक बुद्धिमानी जीवमा परिवर्तित हुँदै

●●●

मेरो दिनचर्यामा आंशिक परिवर्तन आयो। मैले सुँगुरलाई विभिन्न होटल र रेस्टुरेन्टहरूमा लगेर भोजन गराउन थालेँ। होटल-रेस्टुरेन्टहरूमा रैथानदेखि विदेशी खानेकुरासम्म पाइन्थे। मैले भरिसक्य सबै स्वादसँग उसलाई परिचित गराउन चाहेँ। महँगादेखि सस्ता, सबै मूल्यदरका होटल-रेस्टुरेन्टहरूमा लिएर गएँ। तर केही होटल-रेस्टुरेन्टहरूमा भने सामान्य व्यवधान पनि भेल्नुपर्‍यो।

●●●

गएको प्रत्याक्षानुभूति गर्न सकिन्थ्यो, सहजै । एउटा दब्बु जीव बुद्धिमानी हुँदै गएकोमा म पनि गौरवान्वित हुँदै गएँ ।

००

एक बुद्धिमानी जीव सुँगुरका निम्ति मेरो घरमा विशेष परिकारहरू पाक्न थाले । चौरासी व्यञ्जनभन्दा केही कम । उसको खान्की हेर्दा भने अरू घरपालुवाले सहजै डाह गर्दै, मनमनै कल्पन्थे सायद, 'मीठो–मसिनो परिकार खान त सुँगुरकै जन्म लिनुपर्दो रहेछ ।' सुँगुरले पाइरहेको विशिष्ट श्रेणीको खान्की देखेर घरपालुवाहरूले ममाथि बक्रदृष्टि पसार्न थालिसकेका थिए ।

विशिष्ट श्रेणीको खान्की ग्रहण गर्न पाइरहे पनि घरनिर्मित खानाप्रति उसको विशेष मोह भने कहिल्यै देखिएन । पूरै अरूचि । जतिसुकै स्वादिष्ट, मीठा र व्यञ्जनादीका खाना पस्किदिए पनि उसको अरूचिको सतह भने झन्‌झन् चुलिँदै गयो ।

म बेचैन रहेँ । सुँगुरको चौरासी व्यञ्जनप्रतिको अरुचिको कारण पत्ता लगाउन मलाई सकस पर्दै गयो । मैले सोचेँ, 'कुनै पशु चिकित्सकलाई निम्त्याएर सुँगुरमा बढ्दो खाना–अरुचिको जड पत्ता लगाउनुपर्‍यो ।'

'तपाईंले अन्यथा लिनु हुन्न भने एउटा तरिका अपनाउनु पर्ला ।' पशु चिकित्सकले केही उपाय निकालुँलाझैँ गरी भने ।

'कस्तो तरिका ?'

'यो बस्ती वरपर कतै दिसा–पिसाब गर्ने ठाउँ छ ?'

'किन ?'

'एक पटक त्यस्ता ठाउँमा हजुरको समादरणीय सुँगुरलाई एक दिवसीय भ्रमण गराउनुपर्‍यो । ताकि हजुरको सुँगुर महोदयको भ्रमण सार्थक र फलदायी रहोस् ।'

म पूरै असहमत भएँ र भनेँ, 'अहँ, म त्यसो गर्न पटक्कै तयार छैन । मैले तिनै वातावरणबाट छुटाउन र टाढा राख्न यसलाई घरमा ल्याएर, मीठा–मीठा परिकार बनाएर ख्वाउन थालेको हुँ । यदि खुला रूपमा त्यस्ता ठाउँमा छाडिदिने हो भने त मेरो प्रयत्न र अभियान अनुत्तीर्ण भइहाल्छन् नि ! म त्यसो गर्न सक्दिनँ । कदापि... कदापि...।'

'अर्को उपाय पनि छ...।'

'कस्तो उपाय ?'

'यो सुँगुरले घरको खाना नरुचाएको हुनसक्छ । कुनै कुनै जीवजन्तुहरूमा यस्ता समस्या पनि देखेको छु मैले ।' ती पशु चिकित्सकले आफ्नो अनुभव बाँड्दै भने, 'मैले एक जना व्यक्तिको घरमा यस्तो कुकुर देखेको थिएँ, जसले घरमा पकाएका मःमः, चाउमिन, पिज्जा पूरै बहिष्कार गर्थ्यो तर होटल वा रेस्टुरेन्टको मःमः, चाउमिन वा पिज्जा भनेपछि हुरुक्कै । कपाकप खाने । तपाईंले पनि एक पटक यो सुँगुरलाई होटल वा रेस्टुरेन्टको स्वाद चखाउन चाहनु हुन्छ कि ?'

'ओहो ! कस्तो गुड आइडिया ।' मैले प्रशन्नता व्यक्त गर्दै भनेँ ।

००

मेरो दिनचर्यामा आंशिक परिवर्तन आयो । मैले सुँगुरलाई विभिन्न होटल र रेस्टुरेन्टहरूमा लगेर भोजन गराउन थालेँ । होटल–रेस्टुरेन्टहरूमा रैथानदेखि विदेशी खानेकुरासम्म पाइन्थे । मैले भरिसक्य सबै स्वादसँग उसलाई परिचित गराउन चाहेँ । महँगादेखि सस्ता, सबै मूल्यदरका होटल–रेस्टुरेन्टहरूमा लिएर गएँ । तर केही होटल–रेस्टुरेन्टहरूमा भने सामान्य व्यवधान पनि झेल्नुपर्‍यो ।

'ए, तपाईंले यो सुँगुरलाई किन हाम्रो रेस्टुरेन्टमा ल्याउनुभएको ?' एक दिन सुँगुरलाई डोर्‍याएर म एउटा नामुद रेस्टुरेन्टभित्र छिर्दै गर्दा सेक्युरिटी–गार्डले मलाई र सुँगुर दुवैलाई हठात् रूपमा रोक्दै सोधे ।

'भोजन ग्रहण गराउन ।' मैले गर्वसाथ सङ्क्षिप्त जवाफ दिँदै भनेँ ।

'अहिले सम्भव छैन ।' सेक्युरिटी–गार्डले रवाफिलो स्वर निकाले ।

'किन ?'

'किनभने यो रेस्टुरेन्टमा उब्रिएका बासी खानेकुराहरू अरूले बिहानै लगिसके । दिनदिनै एक जना मानिसले यस्तै सुँगुरहरूलाई ख्वाउन लिएर जान्छन् ।' सेक्युरिटी–गार्डले भने ।

'यो बासी–तासी होइन, ताजा खानेकुरा खाने सुँगुर हो ।' मैले सेक्युरिटी–गार्डलाई भनेँ, 'यो अरूजस्तो सामान्य सुँगुर होइन, भाइ ! यो त मैले पालनपोषण गरेर हुर्काएको बुद्धिमानी सुँगुर हो । अरू दुई कौडीका सुँगुरजस्तो नठान यसलाई ।'

सेक्युरिटी–गार्ड केही हच्किए र मलाई र सुँगुरलाई रेस्टुरेन्टभित्र सहज रूपमा प्रवेश दिए ।

रेस्टुरेन्टको खुला ठाउँमा पुगेपछि मैले वेटरलाई अर्डर गर्दै भनेँ, 'भाइ ! यो रेस्टुरेन्टको सबभन्दा राम्रो परिकार के हो ? त्यो परिकार एक प्लेट ल्याऊ त ।'

'यो रेस्टुरेन्टका सबै परिकार मीठा हुन्छन् । हामी नमीठो बनाउँदैनौँ । बरु हजुरलाई के मन पर्छ, मेनु हेर्नुस् न ।' वेटरले भने ।

'मलाई मन परेर भएन, यो सुँगुरलाई मन पर्नुपर्‍यो । मैले खान खोजेको होइन, यो सुँगुरलाई ख्वाउन ल्याएको हुँ ।' मैले नजिकैको भुइँमा उत्सुक नजर घुमाउँदै बसिरहेको सुँगुरतिर हेर्दै भनेँ ।

त्यो रेस्टुरेन्टको वातावरण एकदमै राम्रो थियो । करिब–करिब पारिवारिक । परिकार पनि राम्रै । तर पनि



सुँगुरले खानमा त्यति रुचि देखाएन । उसले केही क्षण उत्सुकतापूर्वक सुँघ्ने काम गऱ्यो र अलिअलि ग्रहण गरेपछि उदासीन तरिकाले थुतुनो बटाऱ्यो ।

म र सुँगुर सँगै घर फर्कियौँ । घर फर्केपछि मैले सोचेँ, 'त्यो रेस्टुरेन्टको खाना यसले मन पराएन खासै । अरू दुई-चारवटा होटल र रेस्टुरेन्टतिर पनि लैजानुपऱ्यो ।'

अर्को दिन, काठमाडौँको एउटा महँगो होटलमा लिएर गएँ । भव्य थियो होटल । करिब-करिब पाँचतारे नै । तर होटलको गेटमा पुगेपछि फेरि सेक्युरिटी-गार्डको अवरोध झेल्नुपऱ्यो ।

'यो सुँगुरलाई भित्र लैजान पाइँदैन ।'

'किन ?'

'होटलभित्र मानिसहरूलाई मात्र छिर्ने अनुमति छ । कुनै जीव-जन्तु आदिलाई प्रवेश दिने गरिएको छैन ।' नजिकैको एउटा बोर्डतिर देखाउँदै ती सेक्युरिटी-गार्डले भने, 'ऊ त्यो सूचना हेर्नुस्, त्यहाँ सबै नियम लेखिएको छ ।'

हो रहेछ । मानिसबाहेक अरू जीव-जन्तुहरूलाई पूर्ण रूपमा त होइन, आंशिक रूपमा होटल प्रवेशमा रोक लगाइएको रहेछ । कुनै-कुनै सम्भ्रान्त परिवारले आफ्ना सवारी साधनमा कुकुरहरू ल्याउँदा भने होटल प्रवेशमा कुनै रोकतोक नगरिने रहेछ ।

'कहिलेकाहीँ कुकुरसम्मले प्रवेश पाउँछ । तर सुँगुरलाई अहिलेसम्म हामीले होटलमा पस्न दिएका छैनौँ ।' सेक्युरिटी-गार्डले भने ।

'यो चानचुने सुँगुर होइन, भाइ ! यो त अति नै बुद्धिमानी सुँगुर हो ।'

'बुद्धिमानी भए पनि, मूर्ख भए पनि सुँगुर आखिरमा सुँगुर नै हो, हजुर ! यो कति बुद्धिमानी हो र कति मूर्ख हो भन्ने कुराको कसले जाँच-पड्ताल गरेका छन् र ?' सेक्युरिटी-गाडीले अविश्वास गर्दै भने ।

'तिम्ले यो सुँगुरलाई सामान्य ठानेका हौ ?'

'अँ, अरू सुँगुरजस्तै देखिन्छ त ।'

'यो देशकै प्रतिष्ठित सुँगुर हो । दुई पटक गोर्खा दक्षिणबाहु र एक पटक त्रिशक्ति पट्टद्वारा विभूषित भइसकेको छ । अरू सामान्य पदक, मान-सम्मान त कतिकति !' मैले सेक्युरिटी-गार्डको भर्खर पालिस

लगाएर चम्किएको जुत्तातिर आँखा दौडाउँदै भनेँ।

सेक्युरिटी–गार्ड अवाक् देखिए र कुनै प्रतिक्रिया जनाउन सकेनन्। मैले सुँगुरलाई होटलभित्र लिएर गएँ।

होटलको भव्यता देखेर म चकित परेँ। सुँगुर त झनै चकित। मैले वेटरलाई भनेँ, 'यो होटलको सबभन्दा मीठो परिकार के हो, भाइ !'

'रोगनजोश बन्छ, असाध्यै मीठो।'

'हैन, भेजमा चाहियो। यो सुँगुरका लागि हो।'

'सरी सर ! सुँगुरका लागि त हामीकहाँ कुनै परिकार छैनन्। सबै मान्छेहरूका लागि मात्रै बन्छ।' ती वेटरले मुस्कुराउँदै भने, 'सरले यो होटललाई पशुहरूको होटल ठान्नु भा'जस्तो छ। सरी, यो त मान्छेहरूका होटल हो।'

'मलाई थाहा छ, यो मान्छेहरूकै लागि परिकार पाक्ने होटल हो। तर मेरो सुँगुरले घरको खानेकुरा बहिष्कार गऱ्यो। कतै होटल–रेस्टुरेन्टतिर लगेर ख्वाए हुन्थ्यो कि भन्ने लागेर लिएर आएको हुँ।' मैले भनेँ।

'म केही मीठो परिकारको व्यवस्था गर्नेछु।' सुँगुरतिर हेर्दै उनले भने, 'यसलाई मन पर्ने खाना म तयार पार्छु।'

अहँ, त्यो महँगो होटलको खानाप्रति पनि सुँगुरको जिब्रो लोभिन सकेन। अरू केही होटल–रेस्टुरेन्टहरूतिर पनि लिएर गएँ। कुनै पनि होटल–रेस्टुरेन्टका परिकार हरूले उसलाई लोभ्याउन सकेन।

म निराश थिएँ। निराशाको त्यान्द्रोमा तुर्लुङ्ग झुन्डिएको माकुरोझैँ। अतः खानाप्रतिको अरुचिका कारण सुँगुरको स्वास्थ्य–स्थिति दिनदिनै खस्किँदै गइरहेको थियो। मैले पुनः पशु चिकित्सकलाई निम्त्याएँ। अरू विकल्प थिएन।

'प्रायः सबै होटल–रेस्टुरेन्टमा डुलाएँ। तर कुनै पनि ठाउँको खाना रुचाएन यसले।' मैले हैरान हुँदै भनेँ।

'म एक पटक यसको होलबडी चेक गर्छु। कतै पेटमा गड्बडी भएर खान नरुचाएको हो कि ? कतै घ्राण शक्ति क्षीण भएर वा जिब्रोमा कुनै खराबी आएर मीठा–मीठा परिकारका स्वाद र गन्धप्रति यसले रुचि नदेखाएको हो कि ?' पशु चिकित्सकले विभिन्न आशङ्का उमार्न थाले। होलबडी चेकका निम्ति आफ्नै क्लिनिकमा लिएर आउन सुझाव दिँदै मसित बिदा भए।

पशु चिकित्सकले सुझाव दिएको केही दिनपछि नै मैले पशु क्लिनिकमा सुँगुरलाई लिएर गएँ। पशु चिकित्सकले पूरै शरीर जाँच गरे। जाँच गरिसकेपछि उनले भने, 'अहँ, कुनै खराबी देखिएन। तर खानामा अरुचि देखाएको हुँदा कमजोर भने बन्दै गएको छ। यसरी नै कमजोर बन्दै जाने हो भने केही पनि भन्न सकिँदैन।'

'खानाप्रति रुचि बढाउने ओखती ख्वाए हुन्छ कि ?' मैले भनेँ।

'ओखतीले पनि केही हुँदैन। यसलाई मन पर्ने खाना नखुवाउन्जेल शरीरमा कुनै तागत आउँदैन र कमजोर नै भइरहन्छ।' पशु चिकित्सकले भने।

'के उपाय हुनसक्छ त ?'

'मैले तपाईंलाई पहिले पनि एउटा उपाय बताइसकेको छु। करिब एक हप्ताजति कुनै खुला दिसा–पिसाब क्षेत्रतिर यसलाई भ्रमण गराउनुस्। त्यसबाट कस्तो परिणाम आउँछ, हेरौँ। तब बल्ल थाहा हुन्छ।' पशु चिकित्सकले भने।

'त्यस्तै गर्ने र भन्या !' मैले अनुहारको भावभङ्गी बिगार्दै भनेँ।

'बचाउनका लागि केही न केही त गर्नुपऱ्यो नि !'

'त्यसो गर्दा त यो सुँगुर नै हुने भो। यसलाई चेन्ज गराउन नसकिने भो।' मैले लाचारी प्रकट गर्दै भनेँ।

'सुँगुरको मनोविज्ञान बुझ्न निकै कठिन हुन्छ। तपाईं अरू जीवहरूका मनोविज्ञान सहज रूपमा, तत्काल बुझ्न सक्नुहुनेछ। तर सुँगुर भने यस्तो जीव हो, जसको मनोविज्ञान बुझ्न तपाईंलाई चट्टान फोडेझैँ कठिन र दुरुह हुन्छ।' पशु चिकित्सकले समृद्ध मुस्कान मसामु पस्किँदै भने।

००

अन्ततः मैले पशु चिकित्सकको परामर्शलाई उचित ठानेँ र शिरोधार्य पनि गरेँ।

मेरो घरभन्दा एकाध घण्टाको दूरीमा थियो– खुला दिसा–पिसाब क्षेत्र। अरू थलो दिसा–पिसाबमुक्त क्षेत्र घोषणा गरिए पनि त्यस क्षेत्र भने अझ कसैको नजरमा परिसकेको थिएन।

एक प्रातः कालीन भ्रमणमा मैले मेरो प्रिय सुँगुरलाई डोऱ्याउँदै त्यही खुला दिसा–पिसाब क्षेत्रमा लिएर गएँ। म केही वरै बसेँ र त्यस क्षेत्रमा विचरण गर्न सुँगुरलाई छाडिदिएँ। सम्भवतः उसको घ्राण शक्ति मजबुत बन्यो होला– क्षणभरमा नै त्यस क्षेत्रमा दौडिँदै पुग्यो र यताउति चहार्दै भोजन ग्रहण गर्न थाल्यो।

करिब आधा घण्टाजति त्यो बुद्धिमानी सुँगुर त्यसै क्षेत्रमा व्यस्त रह्यो। त्यसपछि म जहाँ बसेको थिएँ, त्यहाँ बिस्तारै, प्रफुल्ल मुखाकृति पस्किँदै र शरीरमा स्फूर्तिका अङ्कुरहरू प्रस्फुटित तुल्याउँदै फर्कियो। फर्किँदै गर्दा उसले देवकोटाका यी काव्य–पङ्क्तिलाई 'रिमिक्स' गरेर गुन्गुनाउँदै थियो–

'रहेछ संसार निशा समान<br>
आएन ज्युँदै रहँदा नि ज्ञान<br>
आखिर रहेछ बिस्टा नै एक<br>
न भक्ति भो, ज्ञान न भो विवेक।' ■

# मार्ने हो कि डुबुल्की !




निबन्ध



◆ श्रीओम श्रेष्ठ 'रोदन'



समाचारसँगै अखबारमा बेचिने बालिकाको फोटो थियो । गहिरोसँग हराएका आँखाहरू । आँधी आएपछिका जस्ता ओठहरू । सुनामी गएपछिको जस्तै निराश र अँध्यारो अनुहार । फर्केर हेरिरहेकी छिन् सीमाहीन आकाशतिर । टाउकोमा छोपिएको सलले जीवनका बाँकी दिनलाई पूरै ढाकिदिएजस्तो । त्यही पनि बोकिरहेकी छिन् सानो भाइलाई । थाहा नपाए पनि दिदी बेचिएको कुरो । रोइरहेका छन् उनी दुवै आँखा बन्द गरेर ।



धेरै भयो खोजिरहेको छु आफैँलाई। खोज्न खोज्छु, सकेसम्म गहिरिएर आफैँलाई । हेर्न खोज्छु, भित्रसम्म पुगेर देखिने गरी आफैँलाई। तर सफल हुन सकेको छैन अलिकति पनि । थाहा छैन कहिलेसम्म देख्न सकिन्छ होला । निश्चिन्त हुने कुनै सङ्केत पनि मिलेको छैन। त्यसैले थकाइ नमारी गरिरहेको छु निरन्तर प्रयास। ध्यान केन्द्रित भएको छु मनका आँखामा।

आयुले आधा शताब्दी पार गरिसकेको छ जीवन। कपालहरू फुलेर अनुभवको लामो नक्सा देखाइरहेको छ। पढाइ, कमाइ, व्यवहार, समाजबाट कहिले टाढा भएको छैन। दुःख, सुख, समस्याका अनेक बाटाहरूमा अलिकति पनि अलमलेको छैन। सुख, सन्तोष र सफलताका बगैँचामा पनि रम्नसम्म रमाएको छु। व्यवहारबाट भाग्नुपरेको छैन अहिलेसम्म। दोहरो अङ्कको उमेरदेखि नै घरभित्र र बाहिर रमाउन थालेको मान्छे हुँ।

भएर पनि किन देख्न सकिरहेको छैन जस्तो लाग्छ । गर्छु आफैँसँग प्रश्न । अरूसँग सोध्ने कुरै भएन। किन यति गाह्रो भएको होला आफैँलाई हेर्न पनि। ऐनामा देखिएजस्तै सजिलै देखिने त कुरो भएन । बाहिरी रूप देख्न सबैलाई सहजै हुन्छ । अरूले अरूलाई देख्ने पनि बाहिरकै स्वरूप मात्र त हो नि । व्यवहार पनि देखिने नै हुन्छ र थाहा पाउन सक्छन् । तर सबैभन्दा नजिकबाट बुझ्नुपर्ने र देख्नुपर्ने भने आफैँलाई नै हो । आफूलाई देख्न नसकेको म मात्रै होला कि अरू पनि ? थाहा हुने कुरा त होइन रहेछ यो।

भन्न त भन्छन् जान्नेले र नजान्नेले पनि । गहिरिएर ध्यान गर्नसके देखिन्छ आफ्नो भित्री स्वरूप। तर गहिरो भनेको कतिसम्म ? यसको कुनै सीमा हुँदैन। बन्द गरेर रोक्न सके बाहिरका दृश्य। देख्न सकिन्छ भित्रसम्मका दृश्यलाई। कुरो त यो पनि गलत होइन। बाहिरको विपरीत भित्रै हुन्छ। अँध्यारोको विरोधी उज्यालो भएजस्तै। उज्यालोको विरोधी अँध्यारो भएजस्तै। परिभाषा गर्ने आफू अनुकूल त हो नि जसले पनि जहिले पनि। नत्र कसरी हुन्छ विवाद। तर्क गर्न नपाउने भए नपढाए हुन्छ कानुन। नबने हुन्छ कोही पनि वकिल। बन्द गरिदिए हुन्छ सबै अड्डा अदालतहरू।

आफूलाई चिन्न सक्नेले सजिलै बढ्न सक्छन् अगाडि। नसक्नेहरू नै भइरहन्छन् असफल। समयअनुसार आत्मविश्वास बढाउन सक्नेहरू नै हुन् आफूलाई चिन्नेहरू। जति लामो तार भए पनि ठीक ठाउँमा जोडिएपछि बत्ती बलेजस्तै हो नि। नजिकै भए पनि ठीक ठाउँमा नपरुन्जेल बल्दै बल्दैन बत्ती। कुरा उज्यालो भए पनि आफैँलाई देख्ने कुरा पनि हो।

आफूलाई चिन्न नसक्नेहरू नै हुन् जे गर्दा पनि हारिरहने। हतपति सफल हुनै नसक्ने। जुन क्षेत्रमा हात हाले पनि पछाडि नै पर्ने। अगाडि बढ्नै नसक्ने। आफूलाई चिन्न सक्नेले मात्र अरूलाई पनि राम्ररी चिन्न सक्छ । अरूलाई चिन्न सक्नेले सितिमिति हार खानुपर्दैन। धोका पाउनुपर्दैन। लिनुपर्दैन सहारा अरू कसैको। काफी हुन्छ जहाँ पुग्नलाई पनि आफ्ना दुई खुट्टा। काफी हुन्छ जस्तोसुकै काम गर्न पनि दुई हात।

यस मामलाको कुरो आफैँसँगको मात्र हो। आफैँलाई नबुझ्ने वा बुझ्नै नखोज्नेहरू त हुन् निराश भएर जीवनलाई निरर्थक बनाउने। आत्महत्या गर्नेहरू पनि त्यस्तै हुन्।

आफैँसँग हारेपछि जित्ने कहीँ पनि र केही पनि हुँदैन धर्तीमा।

हो सत्य नै यही। आफूलाई चिन्न सक्नेले जहिल्यै पाउँछ आत्मसन्तोष। भइँदैन कहिल्यै चाहिनेभन्दा बढी महत्त्वाकाङ्क्षी। नगरेपछि लोभ र आशा। हुनु पर्दैन कहिल्यै निराशा। हात लागेजतिमा हुन्छ सन्तुष्टि। पाएजतिमा मिल्छ आनन्द। देख्नै पर्दैन कहिले अँध्यारो। हुन्छ उज्यालो जता पनि र जहिले पनि।

यही विश्वासमा नगहिरिएको होइन बारम्बार आफैँभित्र। जति खनेजस्तो लागे पनि नबनेपछि खाडल। देख्न कसरी पो सक्नु र ? त्यसैले कहिलेकाहीँ बढ्दै गइरहेको उमेरको अर्थ पनि खोज्न मन लाग्छ। अनुभव र व्यवहारको पनि अर्थ खोज्न मन लाग्छ। स्थायी ठेगाना बनाउन नसक्ने आकाशको बादलजस्तो पो भएँ कि जस्तो। न कुनै आकार न कुनै थातथलो। मात्र झिलिक्क हुने चट्याङ पर्दाको उज्यालोजस्तो। देखिरहुन्जेल मात्र साथै भइरहने सपनाजस्तो। बिउँझेपछि नभएजस्तो कुनै अर्थ र औचित्य। एकप्रकारको सत्य नै बनेजस्तो भ्रम। घुमीफिरी भ्रम नै बन्ने रहेछ कि क्या हो जीवन। सत्यको नजिक जति पुगेजस्तो लागे पनि घुमिरहने वरिपरि मात्र।

कुरो आफूले आफैँलाई चिन्ने नै हो। अरूलाई चिनाउने त छन् कति कति ? नाम छ। स्थायी र अस्थायी ठेगाना छ। आफ्नो वर्ण र स्वरूप छ। पेसा र बाबुआमाको नाम छ। जानिएको अतिरित्त कला र सिर्जना पनि हुन्छ। तर यी सब मात्र अरूका लागि। आखिर के रहेछ त आफ्नो नै भन्ने ? आफ्ना लागि भन्ने। सबै आधार मात्र रहेछन् बाँच्नका लागि। पारिवारिक व्यवहार। सामाजिक व्यवहार र सांस्कृतिक व्यवहार।

नत्र के नै फरक भयो र ढुङ्गो हुनु र मान्छे हुनुमा। ढुङ्गो एक्लो भए पनि भीडमा भए पनि कुनै अर्थ राख्दैन। बगरमा भए पनि मन्दिरमा भए पनि मतलब हुँदैन। ठूलो भए पनि सानो भए पनि। जुनै आकारप्रकारको भए पनि। ढुङ्गो आखिर ढुङ्गोभन्दा फरक हुनै सक्दैन।

त्यस्तै हो पानी पनि। अँजुलीमा भए पनि पानी। नदीमा बगेको भए पनि पानी। पोखरीमा जमेको भए पनि पानी। जति ठूलो समुद्रको भए पनि पानी। पानीले पनि आफूलाई कहिल्यै चिन्न सक्दैन। चिन्ने भनेकै मात्र अरूले हो। प्रयोग हुने भनेकै अरूका लागि हो। जस्तो भाँडामा राखिदियो त्यस्तै बन्ने। जस्तो ठाउँमा राखिदियो त्यस्तै बनिदिनुपर्ने। तिर्खा मेटे पनि हुने। फोहोर बनाए पनि हुने। बिजुली निकाले पनि हुने। व्यापार गरे पनि हुने। डुङ्गा चलाए पनि हुने। जहाज चलाए पनि हुने। जेजे गरे पनि सबै अरूका लागि। सधैँ अरूका लागि मात्र। पानी आफ्ना लागि कहिल्यै बन्नै सकेन र सक्दैन पनि। कारण त्यही हो, पानीले पनि आफू र आफ्नो शक्तिलाई बुझ्न सकेन र सक्दैन।

यही सन्दर्भले सम्झायो बिर्सन नसकेको एउटा समाचार। भोक मेटाउन आफ्नै छोराछोरी बेच्ने अफगानीको। होलान् यस्ता घटना धेरै र अन्यत्र पनि। यो भने पश्चिमी अफगानिस्तानको घनाबस्तीको समाचार हो। हुर्केर दस वर्ष पुगेकी छोरीलाई बेच्ने मुटु भएको बाउको कथा। त्यो पनि आफू बाँच्नलाई होइन। बाँकी पाँच जना सन्तानलाई भोकै नराख्न बेचेको कथा। भनिएकै त्यस्तै थियो। धेरैलाई बचाउन एउटीलाई बलिदान दिनुपरेको। बाध्यता भने पनि कति क्रुर। कति हिंसात्मक। कति निराशाजनक। सुन्दै पनि छातीभित्र हुनसम्मको बलियो भुइँचालो गएजस्तो हुने।

घटना गत वषको हो। तालिवानले अफगानिस्तानलाई नियन्त्रणमा लिएपछिको घटना। गरिबी, अभाव र बाध्यताले गर्न नसक्ने केही नहुँदो रहेछ। हुँदैन भन्ने केही हुँदैन रहेछ। नमिल्ने भन्ने केही नहुने रहेछ।

क्वान्डी गुल हो उनको नाम। घरमा खुरुखुरु रोटी पाक्न थालेपछि सोधीखोजी गरेकी रहिछिन् बेचिनेकी आमाले। थाहा भएपछि बाउ बाध्यता भन्ने। आमा जसरी पनि बचाउन खोज्ने। तर कहाँबाट कसरी फिर्ता गर्ने एक हजार अमेरिकी डलर ? द्वन्द्व छ आफ्नै घरधुरीभित्र। द्वन्द्व छ आफ्नै रगतमाथिको।

बाउ क्रुर बन्नसक्ने बाध्यताको नाममा, आमा बरु आत्महत्या गर्छु भन्ने। होइन यो संवेदनाको मात्र कुरा। हो यो हृदयको कुरा। आखिर भएको उस्तै मुटु त हो दुवैमा। जन्म दिएको दुवैको सहकार्यले। हुर्काएको दस वर्ष दुवैले। भएर पनि किन यति धेरै फरक बनेका होलान् ? आकाश पाताल भनेजस्तै फरक।

बाउ व्यवहार चलाउन खोज्ने। आमा हृदयको व्यवहार गर्ने। साँच्चै, दुईवटै मुटु जोख्यो भने कसको बढी र कसको घटी हुन्छ होला संवेदना ? धर्मले दियो भने कसलाई कस्तो न्याय हुन्छ होला ? कानुनले पायो भने कसलाई कस्तो सजाय दिन्छ होला ?

समाचारसँगै अखबारमा बेचिने बालिकाको फोटो थियो। गहिरोसँग हराएका आँखाहरू। आँधी आएपछिका जस्ता ओठहरू। सुनामी गएपछिको जस्तै निराश र अँध्यारो अनुहार। फर्केर हेरिरहेकी छिन् सीमाहीन आकाशतिर। टाउकोमा छोपिएको सलले जीवनका बाँकी दिनलाई पूरै ढाकिदिएजस्तो। त्यही पनि बोकिरहेकी छिन् सानो भाइलाई। थाहा नपाए पनि दिदी बेचिएको कुरो। रोइरहेका छन् उनी दुवै आँखा बन्द गरेर। रुने भाइको के कुरा ? बोक्ने दिदीले पनि कहाँ बुझ्न र देख्न सकेकी रहिछिन् र आफूलाई ? हुन त बुझ्न सकेकी भए पनि के पो गर्न सक्थिन् र ? वधशालामा पुगेपछिको जीवले जस्तै। जति बलियो र जति चलाख भए पनि के गर्नु ? कुर्ने आफ्नो पालो नआउन्जेलसम्म मात्र हो। के गर्नु र बचाइएको नै अरूका लागि भएपछि।

युद्धको आगो, खडेरीको आगो, गरिबीको आगो र भोकको आगोमा कोरोनाको आगो पनि फैलिएपछि भएको

घटना हो यो । यस्ता सुन्नै नसक्ने घटनाहरू कति भएका होलान् विद्रोही राजमा । होलान् कतिकति लुकाइएका घटनाहरू पनि । सुन्दा पनि छियाछिया भएजस्तो हुन्छ छाती । घिन लागेर आउँछ । बेच्ने बाउ र किन्ने बाउ सम्झेर । कति दुखेका होलान् नजिकैबाट देख्नेहरूलाई । कति निचोरिएका होलान् झन् व्यहोर्नेहरूलाई ।

बालिका क्वान्डी गुलले पनि अरूलाई मात्र देख्न सकिन् । बाबुआमाले त देख्न सकेनन् आफूलाई र आफ्नै रगतलाई । विचरी अबलाले के देख्न सक्थिन् आफूलाई । लिलाममा बिक्री हुनुपर्ने नियति कसरी थाहा पाउनु उनले । थाहा पाएकी भए यही उमेरसम्म पनि देख्न पाउँथिन् कि पाउने थिइनन् । नभने पनि दुर्भाग्य नै हो छोरीआमाको । आफैँभित्र सुरक्षित राख्न सकिन् नौ महिना गर्भमा । झन् घर परिवार भएपछि जोगाउन सकिनन् । समाजमा आएपछि राज्यको बनेपछि, कानुन लाग्ने भएपछि जोगाउन सकिनन् । नसकेरै हो चिन्न आफ्नै गर्भलाई । जन्माएपछिकी छोरी र छोरीको भाग्यलाई ।

छोरी बेच्ने बाबुको कति होला दोष ? कि हुन्छ त्योभन्दा बढी आफैँभित्र हुर्काउने आमाको ? कसले गर्न सक्छ होला यस्तोमा निष्पक्षमा न्याय । हुन त नजिकको जत्तिको शत्रु टाढाको हुँदैन भनिन्छ । हो पनि नजिककाले जत्तिको बेइमानी टाढाकाले गर्नै सक्दैन । विभेद, हिंसा, दुर्व्यवहार पहिले सुरु हुने घरबाटै हो । भइरहेको पनि यस्तै नै छ ।

हजार पटक मनमा गुन्जिरहने एउटै छ प्रश्न । किन मान्छेलाई मान्छे बन्न दिइँदैन ? भएको भए पनि एक्काइसौँ शताब्दी । मान्छेलाई अन्तरिक्ष पुऱ्याइन्छ । तर किन पृथ्वीमा भने बाँच्न दिइँदैन ? के भोक मात्रै हो जीवन ? के पेट मात्रै हो सबैथोक ? यसैलाई मान्ने हो भने । जीवनको सबैभन्दा ठूलो अवमूल्यन यही नै हुनेछ ।

यो समाचारले बनाएको मात्र समस्या होइन । अर्बौं जनसङ्ख्या भएको विश्वमा एक्ली क्वान्डी गुलको मात्र कुरा होइन । बाध्य हुने बाबु र सहने आमाको मात्र कुरा होइन । कुरा सबै बालिकाको हो । सबै आमाबाबु र समाजको हो । आईएनजीओको बजेटको पनि कुरो होला । संसारभरिका महिला एक हौँ भन्ने नाराको पनि कुरो होला । नारी अभियान र आन्दोलनको पनि कुरो होला । मुक्तिको गीत गाउनेहरूको पनि कुरो होला । के कानुन र संविधान भनेको अड्डा अदालतको मात्र विषय हो ? सन्धि, सम्झौता र सङ्गठन साइनबोर्डको भीड मात्रै हो ? समाचार र सन्देशका निर्माता कम्पनीहरू मात्र हुन् ?

घटना एउटा देशको भए पनि । विद्रोहीले सञ्चालन गरेको राज्यसत्ताको भए पनि । कुरा मुस्लिम धर्म मान्नेको भए पनि । गरिब परिवारको भए पनि । चासो र चिन्ता सबैको हुनुपर्छ । विषय एउटै विश्वको हो । सबैभन्दा ठूलो कुरा मान्छेको हो । एउटा होइन र संसारभरिको मानव अधिकार । नागरिकको सुरक्षा राज्यको पहिलो दायित्व होइन र ? विदेशमा रहेको एक जना नागरिकको सुरक्षाको लागि राज्यले जति पनि खर्च गरिदिने गरेको छ । एक जना नागरिकका कारण राज्य राज्यबीच नै विवाद भएको छ । राज्यका लागि नागरिकभन्दा ठूलो आधार के हुन सक्छ र ?

कुरो मान्छेको मात्र पनि होइन । मान्छेले त आफूले आफूलाई देख्न सकेन रे लौ । देख्ने बुझ्ने त अरू जति पनि छन् । समाज र संस्थाहरूले देख्दैन रहेछ । सरकार र कानुनले चिन्दैन रहेछ । खोइ देखेका यिनीहरूले पनि आफ्नो औचित्य ?

अचम्म लाग्छ । कहीँ केही नभए पनि प्रकृतिले गर्ने प्राकृतिक न्याय त इमानदार हुनुपर्ने । मान्छेलाई मान्छे नै भएर बाँच्न पाउने अधिकारको रक्षा गर्नुपर्ने । त्यही बालिका र उनका बाबुआमाले मान्ने धर्म थियो होला । रातदिन पुकार्ने प्रभु थियो होला । कति विचरा हुँदो रहेछ धर्म, कति असाहय हुँदा रहेछन् जेजे भनिए पनि ईश्वर । समाज, राज्य, कानुन सबै सक्नेका लागि मात्र रहेछन् ।

फर्किएर आफैँतिर हेर्छु । के भएको छ र नेदेखिएर आफूभित्रको आफैँलाई । देख्न त कसले पो देखेका रहेछन् र ? जेजे नाम गरेका भए पनि । घुमिफिरी कुरो त्यही हो । आफूलाई चिन्न नसकेकैले हो बन्ने दुःखको कारण । एउटै हुँदोरहेछ दुवैको बिउ ।

भन्नेहरू त कति छन् कति साधु सन्तहरू । देखेको छु मैले आफैँलाई राम्रोसँग भन्नेहरू पनि । देख्नुपर्छ भोलि जान्नलाई र सुधार्नलाई भन्नेहरू । प्रश्न उब्जिन थालेको छ । हो कि होइन यो जरुरी । त्यो आफ्नै ठाउँमा होला । विश्वासको भ्रम भने अवश्य हो ।

यसैलाई छरेर जोगाइरहेका छन् आफूलाई र आफ्नो धन्धालाई । महान् महान् भनिएकाहरू । जयजयकार गरिएकाहरू । एक हजार कतिकति भन्नेहरू । धर्मका रक्षक भन्नेहरू । परसेवामा जीवन बिताएँ भन्नेहरू ।

फुत्केपछिको माछा ठूलो भएजस्तै । नभएपछि र नसकेपछि चित्त बुझाउने ठाउँ पनि हुन्छन् धेरै । मैले त बुझाएको छु चित्त मज्जाले । नसकेपछि गर्नु नै के र ? खोजेकै हो खोज्नसम्म गच्छेअनुसार । म ढुक्क छु त्यसैले । नसकेको मैले मात्र होइन क्यारे । सन्तोष मानेको छु ढुक्कले । सन्तोष नै रहेछ सुख । सन्तोष गर्न जानियो भने नपाइने पनि केही नहुँदो रहेछ ।

भन्छु, फेरि पनि भन्छु । आँखा खोलेपछि देखिने मात्र देखिन्छन् । नजिकका नजिकै देखिन्छन् भने टाढाको टाढै । आँखा बन्द गरेर हेऱ्यो भने नदेखिने केही नि हुँदैन । पुग्न नसक्ने पनि कुनै ठाउँ हुँदैन । नदेख्ने भनेको आफैँलाई मात्र हो सिधै । आफ्नो भविष्यलाई मात्र हो ।

त्यसैले नसके पनि आफैँलाई हेर्न । अनुभूतिको गहिरो पोखरीमा मार्ने हो कि एकफेर डुबुल्की ? ■

# फेरिए छ बयरघारी



निबन्ध



◆ कुलचन्द्र वाग्ले



बन्द कोठामा धुमधुम्ती बस्नोस् त्यतिबेला समयले यात्रा मार्छ । बाहिर घुम्नोस् समयमा तपाईं यात्रा गर्नुहुन्छ । यात्रा समयले गर्छ कि मान्छेले गर्छ । समय रोकिँदैन, मान्छे छेकिन्छ । घुमाइ रोकिन्छ ।

घुमाइ सबै सम्झनलायक हुन्छन् । घुमाइ छोटो पनि हुन्छ । लामो पनि हुन्छ । वरिपरिको पनि घुमाइ हुन्छ तर यात्रा अलि लामो घुमाइको अर्थबोधमा ट्याक्क मिल्छ ।



विगत सम्झिएर हेर्दा धेरैलाई रमाइलो लाग्छ । सुखको क्षणभन्दा निजी दुःखको विगत सम्झनामा धेरै बस्छ । यस्तै विगतले बढी रोमाञ्च अर्थात् विजयकै अनुभूति दिन्छ । हिम्मतको साथ कठिनाइ पार गरेको सम्झनाले वर्तमानलाई उत्साहित बनाउने रहेछ । त्यतिबेला कहर काट्न कम पीडा हुँदैनथ्यो । जीवनमा केही त्यस्ता पनि घटना हुन्छन्, जसले स्मृतिमा घोचिरहन्छन् ।

यस्तै हुन्छ जीवनको यात्रा । बन्द कोठामा धुमधुम्ती बस्नोस् त्यतिबेला समयले यात्रा मार्छ । बाहिर घुम्नोस् समयमा तपाईं यात्रा गर्नुहुन्छ । यात्रा समयले गर्छ कि मान्छेले गर्छ । समय रोकिँदैन, मान्छे छेकिन्छ । घुमाइ रोकिन्छ ।

घुमाइ सबै सम्झनलायक हुन्छन् । घुमाइ छोटो पनि हुन्छ । लामो पनि हुन्छ । वरिपरिको पनि घुमाइ हुन्छ तर यात्रा अलि लामो घुमाइको अर्थबोधमा ट्याक्क मिल्छ । कुनै कुनै यात्रा चाहिँ बढी अविस्मरणीय हुन्छन् । यस पटक त्यस्तै भयो ।

शुक्रबारको दिन थियो । बिहान गाडीभित्र बसेको केही मिनेटको गुडाइपछि थाहा भयो हामी स्याङ्जाको सिरुबारी जाँदैछौँ । कतैकतै दुई चार मिनेटको विश्रामबाहेक रिजर्भमा लगिएको जिपगाडी चालकको इसारमा गुडिरहेछ । गफगाफ त हुने नै भयो । सल्लाह मसबिरा पनि चल्ने नै भयो । झन्डै बाह्र घण्टाको सफर पूरा गर्नुपर्ने । बिहान ७ देखि बेलुका ७ बजेसम्म । काठमाडौँबाट सिरुबारी ।

दुई घण्डा जतिको बाटो बाँकी थियो । अघिदेखि धुम्मिएर ढुस्सिएको आकाश रसाउन थाल्यो । पिच भत्किएर कतैकतै काँचो भएको बाटो हिलो भयो । हिलो चिप्लो हुनै नै हो । क्रमशः अँधेरी बढ्यो । बदलीले अँध्यारो थपेकै थियो । सिरुबारी हेर्ने आँखाको लालसा अँध्यारोमा खुम्चियो । पर्खाइ भोलि बिहानको उज्यालो थियो ।

सिरुबारी केही होइन । केही हो पनि । मान्छेले पहिचान दिएको सिरुबारी । यहाँ पुग्दा क्याप्टेन रुद्रमान गुरुङलाई नचिन्ने कोही हुँदैन । सम्पूर्ण रुद्रमान नचिने पनि सिरुबारी र रुद्रमान एकअर्काको पहिचान भएको सबैले चिन्दा रहेछन् । यो नचिने सिरुबारीको यात्रा अधुरै हुने रहेछ ।

यहाँको बखान पहिल्यै सुनेको, पढेको तर मैले देखेको चाहिँ पहिलो यस पटक । होमस्टे (घरबास) पर्यटनको पहिलो संस्थापक नेपाली गाउँ सिरुबारी । जसको प्रथम प्रणेता क्याप्टेन रुद्रमान गुरुङ । प्रोत्साहन दिने नेता गिरिजाप्रसाद कोइराला ।

यो तथ्यले भन्छ– नेपालमा होमस्टे पर्यटनको कुरा गर्दा श्री गणेश सिरुबारीबाट हुन्छ । इतिहास कोर्दा रुद्रमानको अथक गाथा सारथि भेटिन्छ । त्यसपछि नेपालमा होमस्टेको समय आएको उद्बोध गर्न सकिन्छ ।

सिरुबारी केही होइन । यसरी हेर्दा नेपाली पहाडी गाउँजस्तै एउटा गाउँ हो दरौँसिरुबारी । स्याङ्जा जिल्लामा पर्ने दक्षिण फर्किएको गाउँ । उही चौध, पन्ध्र सय फिट उचाइको सानो पेरिफेरीमा बसेको गाउँ । चिठेका ढुङ्गासम्म, टकटकाउँदो सफा । बाटोघाटो सुग्घर । घर, आँगन सफा । ससाना बारीका टुक्रामा हरिया सागपात । कतै बन्दागोबी, कतै काउली फूल । मटरकोसा, धनिया । यो मौसममा यस्तै थियो ।

अलि ठूला गरा, बारीहरू खनजोत गरेर सम्याइएका । मलिलो, सम्म सफा देखिने । त्यहाँ मकै वा यस्तै तरकारी केही छरिएको थियो । ती उम्रने तरखरमा । पिँढीमा सजाइएका गमलामा फूल ।

थाहा छैन रुद्रमानले देख्नुभएको होमस्टेको सपना त्यहाँ ठ्याक्कै छ कि

छैन ? वा कति छ ? तर केही त अवश्य छ । होमस्टे छ । व्यवस्थापन छ । उहाँकै सपना अझै ज्युँदो देखिन्छ त्यहाँ । सुविधाको खोजीले होमस्टेमा केही आधुनिक साजसज्जा घोलिएको पनि लाग्छ । घरबासका लागि नम्बर लेखिएका घर । हामी बस्यौँ चौध नम्बर घरमा । जुन घर नै होमस्टेका द्रष्टा रुद्रमान गुरुङको रहेछ । घरको भित्तामा थुप्रै तस्बिर टाँगिएका । सैनिक पोसाकमा सजिएका । एउटा तस्बिर नेता गिरिजाप्रसाद कोइरालासँगै क्याप्टेन रुद्रमान, सँगै उहाँकी जीवन साथी । नेता कोइराला सिरुबारी पुग्दा खिचिएको तस्बिर ।

सिरुबारी होमस्टेको सञ्चालन यतिबेला उहाँकै बुहारी उर्मिलाजीको नेतृत्वमा जारी छ । यहाँको व्यथा पनि उस्तै, नेपाली गाउँघरको जस्तै । तरुना, तन्नेरी प्रायः सबै बाहिर विदेश वा नेपालका अरू सहर बजारतिर । केही गाउँमा । उर्मिलाजीकै श्रीमान् पनि विदेशमा । अहिले उही बूढापाकाको नेपाली गाउँबस्तीजस्तै सिरुबारी । साना केटाकेटी देख्नै मुस्किल ।

हप्तामा दुई दिन सांस्कृतिक कार्यक्रम हुने । नाचगान । शुक्रबार साँझ हामीलाई यो सुअवसर मिल्यो । यात्री धेरैसँग चिनजान गरियो । त्यही कार्यक्रममा पाल्पा तानसेनका झपेन्द्र गैह्रेसँग पनि आँखा जुध्यो । अनायास भेटले रमाइलो थपियो । सिरुबारीभन्दा होचो देखिने । गहिरो खोँच पार गरेर पर्तिर डाँडा थुम्कीमा दरौँ गाउँ रहेछ । उत्तर फर्किएको । यी गाउँ आमने सामने । गाउँबेँसीजस्ता । त्यसैले भनिने रहेछ दरौँसिरुबारी ।

यस पटक तनहुँको दमौलीबाट पृथ्वी राजमार्ग छोड्यौँ र पस्यौँ व्यासमार्ग । नयाँ बाटो । उत्तरतिर मादी नदीको किनार किनार कलेस्ती, दोभान हुँदै पाथ्रामा खाजा बिसौनी भयो । गाडी गुड्यो । पोल्याङ हुँदै । साहित्यकार पुष्पलताको गाउँ । कुरैकुरामा अघि देखाएको पुल कटेर अलि पर हुइकिँदै गर्दा फर्किएर उही पुलतिर आउनुपर्ने भएछ ।

फेदी बेगनास तालको किनार । तालचोक कटेर चाउथेमा साथी वासुदेव भण्डारीलाई सँगै मिसायौँ । अब यात्रा चार जनाको भयो, चालकसमेत । यो बाटोको दुवैतिर घना हरियाली । कतैकतै मात्र गाउँले बस्ती । मसिना पसल, बजार । फाट्टफुट्ट मात्रै गाडी भेटिने ।

शनिबार बिहान डा. केदारनरसिंह केसीको सम्मान कार्यक्रम रहेछ । छाती रोग विशेषज्ञ डा. केसीले क्षयरोग (टीबी)को निदान, उपचार र चेतना विस्तारमा गर्नुभएको योगदानप्रति सम्मान रहेछ । नेपाल क्षयरोग निवारण सङ्घले आयोजना गरेको साधारणसभा । भव्य सम्मान कार्यक्रममा सहभागी भयौँ र फर्कियौँ पोखरा । यो कार्यक्रम हुने कुरा आधाबाटो काटेपछि मैले स्पष्ट बुझेँ । यसअघि म फगत एक सहयात्री थिएँ । कुनै कार्यक्रमको सहभागी होइन ।

फर्किंदा बयरघारी, जहाँ खाना खायौँ । उहिले बनारस जादाआउँदा बास बसेको झुप्रे बयघारीको चित्र सम्झना यस पटक फेरियो । बयरघारी त ठूलो बजार भएछ । पक्की घरैघर र स्थानीय गण्यमान्य सहर भएछ ।

सिरुबारीबाट ओरालो । कच्ची गेग्रान बाटो । वनजङ्गल । न्याउलीको बिरह लाग्दो बिलौना । चराको चिरबिर । सिमसिम पानी । घट्टे र सहरे खोलाको दोभान । काँचो बाटो उकालो । गाडीले तान्नै सकेन । थचक्कै रोकियो । उक्लिँदै, उक्लिँदैन । तान्दै तान्दैन । निर्जन ठाउँ । बस्ती छैन । जङ्गल छ । सहरको फोहर थुपारेरे पोल्ने ठाउँ । मसान घाट । केहीपर गयौँ म र भण्डारीजी । पानी दर्कियो । एकैछिन सानो ओडारमा ओत लाग्नै पऱ्यो ।

अघि भर्खर मोटरसाइकलमा हुइँकिँदै हाँस्दै उछिन्ने दुई भाइ त्यही घट्टे उकालो तरेर उभिएका । यिनको गाडी उक्लिन सक्दैन । यिनलाई रेस्क्यु गर्नुपर्ने सोचेछन् कृष्ण ढकाल र वेदप्रसाद रिमालले । यी दुईको विवेक र मानवीय गुणले हामी दङ्ग भयौँ । उनीहरूले नै ट्याक्टर बोलाइदिए । तर पुरानो डोरी । मसिनो तार । के तान्ने गाडी । तीन पटकसम्म चुड्यो ।

चौथो पटक डोरीले अलिअलि तान्ने, पछिल्लो चक्कामा ओट राख्दै गाडी धकेल्न थाल्यौँ । मुस्किल पार भयो । ती साथीले नै बलेरोका यात्रु र पैदल आएकालाई हारगुहार गरे । गाडी धकेल्न । यहाँबाट अर्जुनचौपारी करिब तीन किलोमिटर पर । हाल उनीहरू त्यहीँका व्यवसायी बासिन्दा रहेछन् । गाडी धकेल्नेमध्येका एक रेशम देवकोटालाई पनि सँगै त्यो चौपारीसम्म ल्यायौँ । उनले राजनीतिक असन्तुष्टिको गुनासो गरे । घट्टे छेउको झाडीमा ऐँसेलु पाकेका पहेँला केही दाना पनि भेटिए ।

वालिङ पुग्न दुई घण्टा ढिलो भयो । प्रजातान्त्रिक विचार समाजका साथीहरू पर्खिएर बस्नुभएको रहेछ । साथै नेपाली काँग्रेस स्याङ्जाका सभापति केदार काफ्ले, प्रदेश सांसद्द्वय भोजराज दाइ र कल्पना तिवारी पनि पर्खी बस्नुभएको । उहाँहरूले विचार समाजलाई गम्भीर रूपमा लिनुभएको लाग्यो । समाजको जिल्ला शाखाले पारेको प्रभाव पनि होला । कार्यक्रम असाध्यै राम्रो भयो ।

आइतबार बिहान पोखरा र दिउँसो दमौलीमा विचार समाजको त्यस्तै भव्य र गम्भीर कार्यक्रम सम्पन्न भयो । तीनवटै जिल्लामा मुलुककी राजनीति, संविधान र समाजको विषयमा साथीहरूबीच गम्भीर अन्तर सम्वाद गरियो । फर्कदा पोखरादेखि मध्यपहाडी लोकमार्गबाट दमौली पुगेका थियौँ । यात्रा असाध्यै सुखद र उपलब्धिको रह्यो । तर दुःखदचाहिँ काका राधामोहन वाग्ले बित्नुभएको खबरले भयो । त्यही दिन उहाँको अन्तिम बिदाइ भएछ । अबेला भयो । देख्न पाइनँ । भाइ, सानीआमाहरू र कमल काकालाई भेटेर फर्किएँ ।

प्रजातान्त्रिक विचार समाजका अध्यक्ष पनि हुनुहुन्छ डा. केदारनरसिंह केसी । कहिल्यै नथाक्ने मान्छे । गाडीमा बस्न इसारा गर्नुभयो । बसेँ । चिया खाने शैलीमा निस्केको म पुगेँ सिरुबारी । हरमाभन्दा परमा केही थिएन । सुखद यात्रा । सुखद अनुभूति र सुअवसर मिल्यो । घट्टेखोलाको उकालो गाडी धकेल्दा हिलाम्य पाइन्ट, जुत्ता । धोइपखाली गर्नैपऱ्यो । फर्किएर सम्झिँदा पार गरेको त्यतिबेलाको घट्टे खोलाको हिले कठिनाइ पनि आहिले त रोमाञ्चक पो लाग्छ । ▪

# कालीगण्डकीको अँध्यारो र सिलिभियासँगको रात




नियात्रा



◆ मणि लोहनी



रूपसे छहरा नपुगुञ्जेल हामी एकनास हिँडिरहन्छौँ। ओरालो ओलिएको बाटो। ठाउँठाउँमा झर्दै जानु पर्ने। कच्ची बाटो। मानिसको जिन्दगीमा सम्बन्धले दिएको दुःखजस्तो ठाउँठाउँमा पहिरोले दुःख दिएको बाटोलाई। हेर्दै टिठ लाग्ने। कालीगण्डकीको तीरैतीर उकालो र घुम्ती म्याग्दीको रूपसेसम्म पुगियो। विश्वप्रसिद्ध झरना रूपसे।



र अझ त्यसमा उनको रातो बिकीनी।

पानीमा तैरिरहेको उनको गोरो शरीरमा निकै आकर्षक ढङ्गले सजिएको छ रातो बिकिनी। त्यसो त हामी पनि पोखरीमा नै छौँ– आधा शरीर डुबाएर बसेको। उनी पोखरीको पेटीमा बस्छिन् र घुँडाभन्दा मुनिको भाग पानीमा डुबाउँछिन्। मलाई पनि त्यसै गर्न मन लाग्छ। तर गर्दिनँ। उनकै छेउमा पानीमा डुबेर उभिन्छु।

'तिमी पिउँछौँ ?' पिउन लागेको क्यान मतिर तेर्साउँछिन् उनी।

'नाइँ, मैले कफी मगाएको छु।'

'तातो पानी र तातै कफी ?' क्यानलाई डिलमा राखेर उनी पोखरीमा नै आउँछिन्। तातो पानीको पोखरीमा। उनी हाँसेजस्तो पनि लाग्छ। तर अनुहारमा देखिँदैन। आँखाका कुना कुनातिर चाहिँ हाँसोका मसिना किरणहरू देखिन्छन्– हो कि होइन जस्तो। अनुभवी कलाकारले बनाएको पोट्रेटमा देखिने सौन्दर्य उनको अनुहारमा देखिएको छ। अझ विशेष गरेर आँखामा।

'थोरङ्लाको चिसो बाँकी नै छ अझै।' म उनको पानीमा डुब्न बाँकी शरीर हेर्दै बोल्छु।

'म तातो बनाइदिऊँ ?' सिल्भिया हाँसिन्। म पनि हाँस्छु। अलि उता पानीमा डुबेर बसिरहेका थाइल्यान्डका एक वृद्ध जोडी पनि हाँस्छन्।

ठाकुर कफी बोकेर आइपुग्छ र म डिलमा बसेर कफी पिउन थाल्छु। उनी बियरको क्यान सक्छिन्। डिलमा टुक्रुक्क बसेर पिडुँला मिच्न थाल्छिन्। उनको यो स्थिति अहिलेसम्मको सर्वाधिक प्रिय र लोभलाग्दो देखिन्छ।

इजरायलमा मस्तीका साथ विद्यार्थी जीवन बिताइरहेकी सिल्भिया एक हुल इजरायली साथीहरूसँग नेपाल घुम्न आएकी। उनीसँग मेरो परिचय बाटोको रूपसे छहरामा भएको। त्यहाँ हामीहरू सामूहिक तस्बिर खिच्दै थियौँ। उनी हाम्रो तुलमा लेखिएका नेपाली अक्षरको आकारले आकर्षण गर्‍यो भन्दै हाम्रो तुल हेरिरहेकी थिइन्। म भने उनको सुन्दर अनुहार र कानमा लगाएको ठूलाठूला एयररिङमा अल्झिएको थिएँ। संसारकै लामोमध्येको एक रूपसे झरना र उनको कानको ठूलो एयररिङ।

हामी लेखक हौँ भनेपछि उनी हामीसँग एकछिन गफिएर अगाडि बढेकी थिइन्।

त्यसपछि एकैचोटि म्याग्दीको यही तातो पानीको पोखरीमा हाम्रो भेट भयो। रातमा रातो बिकिनीका साथ।

'मलाई दिउँसो नै शङ्का लागेको थियो। तिमी साँच्चिकै राम्री छौ।' म बगिरहेको काली गण्डकी हेर्दै भन्छु।

'किन ? कसरी ??' उनी अलि नजिकिएजस्तो लाग्यो। तर होइन रहेछ– उनी जहाँको त्यहीँ थिइन्।

'तिम्रो आँखामा भिन्दै चमक छ।' पानीबाट बाहिर निस्कियो कि चिसो हुन्छ। त्यही भएर पानीमा पस्दै भन्छु। तल बगिरहेको कालीगण्डकी पक्कै पनि चिसो हुनुपर्छ। कात्तिकको अन्तिम साता। जाडो र अँध्यारोबीच एकनास बगिरहेको छ–

कालीगण्डकी । कालीगण्डकीकै छेउमा उभिएका छन् दुई बडेमानको पहाड । एक बडेमान पहाडको काखमा हामी छौँ– सिल्भिया र म । अर्को बडेमानको पहाडको फेदीमा बगिरहेको छ कालीगण्डकी । जोमसोमदेखि हाम्रै साथमा हिँडिरहेको छ यो पनि । मनाङ नपुगेसम्म लमजुङको बेँसीसहरबाट मर्स्याङ्दी हाम्रो साथमा भएजस्तो ।

'तिम्रो आँखामा भिन्नै चमक छ ।' म फेरि पनि भन्छु ।

'शरीरमा छैन ?' उनी पानीभित्रैबाट खुल्छिन् ।

'थाहा छैन ।' म जोगिन्छु । यत्तिकैमा सिल्भियाको गाइडले माथि होटलमा नाचगान सुरु भएको खबर दिन्छ । उनी हतपत पोखरीबाट बाहिर निस्किन्छिन् र भिजिरहेको त्यो रातो बिकिनीमाथि एउटा लामो टीसर्ट भिरेर 'बाई' भन्दै होटलतिर उक्लिन्छिन् ।

कति निर्दयी रहिछिन् । सपाट मलाई छोडेर हिँडिन् उनी । भर्खरीसम्मका घट्नाक्रम र संवाद सपनाजस्तो अलपत्र छाडेर कसरी जान सकेकी सिल्भिया ?

त्यसो त जो छोडेर जान सक्छ उही अगाडि पुग्छ सधैँ। आकर्षण विकर्षणका खेलमा भावुकतावश अल्मलिने मानिस न खुसी हुन सक्छ, न अगाडि बढ्छ नै। जिन्दगीको यो यात्रामा कतिले छाडेर हिँडे होलान् कतिलाई । खोइ, तिनको लेखाजोखा ? कसले राख्ने उनीहरूको दुःख र पीडाको हिसाबकिताब ? जिन्दगी भनेकै छोड्नु र हिँड्नु त रहेछ नि । हिँड्नु... हिँड्नु र हिँडिरहनु । पुग्नु त कहाँ नै छ र ? तैपनि जिन्दगी हिँडिरहनुपर्ने ।

म घडी हेर्छु रातको पौने नौ भइसकेछ। पनि पोखरीबाट निस्किन्छु र सँगैको अर्को पोखरीमा जान्छु । श्रीओम दाजु र ठाकुर पोखरीभित्रैबाट मलाई हेर्दै हाँस्छन् ।

'रमाइलो भो ?' रमेशदाई मलाई सोध्नुहुन्छ ।

म हाँसेर टारिदिन्छु । र उहाँहरू डुबेकै पोखरीमा छिर्छु। पोखरीको पानी उताको भन्दा अलि कम तातो छ। उता त बेला बेलामा बाहिर ननिक्ली बस्न नै सकिँदैन पोलेर । यता त निरन्तर बसिरहन सकिन्छ– पानीभित्रै । यताको पानी मनतातो छ । उताको उमालेर राखेजस्तो तातो ।

००० ००० ००० ०००

यसअघि हामी आज बिहान जोमसोङको २७१३ मिटरको उचाइबाट हिँडेको । बास बस्न आइपुगेको म्याग्दीको तातोपानीमा । यहाँको उचाइ भन्नु नै ११८९ मिटर मात्रै हो । त्यसो त हामी ५४१६ मिटरको उचाइमा रहेको थोरङ्लाबाट ओर्लिएका । हामी हिँडेको बिहान के भन्नु ? खाना खाएर निक्लिएको । जोमसोममा हाम्रो सम्मानमा प्रमुख जिल्ला अधिकारीले आयोजना गरको कवि गोष्ठी सकेर ।

हिमाल पारिको जिल्ला भनेर चिनिने मुस्ताङमा पानी धेरै पर्दैन । यहाँको पहाड उजाड छ । पठारजस्ता छन् । अचाक्ली चिसो छ । सिरेटो पनि चिसै । जोमसोममा दस बजेपछि उत्तरतिर बेजोडले हावा बहन सुरु गर्दो रहेछ । यहाँका प्रत्येक रुख बिरुवाका हाँगाहरू उत्तरतिर मात्र पलाएका छन् र उत्तरतिर मात्र नुहेका छन् । देख्दै अचम्म लाग्ने । तर यहाँका मानिसका लागि यो कुनै नौलो कुरा होइन । दिन हुर्किँदै गएपछि चल्ने हावामा हिँड्नै सकिँदैन । बाटोभरि भेटिन्छन् स्याउका बारीहरू । झुलिरहेका स्याउ र टिप्दै गरेका किशोरी हातहरू । कि भेटिन्छन् भारीका भारी स्याउहरू ।

जोमसोममा हामीले किनमेल पनि गर्‍यौँ स्याउको सुकुटी, सिमीको दाल, छोपको अचार र स्याउका तितौरहरू । साथीहरूले त स्याउ पनि किन्नु भयो । मैलेचाहिँ बोक्न सास्ती हुन्छ भनेर १५ रुपियाँ किलोको स्याउ पनि छाडेर हिँडे । जोमसोमको किनमेलमा हाम्रो साथमा बाबा पनि थिए। गीतकार दुर्गाबहादुर शाह बाबा। त्यसो त यिनी हाम्रो थोरङ्लाको १० दिने यात्राभरि नै साथै छन् । पोखराका यी लेखक गीतहरू भने राम्रै लेख्छन् । उनी आफूलाई कवि भन्छन् । तर कसो कसो मलाई उनका कविता मन पर्दैनन् । उनका गीतहरू नै राम्रो । राष्ट्र बैङ्कका जागिरे यिनी इमानदार र सहज छन् । यिनले नै हो, भीष्मदाइलाई जोमसोम– पोखराको एयर टिकट मिलाई दिएको ।

भीष्मदाइ पोखरा उडेपछि नै हो, जिपमा हामी मार्फातिर ओर्लिएको ।

जिपमै भेटिए जीवन गुरुङ । स्याउका भारीसँग उनी जिपमा चढेका थिए ।

'यत्रो स्याउ किन ?' मैले सोधेथेँ, 'खैरेलाई ब्रेकफास्ट ख्वाउन ।'

'नेपालीले खाँदैनन् ?'

'खैरे पनि घटिसके । नेपाली त कति नै पो आउँछन् र ?' स्थानीय पर्यटन व्यवसायी जीवन नयाँ बाटो बनेका कारण पर्यटक घटेकोमा दुःखी रहेछन् । भन्छन्, 'अन्नपूर्ण फेरोमा सडक पुगेपछि पर्यटकको आकर्षण घटेको छ ।' म्याग्दीको बेनीदेखि जोमसोमसम्म सडक मार्ग पुगेकाले पर्यटकको छनोटमा यो क्षेत्र पर्न छाडेको उनको दाबी थियो ।

'कुनै कुनै क्षेत्रमा भौतिक विकासले मात्र फाइदा नपुग्दो रहेछ ।' अधबैँसे व्यवसायी दुःखी मुद्रामा देखिए, 'विकाससँगै पर्यटकका लागि अन्नपूर्ण क्षेत्र उत्कृष्ट सूचीबाट पनि बाहिरिएको छ ।'

अहिले बेनीदेखि जोमसोम, रानीपौवासम्म मोटर सञ्चालन भएकाले यो साइडमा हिँड्नै पर्दैन । सन् १९७७ बाट विदेशीका लागि खुला गरिएको अन्नपूर्ण क्षेत्र परिक्रमा गर्न पहिले २० दिन लाग्थ्यो रे । अहिले घटेर नौ दिनमा सीमित भएको छ ।



'जति नै हिँड्ने मानिस भए पनि सुविधा पाएपछि त्यसको उपयोग गर्न चाहान्छन् ।' जीवनले हामीलाई नै भनेझैँ लाग्यो । हुन पनि हो अहिले हामी जिपमा गुडिरहेको बाटो पहिले हिँडेर पार गर्नुपर्थ्यो ।

हुन पनि पदमार्ग छेउछाउ ब्लास्ट गर्ने, मोटरको हर्न र धुवाँका कारण पदयात्रीलाई नकारात्मक असर पर्छ नै । पदयात्रीको मर्कालाई बुझेर अन्नपूर्ण क्षेत्र संरक्षण केन्द्र एक्याप र ट्रेकिङ एजेन्ट्स एसोसियसन अफ नेपाल टानले संयुक्त रूपमा वैकल्पिक पदयात्रा मार्गको पहिचान गर्ने काम सुरु गरेको रहेछ । एक्यापकै एक साथीले बताएअनुसार किर्कुपास हुँदै सिक्लेस पुग्ने बाटो वैकल्पिक मार्गका रूपमा एक्यापले अगाडि सारेको रहेछ । टानले भने माछापुच्छे मोडल ट्रेक नाम दिएर नयाँ मार्ग पहिचान गरेको रहेछ । अन्य केही पदमार्गको पहिचान भइसकेको भए पनि अन्तिम निर्णय भने भइसकेको रहेनछ ।

कालोपानी पुगेपछि आँखाभरि खुल्छ, सूर्यको प्रकाशमा चम्किएका नीलगिरि हिमालका सुन्दर दृश्यहरू । धौलागिरि हिमालको काखमा रहेको कालोपानीमा केहीबेर अल्मलिएर हामी फेरि अगाडि बढ्छौँ ।

हरियाली डाँडाकाँडा । झुन्डझुन्ड कुहिरोको मुस्लो । अनि धौलागिरि र नीलगिरि हिमालबाट झरेका सेताम्मे खोली । साँघुरिएर बगेको कालीगण्डकी । जोमसोमतिर फिजारिएर बगेको यो कालीगण्डकी यता साँघुरिएको छ । पानी र मानिसको मन उस्तै हुँदोरहेछ । खाली भयो कि फैलिहाल्ने ।

'घासा आइपुग्यो ।' कोही बोलेको हुनुपर्छ । तर यो आवाजले भन्दा पनि खच्चडमाथि भारी राख्दै गरेको दृश्यले मलाई तानिरह्यो । यो यात्राभरि बाटामा भारी बोकेका र भारी नबोकेका खच्चडहरू पटक पटक देखे पनि मैले भारी हालिरहेको देखेको थिइनँ ।

हामी घासामा ओर्लियौँ । योभन्दा उता बाटो बिग्रिएको रहेछ । जिप नजाने भएपछि हिँड्ने तयारीमा लाग्यौँ हामी ।

रूपसे छहरा नपुगुञ्जेल हामी एकनास हिँडिरहन्छौँ । ओरालो ओलिएको बाटो । ठाउँठाउँमा झर्दै जानु पर्ने । कच्ची बाटो । मानिसको जिन्दगीमा सम्बन्धले दिएको दुःखजस्तो ठाउँठाउँमा पहिरोले दुःख दिएको बाटोलाई । हेर्दै टिठ लाग्ने । कालीगण्डकीको तीरैतीर उकालो र घुम्ती म्याग्दीको रूपसेसम्म पुगियो । विश्वप्रसिद्ध झरना रूपसे । कहाँ हो कहाँबाट डरलाग्दोगरी तलतिर हाम्फालेको झरना । यति लामो झरना कहाँ देख्नु यसअघि मैले । धित मरुन्जेल

हेर्छु म। फोटो खिच्छु। झरनाको पानीले भिजाउन खोज्छ। चिसो पानीको छिटाले पनि चिसो बनाउँछ। आफ्नो प्रिय मानिसले छोडेर गएको बेलाको जस्तो चिसो। हामीले फोटो खिचिरहँदा यही भेट भएको हो इजरायली सिल्भियासँग।

यही बगलमा पर्दोरहेछ, विश्वप्रसिद्ध खोँच। 'यो विश्वकै सबैभन्दा गहिरो खोँच हो।' रमेशदाइले बताउनुभयो। यो खोँचको बारेमा मैले यसअघि सुनेको थिइनँ। रूपसेका बारेमा त कति सुनियो कति। तर यो अन्ध गल्छी देख्दै पनि डरलाग्दो रहेछ। तर यसबारेमा केही थाहा थिएन। रूपसेपछि झरनाको सिलसिला नै सुरु हुन्छ। जताततै झरना नै झरना। बाटामा भेटिएका यी अनगिन्ती झरना र जिन्दगीमा भेटिने अनेकौँ मानिस दुवै उस्तैउस्तै लाग्छ मलाई। दुवैमा रमाउन सकिन्छ, हेर्न, अनुभव गर्न र सिक्न सकिन्छन् धेरै कुरा। तर कहाँ राख्न सक्नु सधैँ आफूसँग ?

मानिसका चहलपहल सुरु हुन्छ। गाउँबस्ती सुरु हुन्छ। ससाना घरहरू। गोठहरू। सुन्तला फलेका बोटहरू। बगेका कालीगण्डकी यी सब पछ्याउँदै हामी दाना आइपुग्छौँ। चिया पिउँछौँ। दिनको उज्यालो सकिने क्रममा छ। अस्ताउँदो घाम आँखैमा छ। तर दिउँसोको जस्तो अप्रिय छैन।

रूपसेदेखि नै हामीले म्याग्दी टेकिसकेका रहेछौँ। आजको हाम्रो बास म्याग्दीमै छ। दानाबाट फेरि जीप र बस पाइदो रहेछ। बाग्लुङसम्म जाने। भीड भएका कारण हामीले गाडी चढेनौँ र फेरि हिँड्यौँ। बिस्तारी सकिन्छ दिनको उज्यालो र बिस्तारी बढ्छ अँध्यारो।

साँझ बाक्लिँदै गएपछिको यो अँध्यारोमा हामी एकोहोरो हानिन्छौँ। भोकभन्दा पनि थकाइ लागेको छ, यतिखेर। गोडाहरू उचालिन नै मान्दैनन्। लगातार नौ दिनदेखि हिँडिरहेका छौँ। गाडी चढेको भन्नु हिजो साँझ मुक्तिनाथदेखि जोमसोमसम्म र अहिले बिहान जोमसोमदेखि घासासम्म नै हो। नत्र लमजुङको भुलभुलेबाट हिँड्न थालेको हामी हिँडेको हिँड्यै छौँ।

त्यसो त कहिलेदेखि हिँड्न थालियो ? त्यसको के लेखाजोखा ? जन्म आफैँमा हिँडाइको आरम्भ रहेछ। जन्मदेखि निरन्तर हिँडिरहेको जीवन थाहा छैन कहाँ कहिले गएर रोकिने हो ? मृत्युसँगै सायद रोकिन्छ यो यात्रा। फेरि मृत्यु नै हिँडाइको समाप्ति हो भन्ने ग्यारेन्टी पनि के छ र ? मृत्यु पछि पनि न हिँडिरहनु पर्ने पो हो कि- एक शरीरबाट अर्को शरीरतिर ? मलाई भाउन्न हुन्छ, यो यात्राको सिलसिला केलाउँदा।

अलि पर केही बत्ती बलेको देखियो। त्यही हुनुपर्छ तातोपानी। नभन्दै त्यही नै रहेछ तातोपानी। तर पुग्न अझै आधा घण्टाजति लाग्छ रे। अँध्यारो भएकाले बत्ती नजिकै देखिएको रहेछ। तीनवटा जति घुम्ती पार गरेपछि हामी आज बस्ने ठाउँ म्याग्दीको तातोपानी पुग्छौँ रे। अझै आधा घण्टालाई शरीर तयार पार्नु छ। थाकेको शरीरमा 'अब त आइहाल्यो नि' भनेर म फूर्ति भर्ने कोसिस गर्छु। कोसिस खेर जाँदैन। तर भनेजति फूर्ति पनि चढ्दैन शरीरमा। थकाइले लखतरान परेको शरीरमा फूर्ति आओस् पनि कहाँबाट ? धन्य यति भए पनि शरीरले साथ दिएको छ।

थोराङलाको उकालो पार गरेको यो शरीर। साततले र नौतले भीरमा नआत्तिएको यो शरीर। हुम्देको पठारजस्तो उदेकलाग्दो ठाउँमा नगलेको यो शरीर। मलाई आफ्नै शरीरलाई स्यालुट गर्न मन लाग्छ। धन्यवाद भन्न मन लाग्छ।

यो शरीर नहुँदो हो त, मन मात्रैले के पार गर्न सक्थ्यो थोरङला ?

हिँड्दा हिँड्दै म टक्क अडिन्छु, आफ्नो सम्पूर्ण शरीरलाई महसुस गर्छु आफूभित्र। विपश्यनाको प्रारम्भिक ध्यानमा सिकाएजस्तो म महसुस गर्छु आफ्नो समग्र शरीरलाई र खुट्टा बजारेर स्यालुट गर्छु आफूलाई। आफ्नो यो शक्तिशाली शरीरलाई। मनको इच्छा र आकाङ्क्षाहरू पूरा गर्ने शरीरलाई।

मसिना बिजुलीका साना गुलुपहरू बलेको सानो बस्ती। खुला पसलैपसल। होटल भनेर लेखिएका साना साना घरहरू। कपडा र खाद्यान्नका पसलहरू। कालीगण्डकीको तीरमा रहेको एउटा सानो बजार रहेछ तातोपानी। अँध्यारोमा अरू केही देखिएन। रमेशदाइले एउटा होटलमा कुरा मिलाउनु भयो र हामी त्यही होटलमा छिर्‍यौँ। यहाँ पनि ठाकुर र म एउटै कोठामा बस्छौँ। हतार हतार कपडा फेर्छौँ। हातगोडा धुन्छौँ। तातो चिया पिउँछौँ र केहीबेर आराम गर्छौँ।

गोविन्द, रमेश दाइ तातोपानीको पोखरीतिर ओर्लिनुहुन्छ। हामी पनि एउटा सानो टाबेल बोकेर कालीगण्डकीको तीरै तीर लाग्छौँ। कालीगण्डकीको तीरमा अवस्थित दुई खुला कुण्ड रहेछन्- तातोपानीका। एउटा सानो काउन्टर रहेछ। जहाँ नेपालीले पाँच रुपियाँ र विदेशीले एक सय पाँच रुपियाँ तिर्नुपर्ने रहेछ, तातोपानीमा डुब्नलाई। एउटा सानो लुगा फेर्ने ठाउँ पनि रहेछ। जस्ताले बारेको।

एउटा रमाइलो कुरा के रहेछ भने तातोपानीको कुण्डमा डुब्नुपूर्व तातोपानीको धारामा नुहाउनुपर्ने रहेछ। साबुन लगाएर मजाले तातोपानीको धारामा नुहाइसकेपछि मात्र तातोपानीको कुण्डमा डुब्न पाइँदोरहेछ। तातोपानीको पोखरीमा डुबेपछि नै हो, मैले रातो बिकिनीमा सिल्भियालाई देखेको।

उनी के मुस्कुराइन् उज्यालियो कालीगण्डकीको अँध्यारो तीर। ■

# नियति संस्करण




निबन्ध



◆ सङ्गीत आयाम



'बाह्र छोरा तेह्र नाति, बूढाको धोक्रो काँधैमाथि' भनेर बूढापाकाले त्यसै भनेका होइन रहेछन् । जतिजति समय नयाँ आएको भनिएको छ उतिउति यो सधैँ जीवन्त लाग्ने सदाबहार उखानले झन्झन् सार्थकता पाउँदै गएको छ । पहिलाका अग्रज पुस्तालाई यस अर्थमा पनि दूरदर्शी मान्नुपर्छ कि उनीहरूले अहिलेको समयसमेत त्यतिबेला देख्न भ्याइसकेका थिए । अनुभवले सबै कुरा छर्लङ्ग्याउँछ भनेर त्यसै भनिएको हो र ?



जता हेर्छु, अनौठो खालका परिदृश्य मात्रै देख्छु । पहिला पहिला त्यति घटित नभएको अवस्थासँग त्यसलाई तुलना गर्दा पूरै नयाँपनको आभास उपलब्ध छ भन्न सकिन्छ । यद्यपि पछिल्लो समय सूचकका रूपमा बारम्बार उस्तै घटनाहरूले पुनरावृत्तिको रूप लिन थालेपछि भने त्यो परिवेश नै नयाँ परिघटनाहरूको लक्षित उद्देश्यमा अलग र पृथक् स्वरूप लिएर आविष्कार हुने हदसम्म नपुग्दोरहेछ, र त्यसलाई सारमा प्रत्याभूति गरिए पनि गहिराइमा त्यसले ठोस आकार ग्रहण गर्न नै नसक्दोरहेछ । नयाँ र पुरानो भाष्यमा निरन्तर रुमल्लिरहेका परिवर्तित घटनाक्रमहरूले आउँदा दिनमा कस्तो प्रकारको समयलाई उत्पादन गर्ने हुन् र उत्पादित विवेकलाई कहाँनेर गएर छेकबार लगाउने हुन्, अहिले त्यसले निष्कर्षविहीन अवस्था बनाएको छ । एउटा कुरा मान्न सकिन्छ, हिजो पनि सबै कुरा परिस्थितिजन्यरूपमै अवस्थित भइरहेका थिए र आज पनि सोही प्रवृत्ति नै विद्यमान भइरहेको हुँदा त्यसलाई बलजफ्ती आफ्नो वशमा पार्न नसकिने हुन्छ अर्थात् त्यसले एकप्रकारले अझ भनौँ आफ्नै प्रकारको निश्चित नियति बोकेको मानिन्छ ।

आजभोलि फेसनजस्तै बनेको छ, विदेशमा पढ्न जाने कुरा । प्लस टु गर्न पाएको छैन, टिन एजमै विदेश पढ्न जाने मनस्थितिमा पुगिरहेछन् अधिकांश केटाकेटी । यसलाई प्रभाव भनौँ कि देखासिकी, कलिला मस्तिष्कहरूको समय अहिले देश छोड्ने र बाहिर जाने प्रक्रियामै व्यतीत भइरहेको छ । देशमै पढाउने कुरा नगरे पनि हुन्छ, उल्टै चिढिएर यो देशमा कहाँ छ र हाम्रो सुरक्षित भविष्य ? यहाँ बस्न नै सकिँदैन भन्दै उल्टै वादविवादमै उत्रिरहेको अवस्था हरेक घरजसोमा देख्न सकिन्छ । वादविवाद बढ्दै जाँदा कतै त्यसले केही अनिष्ट त गर्ने होइन भनेर यतिखेर अघिल्लो पुस्ता सोचमग्न भएर बस्नुपर्ने बाध्यता देखा पर्न थाल्नु नियमित आकस्मिकता बनिरहेको छ ।

पल्लो घरमा आज बिहानदेखि नै प्लस टु गरेको छोरोलाई विदेश पठाउने कि यहीँ पढाउने भन्ने विषयमा चर्काचर्की सुरु भएको छ । विवाद तीव्र बन्दै गएको देख्दा त लाग्छ त्यसले मर्ने र मार्नेसम्मको रूप लिन पुगेको छ । एकप्रकारले छिनोफानो नै हुनुपर्ने परिस्थितिजन्य आक्रोशप्रति त्यहाँ कसैको नियन्त्रण नै नभएको प्रतीत हुन्छ ।

एउटा घरको मात्रै के कुरा गर्नु, मेरै घरमा समेत त्यस्तो अवस्था घटित भइरहेछ । यहाँ नपढ्ने र विदेश पढ्ने भनेर जिद्दी गर्दा बच्चाको पढाइले निरन्तरता नपाएको वर्षदिनभन्दा बढी भइसकेको छ । त्यसले मन खिन्न मात्रै बनाएको छैन, कसरी विदेश पढाउने भनेर सोचमग्नसमेत बनाएको छ । फेरि भन्दाभन्दै विदेश पठाउन पनि त्यति सजिलो कहाँ छ र ! एकातिर ठूलो रकमको जोहो गर्नुपर्ने र अर्कोतिर अनेक प्रक्रिया पुऱ्याएर भिसाका लागि गर्नुपर्ने तयारीसमेत विविध रूप र रङ्ग लिएर प्रकट हुँदा त्यसले शान्तिको निद्रा सुत्न नदिएको पनि महिनौँ भइसकेको छ ।

यी दुई घरहरू त केवल उदाहरण मात्रै हुन्, अहिले हरेकजसो घरमा जे पनि हुन सक्ने सम्भावनाकै कारण अनेक प्रकारका सम्झौता गर्नुपर्ने परिस्थितिको

निर्माणले भयावह तस्बिर बनाउँदै गएको छ । जसले खोइ कस्तो प्रकारको भविष्य निर्धारण गर्ला, यसै भन्न सकिँदैन ।

बच्चामा आमाले लोरी गाउँदा कति सजिलैसँग मीठो निद्रा लाग्थ्यो र भुसुक्कै निदाइन्थ्यो । आमाको काखमै निदाउन पाएको क्षण त लाग्थ्यो, संसारमा पाउनुपर्ने कुरा अब केही बाँकी रहेन । समय नयाँ–नयाँ अवतारमा परिभाषित हुँदै गयो, उमेर बढ्दै जाँदा सोचेका/नसोचेका जिम्मेवारीहरू थपिँदै गए । अहिले न आमाले लोरी गाएर सुताउनुहुन्छ, न त्यो बालकपन सम्झिएर नै निद्रालाई त्यसरी नै बोलाउन सकिएको छ । सन्तानको सुन्दर भविष्यका लागि भन्दै आफूलाई पलपल बलि दिइरहनुपर्ने अवस्थाकै कारण थाहा छैन निद्रा कहाँ हराउन थालेको छ आजभोलि !

एक मन त लाग्छ, केटाकेटीहरू किन यति धेरै जिद्दी हुन्छन् होला । अग्रजले भनेको सुन्दै नसुन्ने पनि कहीँ हुन्छ ? हाम्रो पालामा त उठ् भने उठ्, बस् भने बस् हुन्थ्यो । गल्ती गर्दा थरथर काँपेर सजायको लागि तयार भइहाल्नुपर्थ्यो, तयार भइएन भने अझ ठूलो सजाय पाइन्थ्यो । साँच्चै नै कति आज्ञाकारी थियो हाम्रो पुस्ता । जे भनियो त्यही मान्नुपर्थ्यो नत्र अर्को कुनै उपाय थिएन । सजायका लागि कुटाइ यसरी खाइन्थ्यो कि दिउँसै तारा देख्न बाध्य भइन्थ्यो ।

अहिले त बाबु तिमीले यो गल्ती गर्‍यौ वा नानु तिमीले यस्तो गर्न हुँदैन भन्नै हुँदैन, नत्र तुरुन्तै जवाफ हाजिर भइहाल्छ– यो गल्ती होइन, यो हाम्रो स्टायल हो, तपाईंको पुस्ता हौँ र हामी ? उनीहरू बुझ्नै चाहँदैनन् कि गल्तीलाई अनेक रूप र नाम दिनु पनि अर्को प्रकारको गल्ती हो । अझ केटाकेटीले केही नराम्रो काम गर्दा झुक्किएर एक थप्पड मात्रै हानियो भने त उत्पातै हुन्छ । तपाईंलाई पिट्ने अधिकार कसले दियो ? भन्दै उल्टै जाइलाग्न सक्ने खतरा प्रबल बन्छ । बाबुआमा हुँदैमा पिट्ने अधिकार हुन्छ ? यो सरासर बालअधिकारको हनन हो, उजुरी गर्न सकिन्छ भन्दै उल्टै धम्कीपूर्ण भाषा पो सुन्नुपर्छ । अकल्पनीय परिस्थिति बन्दै गएको बेला यस्तो लाग्छ अभिभावक भनेको त कुनै दन्त्यकथाको नायक हो, जसलाई अहिले विशेषरूपमा त्यतिबेलाको प्रसङ्गसहित स्मरण गर्नुपर्ने हुन्छ । जसका लागि घामपानी, सुखदुःख केही नभनी जीवनका धेरै वर्ष त्याग गरियो, आज उनैले अपमानित र लाञ्छित गर्दा पनि मूकदर्शक भएर बस्नुपरेको छ । हाम्रो पुस्ता अभिशप्तरूपमा श्रापित पुस्तामा रूपान्तरण हुँदै गएको यिनै आँखाले टुलुटुलु हेर्नु परिरहेको छ, मानौँ केही गर्न नसकिने नियति हाम्रो जीवनको अभिन्न हिस्साका रूपमा स्थापित छ ।

समय पहिलाको तुलनामा निकै बदलिएको भनिएको छ, त्यो बदलिनु पनि एकप्रकारले प्रवृत्तिकै रूपधारण गरिरहेको अनुभूत हुन्छ । तर यसरी समय बदलिएला र आफूले जन्माएका सन्तानबाट समेत यस्ता–यस्ता कुरा सुन्नुपर्ला भनेर न कहिल्यै सोच्न सकियो, न कहिल्यै कल्पना नै गरियो । लाग्छ, जीवनको अन्त्य नभइन्जेल अनेक रूपरङ्गका अवयवहरूसँग यसरी नै साक्षात्कार गरिरहनु हाम्रो बाँकी कार्यदिशा हो र बचेका दिनहरूमा तिनैलाई निर्वाह गर्दै जानु हाम्रो महान् उद्देश्य हो ।

'कति मोबाइल मात्रै चलाएको ? आँखालाई पनि त आराम चाहिन्छ' भन्नु ठूलै गल्ती गरेझैँ प्रतीत हुन्छ । 'तपाईंलाई के थाहा छ र ! सबै कुरा मोबाइलमै छ, त्योबिना जीवनलाई सोच्न पनि सकिन्न' भनेर कडा जवाफ कतिखेर आउँछ भनेर तयार भएर बस्नुपर्छ ।

कुनै कुरा पनि निकैबेर सोचेर मात्रै प्रकट गर्नुपर्ने स्थिति यस रूपमा कसरी दिनानुदिन सिर्जित भइरहेछ, केले यस्तो अवस्थालाई निर्माण गर्न कारक रह्यो ? केही कुराप्रतिको जिज्ञासा, चिन्तन र समाधान त जीवनको विशेष हिस्सा नै हुनुपर्ने थियो । केवल समाधान मात्रैको खोजीले समस्याहरूको पहिचान नै गर्न सकिएन भने एकपछि अर्को अनुभव कसरी हासिल गर्दै जाने ? जीवनका लागि अनुभव त ठूलो शिक्षा हुनुपर्ने थियो, अनुभव प्राप्तिलाई नै त्यागेर उपलब्धिका निम्ति तीव्र गतिमा हुइँकिन खोज्ने अभ्यास दुर्घटनाको कारक नहोला भन्ने छैन ।

हाम्रो समयमा अग्रज पुस्ताका कति अर्ती र उपदेशहरू सुनिन्थ्यो र मनन गरिन्थ्यो । नैतिकता र संस्कारका कुरा त कण्ठस्थजस्तै बनाउनुपर्थ्यो । सुन्दासुन्दैको क्षणमा उत्तिखेरै प्रश्नको झटारो कतिखेर आउँथ्यो, थाहा नै नहुने । त्यस अर्थमा पनि ध्यान दिएर सुनिएन भने उत्तर दिन नसक्दा पिटाइ खानुभन्दा अर्को विकल्प थिएन । त्यो बेला आदर्श नायकहरूका महान् कथाहरू सुनिएन कि, इतिहासले समेत सुरक्षित गरेका गाथाहरूलाई गहिरो ढङ्गले रटान नै लगाइएन कि, के–केसम्म गरिएन ! के गर्नु, अहिले पनि आफूले उतिबेला जीवनमा अमूल्य ठानेर सङ्ग्रहित गरेका दस्तावेजहरू घरीघरी आफूसामु देखा पर्न छोड्दैनन् । तिनै अनुभवले दिएका मूल तत्त्वहरूलाई केलाएर र निफनेर सन्तानलाई मार्गदर्शन गर्न सहज बन्लान् भन्ने सोचिन्छ ।

आफूले जानेकै कुरा बच्चाहरूसँग बाँड्न पाउँदा मन त्यसै पनि प्रफुल्लित हुँदो हो, तर त्यसलाई अवसरका रूपमा लिएर महसुस गर्ने कसले हो ! अहिले त मुखबाट त्यस्ता कुरा फुत्कन पाएको छैन, आफ्नै सन्तानले नै त्यसलाई किचकिचको रूपमा अर्थ्याउँदा मन त्यसै पनि भरङ्ग भइहाल्दोरहेछ । बाबु, यसो गर । नानी, यसो गर भन्न पनि नपाइने । उताबाट 'फेरि त्यही थोत्रा कुरा ? समय कहाँबाट कहाँ पुगिसक्यो उही पुराना कुरा सुन्नुपर्छ, दिमाग खराब भइसक्यो, घर छोडेर हिडौँजस्तो लाग्छ'

भनेर प्रतिवाद हुनथाल्छ ।

आफूले जन्म दिएका छोराछोरीप्रति अडिलो प्रकारको आशा र भरोसा हुनु अस्वाभाविक होइन । बाबुआमाभन्दा धेरै माथि पुगेर उनीहरूको उन्नति, प्रगति देख्न पाइयोस् भनेर रातदिन प्रार्थना गरिएको हुन्छ । बिहानदेखि बेलुकीसम्मको चिन्तनमननमै उनीहरूलाई नै केन्द्रबिन्दु मानेर विचारलाई सङ्केन्द्रित गरिन्छ । कुनै पनि अवसरबाट उनीहरू वञ्चित नहोऊन् भनेर जीवनमा आजसम्म के–के गरिएन ? पहिला पहिला भन्ने गरिएको हुन्थ्यो– 'सन्तानले डाँडाकाँडा ढाकून्' भनेर । त्यसको ठाउँमा आजभोलि 'सन्तानले शिखर चुम्दै सफलताको लक्ष्य हासिल गरून्' भन्ने कथनले काम गर्न थालेको छ । विशुद्ध मन र भावनालाई साक्षी राखेर कैयौँ कुरा यसरी नै प्रकट गरिन्छ, त्यही पनि सन्तानलाई नपच्ने अवस्था छ । अब के भनेर मन हल्का बनाउने सोच्न नै नसकिने भएको छ । अर्ती र उपदेश ताली मान्नुपर्ने ठाउँमा बेइज्जती र गाली हुन थालेपछि बाँकी भन्नुपर्ने कुराको खासै सार के नै बाँकी रहला र !

'बाह्र छोरा तेह्र नाति, बूढाको धोक्रो काँधैमाथि' भनेर बूढापाकाले त्यसै भनेका होइन रहेछन् । जतिजति समय नयाँ आएको भनिएको छ उतिउति यो सधैँ जीवन्त लाग्ने सदाबहार उखानले झन्झन् सार्थकता पाउँदै गएको छ । पहिलाका अग्रज पुस्तालाई यस अर्थमा पनि दूरदर्शी मान्नुपर्छ कि उनीहरूले अहिलेको समयसमेत त्यतिबेला देख्न भ्याइसकेका थिए । अनुभवले सबै कुरा छर्लङ्ग्याउँछ भनेर त्यसै भनिएको हो र ?

पहिलाका कुरा गरेर के साध्य छ र, कम्ती दुःखले त पढिएन । कहिले टुकीमा मट्टीतेल नहुँदा छिमेकीको घरमा भोलि ल्याएर दिऊँला है भनेर उधारो माग्न गएको स्मरणमा अझै पनि ताजै छ । जतिबेला पहिला पढेका कुरालाई सम्झना गर्दै बस्नुपर्थ्यो त्यतिबेला कहिले कक्षामा पिटाइ खाने डरले भोलि भन्नुपर्ने पाठ रातभर जागा बसेर भए पनि कण्ठस्थ नै बनाइयो । गाउँमा त्यतिबेला दुर्लभ रहेको टेलिभिजन र मोटरसाइकल हेर्न घुइँचो नै लाग्थ्यो, सम्पन्नकहाँ मात्रै हुने त्यस्ता साधन छुन वा हेर्न पनि अनुमति नै चाहिन्थ्यो ।

आजभोलि त के छैन र ? घर–घरजस्तोमा सुखसुविधाका ती तमाम साधनको उपलब्धता मात्रै नभएर एक क्लिकमै संसार भ्रमण गर्न सकिने र मिल्ने नयाँ–नयाँ उत्पादनहरूको बोलबाला चर्को रूपमा अवस्थित छ । प्रायः बाबुआमाले आफ्ना सन्तान अरूका भन्दा कत्ति पनि कम नहून् भनेर ऋणधन गरेरै भए पनि महँगा स्कुल/कलेजमा पढाएका छन् । कुनै पनि सुखसुविधाबाट सन्तान वञ्चित नहून् भनेर आफूलाई बलि चढाएरै भए पनि उनीहरूले खोजेजति सबै उपलब्ध गराएकै छन् । त्यसका बाबजुद पनि सन्तानकै आँखामा वक्रदृष्टिमा पर्न बाध्य भइरहँदा न्याय खोज्न जाने ठाउँकै चरम अभाव देखिँदै छ । मानौँ, बाबुआमा हुनु नै एकप्रकारको अभिशाप हो र श्रापित बनिरहनु उनीहरूका नियमित नियति !

आफूभन्दा अग्रज पुस्तालाई आदर र सम्मान गरेको हाम्रो पुस्ताले पछिल्लो पुस्ताले पनि उसरी नै अघिल्लो पुस्तालाई आदर र सम्मान गरोस् भन्ने चाहनु अनर्थ अवश्य होइन । निरन्तर हृदयको पुकारका रूपमा परिभाषित भइरहेको स्थिति त्यतिबेला थप जटिल मोडमा देखा पर्न थालिसक्छ जतिबेला त्यसको अस्तित्वमै बलशाली प्रहार भइरहेको हुन्छ ।

अहिले अलिकति कमाउनेबित्तिकै पखेँटा लगाएर उड्ने प्रचलन विकसित हुँदै गएको छ । कमाएरै पनि सँगै बस्न र बाँच्न सकिन्छ भन्ने मान्यता नै यतिबेला ध्वस्तजस्तै छ । त्यसले अतिशयोक्तिको खेतीलाई मलजल गरिरहेको छ भनेर विवाद गर्न नसकिने होइन तर उनीहरूका पक्षबाट दिग्दर्शित सत्य लज्जास्पद अवस्थाको प्रकटीकरण हुन मान्दैन । जीवन हो, जहाँ र जसरी पनि बाँच्न सकिन्छ भन्ने स्वतन्त्रतारूपी चिन्तन शक्तिशाली बन्दै गएको परिप्रेक्ष्यमा अहिले विदेशको हावाले अतिरञ्जित रूपमा छोइरहनुलाई कुनै आश्चर्य लाग्ने विषयका रूपमा व्याख्या र विश्लेषण नगरे पनि हुन्छ भन्ने सोच हाबी भइरहेको पनि छ । यता हेर्‍यो उस्तै दृश्यहरू छन्, उता हेर्‍यो उस्तै घटनाहरू घटित भइरहेका छन् । ककसलाई बाँधेर राख्न सकिन्छ र ! सुविधाको उपलब्धताको कारणले संसार नै एक प्रकारले भूमण्डलीकृत भइरहेछ । प्रभाव र दबाब उस्तै प्रकारले मञ्चन भइरहँदा मै हुँ भन्नेहरूको दिमागले पनि राम्रोसँग काम गरिरहेको देख्न सकिन्न ।

कोहीभन्दा कोही कम नहुने दौडमा पछिल्लो पुस्ताको सक्रियता निकै बढिरहेको बेलामा पनि अघिल्लो पुस्ताको जीवनचर्या भने यतिबेला सबैभन्दा बढी खल्बलिएको छ । एउटा ठूलो हिस्सा नै मानौँ दलदलमा भासिँदै गएको प्रतीत हुन्छ । मृत्युलाई प्राप्त नभएसम्म जीवनले ठोस निष्कर्ष प्राप्त गर्दैन भन्ने मान्यता शक्तिशाली छ, यद्यपि त्यस अवस्थालाई कुरेर बस्न त्यति सम्भव हुने कुरा पनि भएन । बाँचुन्जेल गरिएको कर्मले जीवनलाई उद्भाषित गरिहाल्छ कि भन्ने लोकप्रिय विश्वास त्यसै तोड्ने र खेर फाल्ने कुरा पनि रहेन । न यताको न उताको पेण्डुलमजस्तो जीवनको यो अनवरत सङ्घर्षमय पाटोले के साँच्चै नै कुनै पनि प्रकारको निष्कर्ष प्राप्त गर्न सम्भव होला ? के अब पनि कुनै उद्घाटित हुन बाँकी रहेको सत्यले अवतरितरूपमा आफूलाई प्रकट गरेर शङ्काको लाभ लिनसक्ने मौसमलाई ऋतुकालीन स्वरूपमा संयोजन गर्न सफलता हासिल गर्ला ? ■

**sangeetaayam@gmail.com**

# टाक्सिएका छैनन् हाम्रा कविता



निबन्ध



◆ दीपक सापकोटा



कविता लेख्दा कवि आफ्नै अनुभूतिको अन्यतम गहिराइमा रहेको संवेदना लेखिरहेको हुन्छ, जसरी हेमिङ्वेले एक बिहान डुङ्गामा बसेर समुद्रमा माछा मार्ने विषयमा सोचिरहँदा द ओल्ड म्यान एन्ड द सी जस्तो महान् उपन्यासको पहिलो ड्राफ्ट लेखेका थिए । सुत्केरी-बेथाले छटपटाइरहेकी युवतीले एउटा सुन्दर कविता सोचिरहेकी हुन्छिन्, जब उनी बच्चा जन्माउन जतिसुकै पहाडजस्तो भारी थाम्न पनि तयार हुन्छिन् ।



'रूप' र 'सार' ! यी दार्शनिक शब्दावलीमाथि घागडान बहस गर्नेमा सायद कविहरू नै छन्– 'फ्रन्ट लाइन'मा । त्यसमा पनि झन् 'प्रगतिशील कवि'हरू । एक दशकअघिको स्मृतिमा पसिहेर्दा, मैले एक कार्यक्रममा कवितामाथि टिप्पणी उठाएको थिएँ, '१० जना प्रगतिशील कविका कविता नाम छोपेर पढे कसको हो छुट्याउन हम्मे हुन्छ ।' बोलेको त्यत्ति मात्रै हो । तर 'फ्रन्ट लाइन'का एक हुल 'प्रगतिशील कवि'हरूले पाखुरा सुर्किए । ती भुनभुनाइरहे मेरो वरिपरि, झिँगाझैँ ।

'प्रगतिशील कवि' या 'कवि' या 'उपासना कवि' या 'मौन कवि', यी पदावलीमा बहस नगरौँ; 'कवि' मात्रै भनौँ न तर सुदूरबाट हेरे पनि कवि–ग्याङमा नितान्त फरक देखिने, ठ्याक्कै छुट्टिने कवि हुन्– नेत्र एटम । यी 'प्रगतिशील कवि' हुन्, यी 'उपासना कवि' हुन्, यी 'मौन कवि' हुन् । अतीततिर चियाउँदै, वर्तमानलाई विश्लेषण गर्दै लेखिरहेका आफ्ना समवयी कविमा प्रस्ट कवि हुन् कि उनी ? कारण समय–चेतनाले ल्याउने प्रवाहमा उनी आफ्नो काव्यमार्फत् दह्रो हस्तक्षेप गर्छन् ।

विचार र कलाको प्रवाहसँगै बहन्छ उनका कवितामा नदीझैँ । मानिसका दुःख, सङ्घर्ष र सपना क्यानभास हुन् उनका कविताका । समाजको ऐना लेखिरहने यी कवि कवितामा आफ्नो 'दिव्यचक्षु'ले सुदूरका समाचार सुनाइरहेका हुन्छन् ।

सूर्यविक्रम ज्ञवालीले लेखेका छन्– 'कवि भनेका मानिस नै हुन् । अरू साधारण मानिसझैँ उनका पनि हृदय, मन, इन्द्रियादि सबै हुन्छन् । यद्यपि उनका दिव्यचक्षुले साधारण मानिसका चर्मचक्षुले नदेखेको कुरो देख्छ औ अन्धकारभित्र प्रवेश गरी उसको पारिको समाचार पनि लिएर आउँछ ।' (रूपरेखा, पूर्णाङ्क ६)

कवि नेत्र एटमले पनि 'पारिको समाचार' लिएर आएका छन्– नङ्गेलीको । 'तिमीले मलाई बिर्स्यौ भने' अनि 'तिमी छ्यौ र त' भन्दै उनी नङ्गेलीको समाचार वाचन गर्छन् । त्यो अन्धकार इतिहासमा प्रवेश गर्छन्, जहाँ नङ्गेलीले भयानक विद्रोहको राँको बालेकी थिइन्, रगतको आँसु झारेकी थिइन् ।

नङ्गेली को हुन् ? मिथकको कुनै आकर्षक विम्ब कि इतिहासकी एक विरङ्गना ? कवि नेत्र एटम पुरानो समाचार सुनाउँछन्, 'मिथकको कुनै रोमाञ्चक वर्णन होइन ऊ, न थिएटरको कुनै अद्‌भुत पात्र नै... । रगतको लुगा लगाऊ नङ्गेली, रगतकै आँसु सुकाऊ च्यादरमा, रगतकै हावाले सास फेरेर, हिँड शानसित रगतकै बाटोमा लमकलमक !' (नङ्गेली ब्लुज/प्रिय मौनता) ।

नङ्गेली बुझ्न डेढ शताब्दीअघिको अन्धकारमय समयमा पस्नुपर्छ । लगभग १५० वर्षअघि भारत केरलाको चेरथल गाउँमा बस्ने दलितमध्येकी पनि तल्लो मानिने एडवा जातिकी एक सचेत महिला हुन् उनी । दलित महिलाले स्तन ढाक्न नपाइने वा ढाके कर तिर्नुपर्ने त्यस बेलाको कानुनविरुद्ध उनले विद्रोह गरिन् । विद्रोहस्वरूप उनले हँसियाले आफ्नो स्तन काटिन् र मृत्यु रोजिन् । त्यसपछि त्यस गाउँको नामै रह्यो– मुलच्छीपुरम् अर्थात् 'स्तनको गाउँ' ।

अति सामान्य विम्बमार्फत कवि नेत्र एटम कवितामा सुदूर अतीतका कथा भन्छन्, जसरी हामीलाई इतिहासको गर्तमा पुरिएकी, आफ्नो 'भव्य इतिहास' नभएकी नङ्गेलीको कथा सुनाए । ती कथामार्फत इतिहासका बिर्सिइएका पात्र र पात्रका निजी जीवनमा प्रवेश गराउँछन् कवि ।

मौनता ! त्यो कस्तो मौनता ? उपासना ! त्यो कस्तो उपासना ? कविता र उपासना ? त्यो कस्तो कुरो हो ? मौनता र उपासना ! त्यो गहिरोसँग बुझ्न उनको कविता-किताब प्रिय मौनताका पानाहरूमा मौन भएर पस्नुपर्छ, ध्यान र उपासना गरेजस्तै । असाध्यै नवीन क्लाइमेक्समा उनी कविता वाचन गर्छन्- बिस्तारै, अति सानो आवाजमा तर भयानक कथाहरूमा पुऱ्याउँछन् ।

०००

अर्नेस्ट हेमिङ्वेको द ओल्ड म्यान एन्ड द सी हातमा छ । कति पढ्नु यो किताब ? तर यही किताब रिभिजिट गरिरहन मन लाग्छ । शान्त, नीलो समुद्रमा माछा मारिरहेको एउटा बूढो मानिसको कथा सुन्न मन लाग्छ । उपन्यासले मौनताको भाषा बोल्छ, समुद्र मौन हुन्छ (ठूला छाल र आँधीका बेलाबाहेक), एक्ला वृद्धहरू मौन हुन्छन् किनभने तिनीहरूसँग वार्ता गर्ने अर्को वृद्धसँगै हुँदैनन् । र त स्यान्टियागो समुद्रसँग कुरा गर्छन्, आफूले मारिरहेका माछाहरूसँग कुरा गर्छन् । प्रिय मौनताका 'उपासना कविता' वाचन गरिरहेका कवि एटम पनि हेमिङ्वेको स्यान्टियागो जस्तै मौन लाग्छन् मलाई ।

द ओल्ड म्यान एन्ड द सी पढ्नुभएको छ ? नपढ्नुभएको भए पढिहाल्नस् है । त्यहाँ स्यान्टियागो आफूले प्रेम गरेका माछालाई निकै आदर गर्छन्, पुर्खालाईझैँ । तर उनी माछाहरू मार्छन् । माछाप्रतिको त्यो मौन प्रेम, त्यो समुद्रको मौन भाषामाथि व्याख्या गर्न उनलाई अत्यन्तै गाह्रो हुन्छ । उनी भनिरहन्छन्, 'असलमा यी कुरा म बुझ्दिनँ । तर हामीले जूनतारा झार्ने प्रयत्न गर्नुपरेको छैन । यो कुरा ठिकै त हो नि- हामीले सागरमा बसेर आफ्ना भाइबन्धु मार्नु नै काफी छ ।' यो कस्तो प्रेम हो ? माछाको आदर गर्नु, तिनलाई माया गर्नु, तिनलाई प्रिय साथी मान्नु, तर मार्नु ! हो यस्तो कुरा व्यक्त गर्न गाह्रै त हुन्छ नि, होइन ? किनभने माछा नै स्यान्टियागोको जीवन हो, जीवन नै माछा हो ।

कविता लेख्दा कवि आफ्नै अनुभूतिको अन्यतम गहिराइमा रहेको संवेदना लेखिरहेको हुन्छ, जसरी हेमिङ्वेले एक बिहान डुङ्गामा बसेर समुद्रमा माछा मार्ने विषयमा सोचिरहँदा द ओल्ड म्यान एन्ड द सी जस्तो महान् उपन्यासको पहिलो ड्राफ्ट लेखेका थिए । सुत्केरी-बेथाले छटपटाइरहेकी युवतीले एउटा सुन्दर कविता सोचिरहेकी हुन्छिन्, जब उनी बच्चा जन्माउन जतिसुकै पहाडजस्तो भारी थाम्न पनि तयार हुन्छिन् । त्यो नवजात शिशु एउटा सुन्दर कविता हो । अनि एउटा सुन्दर कविता लेख्नु बुद्धजस्तै समाधिमा बस्नु हो, जसरी सन्तान जन्माउन एउटी आमा समाधिमा बसेकी हुन्छिन् ।

म कवितालाई मेरो काव्यात्मक भाषाको आविष्कारझैँ ठान्छु । जेले मेरो अन्तस्थलमा स्पर्श गर्छ, त्यो काव्यपङ्क्तिमा अनूदित हुन खोज्छ । कतिपय अवस्थामा त्यो पूर्ण रूपमा अनूदित हुनबाट रोकिन्छ र मेरा कविताको असामयिक मृत्यु हुन्छ ।

एउटा कलाकारले सुनको ढिक्कालाई कलात्मक स्वरूपमा ढाल्न सक्छ । कवि र कलाकार, शिक्षक र वैज्ञानिक, आमा र किसान उस्तै लाग्छन् मलाई । किनभने ती असल सिर्जनशील तत्त्व हुन् । तिनमा असीम पीडाबाट जन्मिएका गहिरा भावनाहरूको योग हुँदोरहेछ ।

म ठान्छु, कवितामा आम-मानिसका भावना कविको भावनामा रूपान्तरित भएर आउँछन् र कवितामा प्राण भर्छन् । साँचो कवितामा जनताको सङ्घर्षको गाथा हुन्छ, तिनको खुसी हुन्छ, पीडा र अनुभव पनि हुन्छन् । तिनको कालिकता हुन्छ र त्यो सार्वकालिक बन्न जान्छ । सबैले हिँड्ने बाटो उही हुन सक्छ तर कविको आफ्नै निजी यात्रा हुन्छ, आफ्नै गोरेटो हुन्छ । कवि सामान्य मान्छेझैँ बाँच्छ तर मात्र कवि भएर बाँच्छ; जसरी बाँचिरहेछन् देवकोटा, रिमाल र भूपि । म तिनीहरूको कविताबाट जहिल्यै केही झिल्का उठेको पाउँछु ।

म सोच्छु, आफ्नै 'विशेष' अन्तर्दृष्टिले नै कवि विश्वलाई कविताका रूपमा देख्छ । मानिसको अहम् र अस्तित्वको बचाउ गर्न कविताको भाषा अति नै सहयोगी हुन्छ भन्ने मलाई लाग्छ । मेरा लागि सबैभन्दा ठूलो कविता मेरी आमा हुन्, माटो र दूबो हो । अनि धर्ती रसाउने पानीका कण हो । एउटा राम्रो कविता पढ्दा मलाई मेरै भावनाहरूको सान्निध्य प्राप्त भएजस्तो लाग्छ । त्यस बेला म आफ्ना संवेद्य तन्तुभित्र प्रवेश गर्छु । मभित्र विद्युत् तरङ्ग प्रवाहित हुन्छ । सायद यो पनि कविताको पुनः रचना गर्नु हो । कुनै नयाँ घटना वा वस्तुले छोइँदा म कविता लेखनतर्फ उद्वेलित हुन पुग्छु । यही उद्वेलनले मलाई कवि हुन प्रेरित गर्छ र म मेरा अग्रज, समकालीन र अनुजका भीडमा उपस्थित रहन्छु ।

हाम्रा पत्रपत्रिकामा लेखिबस्ने समीक्षाशास्त्रीको जस्तो कविता-व्याख्या गर्न म सक्दिनँ । त्यस्ता शब्दावली म जान्दिनँ पनि । तर यति भन्न सकिन्छ, एटमका कविताको शक्तिले मेरा समकालीन कविहरूका 'कविता'लाई पछाडि पारेका छन् । कविता त लेख्छु म पनि । तर बेला बेला लाग्छ- म कविता लेखेर कविताविरुद्ध कतै भयङ्कर ठट्टा पो

गरिरहेको छु कि ?

बालचन्द्र शर्माले कतै लेखेका छन्, 'वास्तवमा हामी योग्य कवि हौँ, जो अयोग्यतापूर्वक कविता लेखिरहेका छौँ, किनभने हामी आफ्नै समाज र राष्ट्रप्रति पूर्ण जागरुक छैनौँ ।' सायद शर्माको यो कथन मेरो सवालमा पनि मेल खान्छ, किनभने म समाज र राष्ट्रप्रति जागरुक छुइनँ नै ! 'जागरुक' हुने 'जागरुकता' पनि छैन मसँग ।

०००

कोही पाठक एटम किन पढोस् ? कवि एटम ती चुनिएका लेखकमा एक हुन्, जो कविता र भाषाको सीमा मात्रै बढाउँदैनन्, कविताको नयाँ स्वरूप निर्माण पनि गर्छन् । जस्तो यी कवितै हेर्नुस् न, यिनमा छन्– कविता र मौनता । छन्– कविता र उपासना । कति गजब कुरा हगि ! हामीलाई चाहिन्छन् यस्तै कवि, जो कविताका पुराना मक्किएका, थोत्रिएका लिकमा हिँड्दैनन्, आफ्नो लिक आफैँ बनाउँछन् । क्याबात एटम सर !

म सोचिबस्छु, कविता आज विघटनको एउटा मोडमा उभिएको छ, त्यहाँबाट यस्तो एउटा लिक सुरु हुन्छ, जुन अहिलेसम्मको राजमार्गबाट निश्चित रूपमा फरक छ । आजका कवि जीवनलाई गहिरो आन्तरिक स्तरमा भोल्छन् र अभिव्यक्त गर्छन् । यो अभिव्यक्ति उसको 'सोख' होइन, 'दायित्व' हो । किनभने आजका कवि जीवनका अनेक लडाइँमा सामेल एक योद्धा पनि हो । उसले लड्नुपरेको छ, डिजिटल समयसँग, राज्यसत्ता त छँदै छ सामु ।

०००

स्कुल छँदै पढेको हुँ– नेत्र एटमलाई । एसएलसी परीक्षामा नेपाली विषयको एउटा सन्दर्भ किताब पढ्नुपर्थ्यो । उनले किताबमा लेखेका बीपी र देवकोटामाथिका समालोचना कण्ठै थिए उबेला, कारण परीक्षामा तिनै कण्ठस्थ उनका समालोचना जो लेख्नुथियो ।

वर्षौंपछि जसको समालोचनै कण्ठ थियो, उनैमाथि लेख्दै छु । तर के लेख्दै छु ? थाहा छैन । यो निबन्ध भयो कि टिप्पणी वा 'प्रशंसा प्रवचनपत्र' ? थाहा छैन ।

प्रिय मौनता पढेपछि एटम सरमाथि लेख्न खोजेको केही महिनै बितिसक्यो । थापाथलीको कफी स्टेसनमा तातात्तै उनैको पैसाले कफी खाएर 'लेख्छु' भनेको थिएँ । तर लेख्ने साइत कहिल्यै जुरेनछ । तैपनि केही शब्द लेख्दै/डिलिट गर्दै महिनौँ बितेका छन् । म सायद एक बिब्ल्याँटो समयमा उभिएको थिएँ । जागिर, घर, छोरा–छोरीको संसार ! अफिस जान्थेँ, घर फर्किन्थेँ । न पढ्थेँ, न लेख्थेँ । खासमा म केही, केही पनि त गरिरहेको थिइनँ । के गरिरहेको थिएँ म ? विचार ? अहँ, त्यो पनि गरिरहेको थिइनँ । तर मस्तिष्कमा जब्बर रूपमा आउँथे/जान्थे एटम सर र प्रिय मौनता ।

यो आलेख (यो आलेख नै हो त ?) लेख्नुअघि मैले डायरीमा नोट बनाएको रहेछु, त्यहाँ लेखिरहेको रहेछ– एटमका कवितामा गहिरो उदासी छ र तीव्र बेचैनी पनि । हैरान छन् कवि, प्रश्न गरिरहेछन् 'समयको खोजी'लाई, 'रिक्तताहरू'लाई, 'कहरको क्यानभास'लाई । उनमा आवेग पनि छ, तर उनी आवेग होइन, प्रेमका कवि हुन् । 'मौनता' हो उनको ब्रान्ड ।

जब एक पूरै दिन म उनका कविता पढिरहन्छु र प्रत्येक शब्दमा डुब्छु, त्यस समय एउटा अस्तित्व भ्रम पैदा हुन्छ– म किन यस्तो विसङ्गत समयमा बाँचिरहेको छु ? म उनका यी शब्दहरूमा किन प्रवेश गर्न चाहन्छु ? मान्छेले भनेको सुनेको छु– एटम मुस्किल लेखक हुन्, एक अजिवोगरिब कवि ! तर एटमका कविता मान्छेहरूले भनेजस्तो मुस्किल लाग्दैनन् मलाई । उनका शब्दले इतिहासको कुनै कालखण्ड व्यक्त गर्छन् । उनका शब्द पहाडका ती पत्थर हुन्, जो अन्य कविलाई चुनौती दिएर पहाडमा थपक्कै बसेका छन् ।

मलाई एटम पढ्नुछ, यस समयको मोडमा उभिएर एटम पढ्नु आकर्षणको विषय पक्कै होइन, बरु अनिवार्य हो ।

प्रिय मौनताका यी उपासना कविताका आवाजले भन्छन्– दुनियाँ तत्कालै बनिरहेको छ, तत्कालै भत्किइरहेको छ । त्यो पुरानो दुनियाँ त भत्किरहेकै छ र अब हामीले बनाउनुछ– नयाँ दुनियाँ ।

०००

'आदर्श समालोचक न कोही थियो न कोही छ' भन्ने समालोचक रामकृष्ण शर्मा 'टाक्सिएको नेपाली कविता'मा लेख्छन्, 'टाक्सिएको नेपाली कविता अब फस्टाउन थाल्यो तर नेपाली कविता, नेपाली साहित्य र नेपाली भाषामा नेपाली सभ्यता र संस्कृति, जातीयता र जीवनको प्रभाव अझै पर्नुपर्छ । हिन्दी कविता र अङ्ग्रेजी कविताको देखासिकी र भावापहरणले मात्र टाक्सिएको नेपाली कवितालाई अघि बढ्न गाह्रै पर्छ ।' (शारदा, वर्ष १०–१२) ।

एटमका यी कविता र समकालका कविता पढेपछि भन्न मन लाग्छ– शर्मा सर, तपाईंले उहिल्यै भन्नुभएझैँ अब टाक्सिएका छैनन् हाम्रा कविता ।

तर यो प्रश्न कवि एटमलाई होइन, समालोचक एटमलाई– प्रिय एटम सर, के नेपाली कविता अझै टाक्सिएकै छ ? ■

**(कवि, निबन्धकार सापकोटा कान्तिपुर दैनिकको साप्ताहिक परिशिष्टाङ्क 'कोसेली'का संयोजक हुन् । निबन्धसङ्ग्रह 'लोकेसन'का लेखक उनी चर्चित साहित्यिक मासिक 'पाण्डुलिपि'का सम्पादक थिए ।)**

# किराती लोकपरम्परामा सञ्चार प्रणाली




संस्कृति



◆ गणेश राई

विश्वको आमसञ्चार प्रणाली विज्ञान र प्रविधिले जसरी फड्को मारेको छ त्यसबाट देश नेपाल पनि सँगसँगै घिस्रिरहेको छ। यद्यपि अत्याधुनिक सञ्चार प्रणालीसँग जोड्नुअघि नेपाली समाज र त्यसमा पनि आदिवासी जनजाति समुदायको आफ्नो छुट्टै परम्परागत सञ्चार प्रणाली थियो र छन्। प्रस्तुत आलेखमा आदिवासी किरात राई जातिको लोकपरम्परा, सामाजिक मूल्यमान्यतालाई केन्द्रबिन्दु बनाइएको छ।

●●●

किराती लोकजीवनमा अनेकौँ विषयवस्तु छन्, जसले लोकसञ्चार जनाउँछ। जीवन र जगत्को उत्पत्तिदेखि विभिन्न भाषा, संस्कार, संस्कृति, कला, साहित्य, दर्शन, अर्थशास्त्र, भूगोल आदि अनेकन विषय जीवनपद्धति मुन्दुम दर्शनका विषयवस्तु हुन्। यद्यपि मुन्दममा दुईवटा विषयवस्तुको उठान गरिएका हुन्छन्। उत्पत्तिसम्बन्धी विषय र संस्कार संस्कृतिसम्बन्धी गरी मुख्य दुईवटा विषयवस्तुको उल्लेख मुन्धुममा पाइन्छ।

●●●

## मुन्दुम दर्शनमा आधारित जीवन पद्धति

किरात जातिको जीवनदर्शन तथा जीवन पद्धति मुन्दुममा आधारित छ। मुन्दुमलाई मुन्धुम, मुक्दुम, मुक्तुम, मुद्दुम, मिन्दुम, मुन्थुम पनि भनिन्छ। आदिम पुर्खाहरूले मान्दै, मनाउँदै ल्याएका परम्परागत जीवन उत्पत्तिदेखि जन्म, न्वारन, पास्नी, छेवर, गुन्युचोली, विवाह, पुनर्विवाह, मृत्युसंस्कार, मृत्युपछि गरिने संस्कार मुन्दुममा आधारित छन्।

सृष्टि मुन्दुममा छ नारीसत्ता। नारीको अरनखटनपछि पुरुषले काम गर्छ। चिबे चरीको पुच्छर हेरेर खाँबो काट्छ। लामपुच्छ्रे चरीको पुच्छर हेरेर बलो काट्छ। अनि घर बनाउँछन्, जोईपोइ मिलेर। ढुकुरको सिकार गर्छन्। ढुकुर गाँडमा पोको परेको बिउ रोपेर अन्नबाली फलाउन थाल्छन्। त्यही बेलादेखि कृषि युगको सुनौलो सुरुवात भएको मानिन्छ।

## आमसञ्चार

शब्दकोशमा 'आम' भन्नाले सर्वसाधारणका लागि, जनताका लागि। 'सञ्चार' भन्नाले कुनै वस्तु एक ठाउँबाट अर्को ठाउँमा लैजाने वा पठाउने काम वा त्यस प्रकारका विविध साधन (डाँक, तार, पत्रपत्रिका, रेडियो, चलचित्र इत्यादि) उल्लेख छ। आमसञ्चार भन्नाले जनताका लागि गरिने सञ्चारकर्म हो, जुन काम सञ्चारक वा सञ्चारको काम गर्ने व्यक्तिले आफू सम्बद्ध आमसञ्चारमाध्यमबाट सार्वजनिक गर्छ।

एक व्यक्तिले अर्को व्यक्तिसित संवाद गर्नु पनि सञ्चार हो। अंग्रेजी भाषामा कम्युनिकेसन भनिने शब्द ल्याटिन भाषाको कम्युनिबाट आएको हो। यसको अर्थ आदानप्रदान गर्नु भन्ने हुन्छ। मानिसले गर्ने हरेक क्रियाकलाप नै सञ्चार हो। सुख, दुःख, हर्ष, पीडा, आनन्द तिनै क्रियाकलापले जनाउँछ। विज्ञहरूले सञ्चार प्रणालीलाई विभिन्न भागमा वर्गीकरण गरेको पाइन्छ। १) अन्तर्वैयक्तिक सञ्चार, २) वैयक्तिक सञ्चार, ३) सामूहिक सञ्चार र ४) आमसञ्चार, (राई, राजेश चाम्लिङ (२०७४) : किराती समुदायको परम्परागत सञ्चारमाध्यम, ललितपुर : आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान।)

सामूहिक सञ्चार भन्नाले एकैसाथ धेरै ठूलो मानिसको समूह, डफ्फा, हुललाई सङ्केत गर्छ। बुझाउँछ। आमसञ्चार भन्नाले एकै पटक हजारौँ वा असङ्ख्य मानिसलाई सन्देश प्रवाह गर्नु भन्ने बुझिन्छ। त्यसनिम्ति व्यक्ति स्वयं प्रयोग हुन्छ। ती व्यक्तिले कुनै साधन प्रयोग गरेर बुझाउने काम गर्छ। वर्तमान एक्काइसौँ शताब्दी विज्ञान, प्रविधिको उच्चतम विकासले विश्वको कुनै पनि कुनामा घटेको घटना क्षणभरमै



संसारभरिका मानिसले थाहा पाउन सक्छन् । खासगरी आमसञ्चार भन्नाले छापा माध्यम अखबार, रेडियो, टेलिभिजन, इन्टरनेट अनलाइनलगायत न्युमिडियाका माध्यमहरू पर्छन् । आधुनिक आमसञ्चारमा विज्ञान प्रविधिबाट उत्पादित अनेकन यन्त्र, उपकरणहरूको प्रयोग हुने गर्छ । आधुनिक सञ्चारको प्रारम्भ इसापूर्व ४००० बाट सुरु भएको मानिन्छ (राई, २०७४ पृ.१४) ।

## परम्परागत आमसञ्चार

मानिस कबिला युगबाट ढुङ्गेयुग, कृषियुग हुँदै आधुनिक सभ्यताको चरणमा प्रवेश गर्दा अनेकन तरङ्गहरू पैदा भएका छन् । व्यक्तिगत लाभका निम्ति, सामूहिक लाभका निम्ति अभिव्यक्ति सञ्चार गर्दैआएका छन् । एक व्यक्तिले अर्को व्यक्ति र समूहलाई सञ्चार गर्न निकाल्ने आवाजलाई विशेष जनाउँछ । सुइसुला होस् वा सिकार खेल्दा हिंस्रक जनावरको आक्रमण हुनुअघि हारगुहार माग्दै चिच्याएको आपत्कालीन स्वर नै सञ्चारको पहिलो आधार मान्न सकिन्छ । त्यसपछि मानिसहरूको झुन्डमाझ सामूहिक रूपमा सञ्चार गर्ने विधिहरू जेजस्ता अपनाइए त्यसलाई परम्परागत सञ्चारका रूपमा लिने गरिन्छ । ती झुन्डले आफ्नो हुल वा समूहले बुझ्ने सामूहिक सञ्चारका सङ्केतहरू मौलिक माध्यम बन्न सकेको पाइन्छ ।

मानव विकास क्रमसँगै सञ्चारका अनेक विधिहरू अपनाउन थालियो । लोककलाले मानव जातिबीच एकआपसमा सुखदुःखका क्षण साटासाट गर्न र सामूहिकताको विकास गर्न सघायो । परिणामस्वरूप लोककला मानव जातिबीच ज्यादै लोकप्रिय हुन थाल्यो । लोककला मानव जातिको सांस्कृतिक परिचय र सांस्कृतिक निधि मात्र बनेन, समाजको व्यक्तित्वसमेत बन्न पुग्यो । यससँगसँगै लोककला आफैँ सामाजिक सञ्चारको माध्यम बन्न पुग्यो । लोककलाले सञ्चारको काम गर्न थाल्यो । लोककलामार्फत हुने सञ्चारलाई आधुनिक सञ्चारशास्त्रीले लोकमाध्यम भन्ने नाम दिए (दुरा, यमबहादुर, लोकमाध्यमका चुनौती, मिडिया रिडर (सम्पा. दीपक अर्याल र अरू, २०७०, काठमाडौँ : नेपाल पत्रकार महासङ्घ, पृ.३६२–६३) ।

लोकमाध्यमको निश्चित परिभाषा नरहे पनि रैथाने जाति, स्थानीय भाषा, जीवनशैली, संस्कार, संस्कृति, परम्परा, सामाजिक मूल्यमान्यताहरू त्यसमा जोडिएका हुन्छन् । आदिम युगमा विकसित भएका सञ्चार परम्परागत सञ्चार हुन् । विभिन्न धर्म, जाति र भाषिक समूहको आआफ्नै सञ्चारको प्रयोग गरेको पाइन्छ, जतिखेर आधुनिक सञ्चारका माध्यमहरू आविष्कार गरिएकै थिएन । तिनै सङ्केतहरूको विकास हुँदै जाँदा अनौपचारिक मात्र नभई औपचारिक रूपमा आधुनिक सञ्चार प्रणालीको विकास भएको मानिन्छ ।

भारतीय लेखक सीएस श्रीकुमार (सन् २००७)ले लोककलालाई चार आधारमा विभाजन गरेका छन् :

(क) मौखिक परम्परा : गाउँखाने कथा, गीत, कथा, उखान टुक्का र जीवनमा प्रचलित अन्य श्रुतिपरम्परा ।

(ख) भौतिक संस्कृति : हस्तकला, खाद्य परिकार, वास्तुकला,

कपडा अर्थात् पहिरन, गरगहना, हातहतियार, कृषि प्रणाली आदि ।

(ग) सामाजिक संस्कार : जन्मदेखि मृत्युसम्मका संस्कार एवं सामाजिक जमघट ।

(घ) अभिनयप्रधान कला : नृत्य, वाद्यवादन, नाटक आदि । (दुरा, २०७०)

आधुनिक सञ्चार प्रणालीको ढाँचाअनुसार सबैखाले लोकमाध्यमलाई सञ्चारमाध्यम भनेर किटान गर्न नसकिए पनि त्यसले सामाजिक मनोविज्ञान, सामाजिक आदर्श, जनविश्वास प्रवाह गर्दछ । मानवीय मन, स्वभावबाट स्वतस्फूर्त प्रकट हुने सञ्चार लोकसञ्चारका रूप मान्न सकिन्छ । एचके रङ्गनाथ (सन् १९७६)ले लोकमाध्यमलाई निकै प्रभावकारी माध्यमका रूपमा व्याख्या गरेका छन् । उनले यो सस्तो, सजिलो, फरक फरक पक्ष (जात, धर्म, क्षेत्र, लिङ्ग वा उमेर)लाई सम्बोधन गर्न सक्ने, तुरुन्त उपलब्ध हुनसक्ने, प्रापकले आफ्नोपनको आभाष गर्ने र राम्रोसँग सुन्ने तथा त्यसको प्रतिक्रिया तुरुन्त दिन सकिने माध्यम भनेका छन् (दुरा, २०७०) । परम्परागत सञ्चारमाध्यम विकसित भएको निश्चित मिति हुँदैन । मानिसहरूले आफ्नो जीवन भोगाइको क्रममा अभ्यास गर्ने विधिविधानको आधारमा विकसित भएका हुन्छन् । निश्चित मिति भन्न नसकिने त्यस्ता अनेकौं सञ्चारका साधनहरू अझै पनि प्रयोगमा छन् । यी साधनहरू युगौंयुगदेखि प्रचलनमा आएका हुन्छन् (राई, २०७४ पृ.१४) ।

अनुसन्धाता यमबहादुर दुराले ‘लोकमाध्यमका सकारात्मक पक्ष’बारे उल्लेख गर्छन्– परम्परा र संस्कृतिसँग नजिकको नाता रहेकाले जनस्तरमा नितान्त लोकप्रिय अन्तरसांस्कृतिक सञ्चारमा जस्तो सञ्चार अवरोध नहुने परिचित भाषा र कलाको प्रयोग हुने भएकाले स्थानीय स्तरमा सञ्चार एकदमै प्रत्यक्ष, सीधा र गहिरो प्रभाव रहने । सञ्चारकर्ममा स्थानीय जनशक्ति र प्रतिभाको उपयोग हुने । आधुनिक प्रविधिको प्रयोग नहुने भएकाले तुलनात्मक रूपमा सस्तो पर्ने । विदेशी विचारधारा र सांस्कृतिक साम्राज्यवादबाट मुक्त हुने । सञ्चार प्रणाली शक्तिशाली सञ्चार उद्यमीको हातमा नभई समुदायको स्वामित्वमा रहने । स्थानीय आवश्यकता र जीवनशैली सुहाउँदो सन्देश हुने । तत्काल प्रतिक्रिया प्राप्त हुनसक्ने ।

## किरातीको लोकमाध्यम

किराती लोकजीवनमा अनेकौं विषयवस्तु छन्, जसले लोकसञ्चार जनाउँछ । जीवन र जगत्को उत्पत्तिदेखि विभिन्न भाषा, संस्कार, संस्कृति, कला, साहित्य, दर्शन, अर्थशास्त्र, भूगोल आदि अनेकन विषय जीवनपद्धति मुन्दुम दर्शनका विषयवस्तु हुन् । यद्यपि मुन्दममा दुईवटा विषयवस्तुको उठान गरिएका हुन्छन् । उत्पत्तिसम्बन्धी विषय र संस्कार संस्कृतिसम्बन्धी गरी मुख्य दुईवटा विषयवस्तुको उल्लेख मुन्धुममा पाइन्छ (राई, २०७१ पृ.७८) । यिनै दुई विषयमा किरातीको मुन्धुम मिथकको दृष्टिकोणबाट सञ्चार प्रणाली खोज्ने प्रयास गरिएको छ ।

## मुन्दुम मिथक र सञ्चार

एक दिन हेन्खाम (धर्ती)मा सुम्निमा तान बुनिरहेकी थिइन् । अचानक निनाम्मा (आकाश) बाट सुन्दर सिखिप (काइयो) सुम्निमाको छेउमा झर्‍यो । राम्रो सिखिप हेरेर ज्यादै गद्गद भइन् । यति राम्रो सिखिप बनाउने मान्छे झन् राम्रो होला ? को त्यो मान्छे होला ? भन्ने प्रश्नले उनलाई सताउन थाल्यो । पक्कै यो मान्छे राम्रो हुनुपर्छ । मौका मिलेछ भने ऊसँग विवाह गर्छु भनी मनमा सोचिछन् । पारुहाङ अर्काको अन्तर्मनको अदृश्य कुरो बुझ्ने भएकाले तुरुन्त प्रफुल्लित भएर आफ्नो रूप बदली तल झरेछ । योजना सफल हुने भएपछि विवाहको प्रस्ताव राखेछन् । सिखिपको कुरोबारे वर्णन गर्दै आफू सुन्दर भएको चर्चा राखेछन् । सारा खुसी दिने बाचा गरेछन् । बुढो हाङ पुरुष देखेर सुम्निमाले विवाहको प्रस्ताव अस्वीकार गरिछन् । सुम्निमाले गाली गरिछन् । रिसले तातेका पारुहाङ पनि आकास लोकतर्फ हान्निएछन् । पछि पारुहाङले बदला लिने योजना बनाई धर्तीका सारा भाग सुकाइदिएछन् । पानीको हाहाकार भएछ । पारुहाङले आफ्नो वीर्य रुखको टोड्कामा राखेर अलप भएछन् । सुम्निमाले लाहाचे चरोलाई पानी खोज्न पठाइन् । पानीको तिर्खाले गर्दा त्यो टोड्काको पानी (वीर्य) लाहाचेले खाइदिएछ । त्यो नसोचेको अवस्था देखेर पारुहाङ रिसाएर चराको जिब्रो थुतिदिएछन् । वीर्य पुनः नाचिहाङको पातमा राखेर बेपत्ता भएछ । झन् पानीको अभावमा धर्ती जल्न थालेछ । अब सुम्निमाले के गर्दिरहेछ भनेर बदला लिन पारुहाङ हिमालमा गएर मस्त निदाएछ ।

हेन्खामाभरि पानीको हाहाकार खडेरी भयो । काकाकुल सुम्निमाले खोलामा बस्ने कल्चुँडा चरालाई पानी खोज्न लगाइन् । उसले धेरै ठाउँ खोज्दै गर्दा अचानक वनस्पतिको पातमा पानी देखेछ । नाचिहाङको पातमा भएको दुई थोपा पानी ल्याइदिएछ । सुम्निमाले जब त्यो पानी पिइन्, त्यसपछि सारा धर्तीमा पानी रसाएछ । जताततै हरियाली भएर आएछ । सबै प्राणीहरू चिसोले ब्युँतिएछन् । सुम्निमा पनि आनन्दले रमाउँदै बसिन् । तर अर्कोतर्फ सुम्निमा बिरामी भइन् । उनले नारावा (धोबी चरा)लाई दोवा (धामी किराती) खोज्न पठाइन् । आफ्नो दसा हेर्न यारी (जोखाना कुनै अदुवाको वा लहरे जङ्गली वनस्पतिको जरा काटेर चित, पोटबाट रोग खुट्याउनु) पनि पठाइछन् । नारावाले अरू सामानहरू बेछु (अदुवा), मेरिपात (वनस्पतिको पात), वासिम (जाँड), सोलेमा (चिन्डो), अछेता र सुनाखरीफूल बोकेर हिमालतर्फ गएछ । बुढोहाङ दोवा (धामी)लाई भेटेर सुम्निमाको रोगबारे हेर्न अनुरोध गरेछ । यारी काटेर जोखना हेर्दा सुम्निमा बुखुन्दीमा (गर्भवती) भएको बताएछ । नारावाले हतारहतार आएर उक्त खबर सुम्निमालाई सुनाएछ । खबरले

सुम्निमालाई आश्चर्य तुल्यायो । नैतिकताको कारण दोधारमा परिन् । कुनै पुरुषसँग सम्बन्ध नगरी कसरी यो सम्भव छ । यो उसैको षडयन्त्र हो भन्ने विश्वास गरिन् । अब उसैसँग विवाह गर्ने सोचिन् । पारुहाङसँग विवाह गर्ने विचार गरी ताङतुप्मी चरालाई खोज्न पठाइन् । तर चरा कहिल्यै फर्केन ।

धेरै पछि बल्ल चराले थाहा पाएछ । पारुहाङ साल्पापोखरीको पानीभित्र सुतिरहेको रहेछ । चराले सोलेवा (चिन्डो)को जाँड छर्कँदै पोखरी वरिपरि नाच्दै गीत गाएछ । नाचागान गर्दै हल्ला गरेछ । तर पारुहाङ उठेनछ । लगातार सुम्निमाले तुइरा चरा, चेन्चेरेवा (जङ्गली कुखुराको भाले), तायाया (मयूर), खियामा (धनुष) चरालाई पालैपालो पारुहाङलाई उठाउन साल्पापोखरीमा पठाइछिन् । उनीहरूले पनि त्यसैगरी सोलेवाको जाँड पानी छर्किँदै पोखरी वरिपरि नाचेछन् ।  कति गर्दा पनि कार्य सफल भएन । गर्भवती सुम्निमा झन लाजले र डरले बिलखबन्दमा पर्दै गइन् । अन्त्यमा सुम्निमाले कावा (गँगटा)लाई आफ्नो समस्या वृत्तान्त सुनाइन् । अन्यथा आफ्नो जे पनि हुनसक्ने कुरा पीर बताइन् । त्यसपछि पोखरीभित्र सुतेका पारुहाङलाई उठाउन कावा पठाइन् । पहिले गएका चराहरू पोखरी वरिपरि नाचगान गरेर थकित बसिरहेका रहेछन् । कावाले पानीभित्र मस्त निदाएका पारुहाङको कानमा टोकेर ब्युँताएछ । पारुहाङ रिसले आगो भएर बाहिर निस्केछ । सुम्निमाले त्यसैबेला आफ्ना सारा पुराना गल्ती स्वीकार गरिछन् । अब पारुहाङ तिमीलाई प्रेम गर्छु भनी प्रस्ताव राखिछन् । आफूबाट भूल भएकामा माफ मागिछन् ।

पारुहाङको मन प्रसन्न भएछ । आफ्नो योजना सफल भएकोमा हर्षले सुम्निमालाई आलिङ्गन गरेछ । दुवैले विवाह गरी घरजम बसालेछन् । विवाहको दिन सुम्निमाले लोग्नेलाई लिम्चुङबुङ फूलको श्रीपेँच बनाई शिरमा लगाइदिइन् । लोग्नेले पनि सुम्निमाको शिरमा आमलारिबुङ (सुनाखरी फूल) लगाइदिएछन् । उक्त शुभविवाहको उत्सवमा सारा चराहरूले, अन्य प्राणीहरूले आआफ्नो भाषा, सङ्गीतमा जे जानेका थिए, त्यही विशेषताका आधारमा नाचेछन् । गीत गाउँदै रमाइलो गरेछन् । सारा धर्ती, आकाशमा दुवैको विवाह धुमधाम सम्पन्न भएछ । यसैको आधारमा पुर्खा पारुहाङ र सुम्निमालाई सम्झेर सम्मान गरी नाचिने नाच साकेला हो (राई, २०७१ पृ. ६७–६९) ।

संश्लेषण : निनाम्मा (आकाश)मा रहेका पारुहाङ र हेन्खाम (धर्ती)मा रहेकी सुम्निमा पुर्खा हुन् । पुर्खाले सृष्टिकालमा एकले अर्कोलाई सन्देश प्रवाह गरेका छन् । सन्देशवाहकका रूपमा लाहाचे, नारावा (धोबी चरा), ताङतुप्मी, तुइरा चरा, चेन्चेरेवा, तायाया, खियामा चराहरू, कावा (गँगटा) देखिएका छन् । दोवा (धामी)बाट बेछु (अदुवा), मेरिपात (वनस्पतिको पात), वासिमले भरिएको चिन्डोको जाँड छर्केको सङ्केत गरेका छन् ।

## मुन्दुमी सञ्चारवाहक

(१) भाले, (२) लिम्चिबुङ, (३) तारे चरो, (४) ताङतुप्मी चरो,। (५) तुइरा चरा, (६) चेन्चेरेवा (जङ्गली कुखुराको भाले), (७) तायाया (मयूर), (८) खियामा (धनुष) चरो, (९) कावा (गँगटो), (१०) धोबिनी चरो ।

## परम्परागत सञ्चार

(१) भुम (पुङ बजाउने), (२) डाँडाबाट कराउने, (३) सुसेली हाल्ने, (४) मान्छे पठाउने, (५) पात बजाउने, (६) चौतारी, (७) थार झुन्डाउने, (८) साकेला नाच्ने, (९) बन्दुक पड्काउने, (१०) ढोल बजाउने, (११) झ्याम्टा बजाउने, (१२) बाँसुरी बजाउने, (१३) कोस राख्ने ।

(१) **भुम (पुङ)**

भुम (पुङ) जङ्गली भैँसी वा अर्नाको सिङलाई टुप्पोमा सानो प्वाल पारेर उक्त प्वालमा मालिङ्गोको पाइप राखी मुखले फुकेर बजाइने एक प्रकारको बाजा हो । सोलुखुम्बुको साताङ क्षेत्रमा दायाँ सिङ र लोखिममा बायाँ सिङ बजाउने परम्परा छ । यो बाजा कुलुङ राई, थुलुङ राई र खालिङ राईले तोष वा तोषी (साकेवा) थानमा पूजा गर्न जाँदा नोक्छो (धर्मगुरु)को साथमा ढोल, झ्याम्टा सँगसँगै बजाइन्छ । नयाँ खेतीपाती सुरु गऱ्याैं । हामीलाई वर्षाद् चाहियो भनेर वाबुहव (इन्द्र)ले सुनिदिनुपऱ्यो भनेर सूचनाका लागि भुम बजाइन्छ । भुमको काम सूचना दिने नै हो । यो प्रचलित परम्परागत बाजा हो (निर्कुधन थुलुङ राईसँग कुराकानी) ।

(२) **डाँडाबाट कराउने**

समुदायमा सामूहिक सूचना दिनका निम्ति समाजले खटाएको व्यक्तिले गाउँठाउँको अग्लो ठाउँ वा डाँडाबाट आवाज दिएर कराउने परम्परागत चलन आजपर्यन्त निरन्तर छ ।

(३) **सुसेली हाल्ने**

टाढाको व्यक्तिलाई निश्चित सचेत गराउन र ध्यानाकर्षित गर्न सुसेली हालेर ‘सुइँए’ गरी सुसेल्ने चलन रहेको छ ।

(४) **मान्छे पठाउने**

समाजमा मरौपरौ, बिहेबटुलो, सामूहिक कार्यका निम्ति व्यक्तिलाई खटाएर व्यक्तिगत वा सामूहिक जानकारी गराउने चलन छ ।

(५) **पात बजाउने**

वनजङ्गलमा घाँसदाउरा काट्न जाने मानिसले हरियो पात बजाएर अरूलाई जनाऊ दिने चलन छ । अझ गीतको भाका बजाएर अरूलाई ध्यानाकर्षित गराउने तथा दूधकोशी वारिको मान्छेले पारिका मान्छेसित संवाद गर्न पात बजाउने गर्छन् ।

(६) **ठाँटीफलैँचा**

किरात समुदायले आफूलाई पितृपुर्खा र प्रकृतिपूजकका रूपमा चिनाउने गर्छन् । पूर्वजहरूको निधनपछि उनीहरूको

सम्झनामा बाटोघाटो छेउमा ठाँटीफलैँचा वा चौतारी बनाउने परम्परा छ । जसमा पुर्खाको नाम, आयु र सम्झना साँच्ने परिवारको नामाङ्कित हुने गर्दछ ।

(७) **थार झुन्ड्याउने**

कुनै व्यक्ति, परिवार विशेषले आफ्नो वा सामूहिक स्वामित्वमा रहेको वनपाखामा रहेको रुखबिरुवा, घाँसदाउरा काट्न प्रतिबन्ध लगाउने सङ्केतका रूपमा घोचोमा बाबियो वा खरमा ढुङ्गा बाँधेर झुन्ड्याएर सङ्केत दिने चलन छ ।

(८) **साकेला नाच्ने**

किरात राई समुदायमा उभौली र उधौलीमा सार्वजनिक थलोमा सामूहिक रूपमा भेला भएर गोलघेरा नाच्ने गरिन्छ । त्यतिखेर ढोल, झ्याम्टा, चमर, सिकिरी बजाएर सामूहिक रूपमा नाच प्रदर्शन गरिन्छ ।

(९) **बन्दुक पड्काउने**

लिम्बू समुदायमा परम्परागत सञ्चारका बन्दुको प्रयोग गरिन्छ । बिहेलगायत शुभकार्यमा जोडी बन्दुक पड्काइन्छ । मृत्यु हुँदा एउटा मात्र पड्काइन्छ । लिम्बुवानको कुनै गाउँमा कसैको घरमा एकनाल बन्दुक पड्काएको सुनिएमा त्यो घरको सदस्यको मृत्यु भएछ भनेर जानिन्छ ( तेजमान आङदेम्बे, इलाम टाइम्स) ।

(१०) **ढोल बजाउने**

उभौली वा उधौलीमा किरात राईहरू ढोल बजाएर नाच्ने गर्छन् । यसले सम्बन्धित किरात राई जातिको विशेष अवसरका रूपमा जनाउ दिन्छ ।

(११) **झ्याम्टा बजाउने**

घरको विशेष पितृकार्य गर्ने वा सामूहिक रूपमा साकेला सिली प्रदर्शन गर्ने परम्परा रहेको छ । त्यतिखेर झ्याम्टा बजाइन्छ । अन्य शुभकार्यमा समेत ढोल र झ्याम्टा बजाउने परम्परा छ ।

(१२) **बाँसुरी, मुरली, बिनायो**

मनोरञ्जनमा रमाउनु मानिसको प्राकृतिक स्वभाव हो । किराती समुदायका मानिसहरूमा पनि त्यस्तै स्वभाव पाइन्छ । जङ्गली युगबाट कृषि युगतर्फ लम्किँदै गर्दा मनोरञ्जनको साधनका रूपमा बाँसबाट अनेक बाजा बनाएर बजाउने गरेको पाइन्छ । बाम्बुले राई समुदायमा असारदेखि साउन १४ गतेसम्म धरतीमुनि देउताहरू गुफा बस्छन् । त्यसैले त्यतिखेर बाजाबजाना गर्नु हुन्न । चिच्याउनु, गीत गाउनुहुन्न । कपाल काट्न, कोर्न हुन्न । नङ काट्न हुन्न । जथाभाबी फोहरमैला गर्न हुन्न । भगवान्ले खिर पकाएर खाएका हुन्छन् । देउता रिसाउँछन् । वर्षात् भेल, पहिरो जान्छ । अनिष्ट हुन्छ भन्ने मान्यता रहेको छ । जब साउन १५ गते हुन्छ, त्यस दिनदेखि देउता गुफाबाट बाहिरिन्छन् । खुसियाली मनाउनुपर्छ भनेर बाँसुरी, मुरली, बिनायो बजाउने परम्परा रहेको छ । गाउँघर, डाँडापाखा, वनपाखामा बाँसुरी, मुरली, बिनायो, मुर्चुङ्गाजस्ता बाजा बजाउने गरिन्छ । बाम्बुले राईले साउन १५ गतेलाई बाँसुरी दिवसका रूपमा मनाउँछन् ।

(१३) **कोस**

जमिनको लम्बाइ नाप्दा दुई माइल लामो परिमाण, आठ हजार हात वा चार हजार गज लम्बाइको नापो, आठ सय धनु वा पैँतीस सय बीस गजको दुरी (बृहत् शब्दकोश) । उहिले नेपाली समाजमा घडी लगाएर समय मापन गर्ने प्रविधिको विकास भएको थिएन, त्यतिखेर बाटो हिँड्दा तीन किसिमले कोसको नापो लिने चलन थियो । यो चलन किराँती समुदायमा पनि थियो ।

(अ) ढुङ्गेकोस : उहिले मूलबाटो जमिनको दुई माइल दूरीका आधारमा ढुङ्गा गाड्ने चलन थियो । त्यसलाई कोसेढुङ्गा भनिन्थ्यो ।

(आ) स्याउले कोस : उहिले घडीको चलन नहुँदा बाटो हिँड्ने बटुवाले आफू हिँडेको बाटोको दूरी मापन गर्न रुखबिरुवाको पातसहितको हाँगा वा डाला भाँचेर हातमा लिन्थे । एक ठाउँबाट अर्को ठाउँ पुगिन्जेल उक्त स्याउला ओइलिने र सुक्ने गरी हातमा लिन्थे । त्यसलाई स्याउले कोस भन्ने गरिन्थ्यो ।

(इ) रुमालेकोस : उहिले बाटो हिँड्ने बटुवाले आफू हिँडेको बाटोको दूरी मापन गर्न खोला खोल्सी, कुवाको पानीमा रुमाल भिजाएर हातमा लिन्थे । एक ठाउँबाट अर्को ठाउँ पुगिन्जेल उक्त रुमाल सुकेसम्मको दूरीलाई एक कोसका रूपमा गणना गर्थे । त्यसलाई रुमाले कोस भन्ने गरिन्थ्यो ।

## निचोड

किराती राई समुदायमा मिथकीय सञ्चार, लोकमाध्यम र आधुनिक सञ्चार विद्यमान छ । मिथकीय सञ्चारमाध्यमहरू वर्तमानमा प्रचलनमा नरहेको तर सृष्टिकालमा पुर्खाले प्रयोग गरेको मुन्धुम मिथकमा पाइन्छ । त्यही मिथकलाई आजपर्यन्त पुस्तान्तरण हुने र गर्ने काम जारी छ । मिथकीय पात्रहरू, साधनहरू र त्यसका सन्देश बाहकहरूबारेमा उल्लेख गरिएका छन् । किरात मुन्दुम मिथकमा उद्धृत सञ्चार र तिनका बाहक सबैलाई व्यवहारमा उतार्न सम्भव छैन ।

लोकपरम्परामा रहेका बाजागाजाहरू, सांस्कृतिक सामग्री, मुन्दुम पालकहरूले पहिरिने परम्परागत पहिरनहरू, गरगहनाहरू विद्यमान छन् । जसलाई लोकमान्यतासित जोडेर आर्थिक उपार्जनसँग जोड्न थालेको पाइन्छ । परम्परागत मिथकलाई वर्तमान जीवनसँग जोड्नु आफैँमा महत्त्वपूर्ण पक्ष हो । लोकपरम्परालाई बचाइराख्नका निम्ति आधुनिक सञ्चारमाध्यमसँग जोडेर जीवन्त तुल्याउने प्रयास महत्त्वपूर्ण छ । जीवन्त तुल्याउने प्रयासमा रैथाने बोलीचाली, परम्परागत मूल्यमान्यता, लोककला, लोकनाटक, लोकगीत, लोकसंस्कृति आदिलाई बिटुलो हुनबाट भने जोगाउन जरुरी छ । ■

**(लेखक गणेश राई पत्रकार तथा लोकसंस्कृति अध्येता हुन् ।)**

# घाँस खाने मान्छे




कविता



◆ नारायण ढकाल

मेरो अन्तस्करणमा पशुवत् लक्षण थिए,
म घाँस खान लालायित भएँ।

घाँसको स्वाद कस्तो हुन्छ मलाई थाहा थिएन तर म त्यो राक्षसजस्तो गोठालोको हातमा हल्लिरहेको एक मुठी घाँस देखेर मनको दाम्लो छिनाल्दै त्यतातिर बेतोडले दौडिएँ।

सायद म अघिल्लो जन्ममा कुनै राजाको घोडा थिएँ जसको एक मात्र ध्यान युद्ध गर्नु मात्र थियो। तर लडाइँको मैदानमा भोकको के महत्त्व, त्यसमाथि मुखमा पसेर जिब्रो थिच्ने टर्रो फलाम ?

युद्धसर्दारलाई पिठ्युँमा बोकिरहनु, म अभागी घोडाको एक मात्र नियति हो। चर्को भोकको तोडमा फलामको स्वाद लिँदै कुदिरहनु, दासताको वरदान हो।

वा :

झन् अघिल्लोको अघिल्लो जन्ममा म कुनै धोबीको गरिब गधा थिएँ,
मरीमरी बोझ बोक्ने तर पेटभरि घाँस खान नपाउने।

होइन, होइन, म मालिकद्वारा परित्यक्त भोको खच्चड थिएँ जो सधैँ घाँस खान पाउने सपनामा बाँचिरहेको हुन्छ।

अहिले पनि म दाम्लोभित्रको पशु हुँ। मेरो आत्मा बन्धकीमा छ।
मैले नै आफूलाई त्यो क्रूर गोठालोकहाँ बन्धकी राखेको हुँ।

म झोले हुँ– मालिकहरूको सेवार्थ सधैँ खटिइरहने।
म दास हुँ– व्यभिचारी शासकहरूको जय गान गर्ने।
म अन्तस्करणभित्र एक लुब्ध प्रेतात्मा हुँ।

वा :

म त्यो थारो गाई हुँ जो गर्भ तुहिएपछि खोला किनारमा गाडिएको आफ्नो मृत शिशुको गन्ध सुँघ्न पागलझैँ भौँतारिइरहन्छ।

वा :

म महाकविले चाहेर पनि हुन नसकेको भेडा हुँ
(प्रभुजी मलाई भेडो बनाइदेऊ !)
मेरो अन्तस्करणमा पशुवत् लक्षण छन्।
म घाँस खान लालायित छु। ■



# म सम्पादक



◆ राजेन्द्र पराजुली




कविता

म एक सम्पादक दैनिक अखबारको
मालिकको नुन खाएको छु
नुनकै सोझो गर्छु
मालिकले जहाँ बोलाउँछन्, त्यहीं जान्छु
राति, बिहान, मध्याह्न
भान्छामा, कोठामा, रेस्टुराँमा
शयन कक्षमा, बाथरुममा, बाटोमा
मालिकले जसरी बस् भन्छन्, त्यसरी नै बस्छु
उठ् भने उठ्छु, बस् भने बस्छु
नाच् भने नाच्छु, हाँस् भने हाँस्छु
मालिकबाट तालिम पाएको छु यस्तै
म एक सम्पादक दैनिक अखबारको

भक्ति गर्छु मालिकले मन पराएको मान्छेको
प्रशंसा गर्छु मालिक लागेको दल र नेताको
व्यापारी र हाकिमको,
तस्कर र भ्रष्टाचारीको
उछित्तो काड्छु त्यसको
जसलाई मेरा मालिक मन पराउँदैनन्
मालिकको जोसँग कुरा मिल्दैन–लेनदेन मिल्दैन
मालिकको आँखाको कसिङ्गरलाई
म बढारिदिन्छु तीखा शब्दले
मालिक समाचारको हेडिङ लामो भो भन्छन्–
म छोट्याइदिन्छु
सम्पादकीय उल्टो भो भन्छन्–
म सुल्ट्याइदिन्छु
म एक सम्पादक दैनिक अखबारको

धेरै समयअघिदेखि नै
मिडियालाई बादशाहको जुत्ता भनिएकै हो
त्यही जुत्तालाई सबैबाट सलाम पनि गरिएकै हो
मेरा मालिक, मेरा बादशाह हुन्
म उनलाई दिनहुँ सलाम गर्छु
मालिककै कारण
म ठूलो मान्छे हुन पाएको छु
राष्ट्रपति, प्रधानमन्त्री, दलका नेता, व्यापारी
सबैलाई चाहेका बेला भेट्न सक्ने भएको छु
देश–विदेश सयर गर्न पाएको छु
महिनामा तलब खाएको छु
छोराछोरीलाई महँगा स्कुल पढाउन सकेको छु
हरेक दिनजसो रेस्टुराँमा खान पाएको छु
स्वाभिमान नाथेको के कुरा
खल्ती भरिएकै छ,
मान्छेहरूमाझ चिनिएकै छु
म एक सम्पादक दैनिक अखबारको

कुतखोर व्यापारीका कारण
बजारमा नुन–तेलको सङ्कट छ,
कर्णालीमा सिटामोलको चरम अभाव छ,
भ्रष्टाचारले जनता आक्रान्त छन्
बोक्सीको आरोपमा महिला
जिउँदै जलाइएका छन्,
बालिकाहरू बलात्कृत भइरहेका छन्,
दलितलाई सार्वजनिक इनार छुन बर्जित गरिएको छ
यस्सो भित्री पृष्ठमा
यी सबै समाचार छाप्दिएकै छु
चौथो अङ्गको धर्म निर्वाह गरेकै छु
म एक सम्पादक दैनिक अखबारको । ▪



# अब मलाई गाउँ जानुछ !






◆ डा. नवराज लम्साल

धेरै वर्ष भयो सहर पसेको
र सहर आफैँले पनि
धेरै कुरा सिकाएको छ मलाई ।

आँशुमा आशा खोज्न सिकाएको छ,
घृणामा माया खोज्न सिकाएको छ
मृत्युको डिलमै पुगेर बाँच्न सिकाएको छ
र जिन्दगी आफैँले सिकाएको छ–
बाँच्नु पहिलो सर्त हो जिन्दगीका लागि ।

जानु छ,
मैले सिकेका सबै सीप
र सिर्जना लिएर गाउँ जानुछ ।

सहरले मलाई
हारहरूको चिहान उघारेर
गुलाब रोप्न सिकाएको छ ।

अक्षर सिकाएको छ, चेतना सिकाएको छ
बदला होइन, क्षमा सिकाएको छ
हृदय सिकाएको छ
र हरेक दुःख सहेर हरियो हाँस्न सिकाएको छ ।

सहरले दिएको
ज्ञानको आकार र अन्तरको अनुभूति लिएर
अब मलाई गाउँ जानुछ
र भुक्तान गर्नुछ
साहुका ऋणजस्ता लाग्ने गाउँका सबैसबै कथाहरू !

स्कुलमा सबैलाई पुग्ने बेन्ची थिएन
बेन्चीबाट मलाई दिनहुँ फुत्तफुत्त फाल्ने साथीलाई भेट्नुछ
एउटा कर्ची किन्दिनुछ र भन्नु छ–
तिरस्कार बुझेपछि
प्रेमको मूल्य बुझ्न सजिलो हुनेरहेछ, साथी ।

गरिबको हुर्मत दिने
ब्याजी साहुलाई गुलाबको एउटा बिरुवा दिएर भन्नुछ–
दाजै
यो गुलाब हुर्काऊ
र निर्दोषीलाई दोषी करार गरेर कसैलाई कुट्नु परे
यसैले कुट !

एउटा निर्दोष
तिम्रो आँगनमा दोषी भएको नदेखेको भए त
म कसरी बुझ्थेँ र सत् र असत्को मूल अर्थ ?

मेरो खेतको
सिमाना च्यापी च्यापी मरेकाहरूको सम्झनामा
एउटा सालिक बनाइदिनुछ उसकै घरछेउ
र तिनका सन्तानलाई भन्नुछ–
जीवनभर लुटेको माटो यहीँ छोडेर
तिम्रो बा खाली हात गएको नदेखेको भए
कसरी थाहा हुन्थ्यो र
गरिबको आँगनमा किला ठोकेर साहु हुनेको पापकर्म !

राति सुटुक्क खोरखोरमा छिरेर
खसीबाख्रालाई विष खुवाइदिनेहरूलाई
एउटा एउटा खोर बनाइदिनुछ,
एउटा एउटा पाठी दिनुछ बाख्राको
र भन्नु छ–
खसी मरेपछि आमा रुनुभएको देखेरै हो मैले
आँसुको मूल्य बुझेको
बाख्राका यी पाठाहरू राम्ररी हुर्काउनू
र नडराउनू म तिम्रो खोरको बाख्रा मार्न
कहिल्यै आउने छैन ।
खरबारीमा आगो लगाइदिनेहरूलाई
पोखरी खन्न सिकाउनु छ र भन्नु छ–

मेरो पुछार गरामा तिम्ले खेती गरे हुन्छ
माटो कसैको हुन्न, बाटो कसैको हुन्न
मरेपछि आफ्नै भनिएको माटो कुल्चिएर हिँड्न पनि पाइन्न।

सम्पत्ति भन्नु त
एक पेट खानु र एक हर लाउनुको सीमासम्म न हो।

हिलो छ्यापेकी निर्मायाले हिलो हैन दिल फ्याँकेकी रैछे
माफ गर निर्माया
हिलोको सुगन्धमा प्रेम चुमेर यतै हराएको भए त
शरीरभोग बुझ्ने रहेछु, प्रेम र जीवन नबुझ्ने रहेछु
लाऊ राख
मेरो दिल मिसिएको यो जाली रुमाल।

अन्तरी वनमा जानुछ
र पूर्णिमालाई भन्नुछ–
अब हिजोजस्तो लोभी नभन्नू
पुरै बट्टा देउराली चुरोट ल्याएदिएको छु
उस्तैउस्तै त रहेछ :
चुरोटको धुवाँ र स्मृतिको आगोमा जीवनको धुवाँ।

यसरी जाँदा
रामुलाई लगिदिनुछ, एउटा मादल र भन्नु छ–
साथी हिजो मादल फुटेर तिमी रुँदा रुन सकिनँ
मादलबिना देउसी रोयो
असारे रोयो
सोरठी, घाटु, म्हेन्दो माया र नयाँ वर्षको शुभकामना रोयो
मेरो बा मलाई नाचगानमा जान दिनुहुन्थेन
मादल फुटेपछि तिम्रा बाले छेक्नुभएथ्यो तिम्रो बाटो।

यसरी बेलाबेला दैलैमा पाइला नछेकिएको भए त
बाटामा हिँड्नुको मजा कसरी थाहा हुन्थ्यो र ?

गाउँ पुगेँ,
तर गाउँका कोही बाँकी रहेनछन् गाउँमा
गाउँ रित्तिएछ, गाउँ एक्लिएछ
ढलेछ पीपल वृक्ष र सुकेछ धारापानी
कोइलीले पनि गाउन छोडेछ र नाच्न छोडेछ जुरेली
भत्किएको दमैचौतारामा उभिएर सोच्दैछु आज–

केही त भएकै हो,
म गाउँ आउन ढिलो भएको हो कि
गाउँ सहर जान छिटो भएको हो ? ■

nrlamsal@gmail.com

# नयाँ यक्षप्रश्न



◆ सीताराम 'प्रकाश'

'को ?', उसले सोध्यो
'मनुष्य', मैले भनेँ
'देश', उसले सोध्यो
'क्षुद्रताभन्दा पर', मैले भनेँ
'जाति', उसले सोध्यो
'अझ सुध्रेनौ', मैले भने
'कुन दलमा', उसले सोध्यो
'फेरि बाँड्न थाल्यो', मैले भने
'अनि धर्म नि', उसले सोध्यो
'जसले मानिसलाई मानिस हुन सिकाओस्'
'अधर्म नि', उसले फेरि सोध्यो
'सङ्कीर्णता', मैले भनेँ
'र पाप' !
'आवेशमा मनुष्य हुन बिर्सनु'
उसले सोधिरह्यो, मैले भनिरहेँ
प्रश्नोत्तर लामो थियो
ऊ नयाँ यक्ष थियो
म सत्यको खोजीमा व्यग्र
जनकुलको एक नयाँ कवि
अस्वतन्त्र प्रज्ञा,
अभिशप्त आस्था,
अस्वस्थ संस्कार,
अहङ्कारको अविच्छिन्न उत्तराधिकार,
खण्डित विश्वास
यावत् प्रश्न कुण्डमा जेलिएको कवि
कविलाई हुन त थाहा छ प्रश्न पछाडिको अन्तर्निहित वेदना
मैले पनि सोधेँ, सोध्नुका शक्ति र सीमाहरू
एक अदना कविका तिर्खाको प्रश्न छाड !
टुङ्गोमा पुग्न नसकिने  गनगन छाड !
ऋाफ्नो धरातलमा को खडा छ सही सही
सही प्रश्नका गलत उत्तर दिएर पनि अब्बल आएका छन् जो
अब सही उत्तर खोज्ने समय आएन र यक्ष महाराज ! ■

# ..र जरुरी छ तिम्रो नव-विद्रोह




कविता



◆ धर्मेन्द्र विह्वल

हो, अतीतसँग पैँचो लिई लिई
म वर्तमान जिउने प्रयत्न गरिरहेको छु
तर प्रश्नहरू ठडिन छाडेका छैनन्-
कुन जीवन ? कस्तो जीवन ?
सारहीन अस्तित्वको कुन अर्थ ?
कस्तो अर्थ ?
प्रश्नहरू अनेक छन्
संशय अनेक छन्
मेरो इतिहास
मौन रहनका लागि
बाध्य किन बनाइएको छ ?
अग्निपरीक्षाको पृष्ठभूमिको
खोजी किन गरिँदैन ?
जिज्ञासाहरूको हठात समन
विद्रोहको कारण बन्न सक्छ।
तर आश्चर्य
जनकको भूमिमा
अष्टाबक्रहरूको अशितत्वमाथि
शान्तिको नाममा पटक पटक
आक्रमण हुन्छ
जानकीका सपनाहरू
माटोमुनि छोपिन्छन/छोपिएको छ
र पटक पटक आयोजना हुन्छ अग्निपरीक्षाहरू।

ए तिमी सुन्दैछ्यौ नि ?
हो तिमीलाई नै भनिरहेको छु,
अग्निपरीक्षापश्चात् पनि
तिमीले विद्रोह गर्न किन सकिनौ ?
र किन, माटोमुनि पुरिएर बस्यौ ?
सायद यिनै प्रश्नको उत्तरको अभावमा
विद्रोह र समर्पणबीचको
भेद बुझ्न
म सधैँ असफल रहेँ।
सायद त्यसैले मेरा खुट्टा
सधैँ लरबराइरहेँ
विद्रोहको कुरा गर्दा
कथित संस्कारले मलाई
अगाडि बढ्नबाट रोक्छ,
तर कहिलेसम्म रोकिएला र ?

सुन्छ्यौ भने तिमी सुन-
म अतीतका आधारमा
वर्तमान जिउने
प्रयत्न त्यसबेलासम्म गरिरहन्छु
जबसम्म तिमी
नवविद्रोह गर्दिनौ ॥ ▪



# एउटा भ्रम र भ्रान्तिको अन्त्येष्टि गरिदेऊ




कविता



◆ ठाकुर बेलवासे

जीवनको एउटा विशाल कोलाहाल समाप्त भएको छ
कृपया शान्त बनिदेऊ आफन्तहरू
महाशून्यताको यात्राको तयारी गरिदेऊ प्रियजनहरू
बटो खाली गरिदेऊ साथीसङ्गती, छरछिमेकहरू

एउटा सानो क्रन्दनको सङ्गीत सिर्जना भएको छ
जीवनका लागि आँखामा हल्का आँसुको नृत्य गराऊ
मेरा मनका मान्छेहरू
जीवनको अन्तिम स्वरूप प्रकट भएको छ
अतितका लागि एक छिन्
मौनधारण गरिदेऊ
मेरा परिचितहरू



जीवनको घाउबाट
एउटा खिल बाहिर आएको छ
कृपया विस्तारै उड चराहरू
एक छिन्
नहल्ली ठाडो वन बटवृक्षहरू
महाशन्तिका लागि मलाई अन्तिम स्वीकृत देऊ
मैले मुटु साटेका परिवेशहरू
महायात्राका लागि मलिन मुस्कान छरिदेऊ
मैले रोपेका आँगनका फूलहरू

म अन्तिम गन्तव्यमा हिँडेका बेला
एक छिन् बार्दलीमा शान्त बसिदेऊ
गन्तव्यहीन यात्राका पाइलापाइला चुमेर
साँझ पर्खि बस्ने
कुकुर, बिरालो, परेवा या कुखुरा यस्तैयस्तै पशुपन्छीहरू

सबैले बुझ
प्रियसीसँगको प्रेमभन्दा गहिरो प्रेम
म मृत्युसँग गरिरहेको थिए
आफन्त, स्वजनलाई भन्दा
म मृत्युलाई नजिक राखिरहेको थिए

एउटा भ्रमको व्योम सिर्जना गरेर
मैले मृत्यु साधना गरिरहेको थिएँ
आज मोक्षयात्राका लागि पूर्ण सफल भएको छु

मेरो अन्तिम प्राप्ति मृत्यु
मेरो मुटुमा सुतेको छ
मधुर सङ्गीत बजाऊ
विस्तारै मूल ढोका खोल
र
आँखामा क्षणिक उजाड दृश्य
अनुहारमा केही क्षणको अन्योल
मनमा धमिलो विगत बोकेर
शान्तभावमा ताली बजाएर
एउटा भ्रम र भ्रान्तिको अन्त्येष्टि गरिदेऊ ■

**(कवि बेलवासेले मृत्यु विषयमा शृङ्खलाबद्ध कविता लेखिरहेका छन् । उनको यो १३औँ मृत्यु शृङ्खला कविता हो ।)**

कविता

# जब ठेकेदार हराउँछन्






◆ छविरमण सिलवाल

नदीमा
बनिरहेको पुल
बीच नदीमा पुगेर रोकिन्छन्,
वर्षौंवर्षसम्म,

धुलाम्मे र हिलाम्मे बनाएर
सडक रोकिन्छन्,
वर्षौंवर्षसम्म,

ढल, खानेपानी र
बिजुलीका नाममा खनिएका खाल्टामा
कैयौं गाडी, स्कुटर, मोटरसाइकल, साइकल र
पैदल यात्रीहरू खस्छन्,
बेपत्ता हुन्छन्,
कतिको त्यहीं चोला उठ्छ,
कैयौं शरीर अङ्गभङ्ग हुन्छन्,
कैयौं अपाङ्ग शरीर लिएर
जिएका छन् जीवनभर

यी सबैको जिम्मेवार को हुन्, कसले लिने ?
छन त पाइलैपिच्छे सरकार छन्,
सांसद छन्, अरूअरू कति छन् कति
राजनीतिक उद्योग खुबै चलेको छ
गल्ली गल्लीमा
भीआईपीका नाममा चिल्ला गाडी हुइँकिन्छन्
चिल्ला गाडीबाट
बिग्रेका सडक, फुटेको ढल र
चुहिएको पानी कसरी देख्नु ?

कालो सिसाभित्र रहेका काल मनहरू
पाँचवर्षे सङ्गिनी सुई लगाएर
गाउँबाट सहर पसिसकेका छन्
उजुरी कहींकतै लाग्दैन
उजुरीकर्ता थाक्छन्, कसैले सुन्दैन

एकाएक समाचारमा आउँछ
सडक अलपत्र छोडेर ठेकेदार बेपत्ता
पुल अलपत्र पारेर ठेकेदार बेपत्ता
समाचार सुन्दा हाँसो लाग्छ
आफैँले आफैँलाई प्रश्न गर्न मन लाग्छ
के सडक, पुल बनाउने ठेकेदार
अर्कै ग्रहका हुन् र ?
नहराउनुपर्ने ठेकेदार हराइसकेपछि
कहीं भेटिन सकेको छैन
अलपत्र परेका ती कामहरूमा,
अर्को ठेकेदारले टेन्डर हाल्दैछ रे ?
खासखुस कुरा सुनियो, चिया पसलमा
हराएको ठेकेदार जस्तै देखिने त्यो मान्छे
सिंहदरबारभित्र भर्खरै फुत्त छिरेको छ रे ?? ▪



कविता

# धुवाँको शरीर



◆ प्रकाश सिलवाल




जलिरहेको चितामाथिको आकाशमा
सकी नसकी उडिरहेको कालो र बाक्लो
धुवाँहरूले निर्मित शरीरको
सक्कली आयतन नाप्न
घाटको छेउमा
टोलाइरहेछन् मेरा आँखाहरू ।

एकैछिन् अघिसम्म
लासै भए पनि मान्छेरूपी
आवरणमा लमतन्न त्यो शरीर
भर्खरै...
धुवाँका हजारौं शरीर भएर
मलामीलाई देखाइरहेछ
आफ्नो नयाँ आकृति
रुवाइरहेछ धूमिल मान्छेका
प्रिय आफन्तहरू ।

हेर्दै नसुहाउने
बेनामे, बेछन्दे
प्रलयकारी मुस्लोको
त्यो उड्दै गरेको
अस्थिर शरीरका अङ्गहरूमा
म नियाल्न खोज्दैछु
त्यसका केही स्थिर अस्तुहरू ।



हेर्नुस् त,
हिजोसम्म संसार देख्ने
ती तेजिला आँखा
संसारले देख्ने उसका सुन्दर अनुहार
गन्ध र सुगन्ध टिप्ने उसको नाक
आवाजहरूलाई पहिचान गर्न सक्ने
शक्तिशाली तिनै कानहरूलाई
आगोका ज्वालाहरूले
क्षणभरमै सर्लक्कै निलिसकेको छ ।

के तपाईं भन्न सक्नुहुन्छ ?
जन्मिँदैदेखि उसका अभिभावकले
चाल पाउने गरेको उसको तौल वा उचाइ ?
हुर्कँदै गर्दाको जवानीको जोस ?
उसका कर्मशील समयका जीवनहरू ?
बुढ्यौली अनुभवका असीमित भारीहरू ?
ती सबै सबैलाई
काला कणहरूमा विलय गराएर
प्रलयकारी मुस्लो बनेर उडिरहेको यो धुवाँको
तौल कति होला ?

मेरा आँखाका
परेली नथाक्दै
चिताबाट हुर्हुर्ती निस्किएको
त्यो कालो छाया र लस्करहरूको गन्ती नहुँदै
यतै कतै हावामा
स्वात्तै हराइसकेछ
त्यो धुवाँरूपी शरीर
सपनाको चलचित्रझैँ ।

यता,
उस्तैगरी बगिरहेको
बागमतीको तरल शरीर मात्र देख्छु
रिँगटा लागेको टाउकोभित्रको
मेरो रित्तो मस्तिष्कलाई
नदीले एकाएक सोध्यो–
थाहा पाउनुभयो ?
त्यो हराइसकेको
धुवाँको शरीरले
फटाफट नापेर गयो नि
मलामीका
अनेकानेक सग्ला आकृतिहरू !

तर फेरि पनि
जलिरहेको चितामाथिको आकाशमा
सकी नसकी उडिरहेको कालो र बाक्लो
धुवाँहरूले निर्मित अस्थायी शरीरको
सक्कली आयतन नाप्न
घाटको छेउमा
टोलाइरहेछन् मेरा आँखाहरू । ■

# लुकेका पहाडहरूको प्रश्न






◆ गोपीकृष्ण ढुङ्गाना

सूर्य, संसारकै दृष्टिमा छ
तर छैनन् धरतीका कुनाकाप्चा
उही सूर्यको दृष्टिमा
सिंहदरबार आफूलाई सूर्य ठान्छ
र त देख्दैन कुनाकाप्चाहरू कहिल्यै !

युगौँ युगदेखि लुकेका पहाड
लुकिरहेका हजारौँ पहाडहरू
छेलिएकै छन् आजपर्यन्त
सिङ्गापुर बनाउने शासकहरूका दृष्टिमा ।

बाध्य छन्, विवश छन् उनीहरू
अँध्यारोमा सल्बलाउन
अभिशप्त छन् सुम्सुम्याउन
जूनको शीतल अनि घामको न्यानो
तर कहिले ? प्रश्न सधैँ अनुत्तरित बनिदिन्छ ।

न विकासको 'ब', न समृद्धिको 'स'
न बजेटको 'ब', न न्यायको 'न'
केही छैन, केही पाउँदैनन् कहिल्यै
निरक्षर लुकेका पहाडहरू
न गर्छन् माग, न दिन्छन् दबाब
न आन्दोलन थाहा छ, न छ धर्ना
सादगी ती पहाड सन्तोकी छन् सधैँ सधैँ ।

पर्खिए पञ्चायतपछिको प्रजातन्त्र पनि
लडे र ल्याए लोकतन्त्र, गरे गणतन्त्रमा गौरव
भएन तर पूरा देश समृद्ध बनाउने सपना

दसकौँदेखि गुम्सिएका उनीहरूमा
देखिरहेछु बिस्फोटको सम्भावना
त्यसैले सायद जुर्मुराउन थालेका छन्
र त सबक सिकाउँदैछन् अचेल
सत्ता सम्हाल्न जानेहरूलाई ।
बिर्सिएका छैनन् लुकेका पहाडहरूले
सियो बनेर आउने र फाली बनेर जानेहरूलाई
किनकि हेर्नुछैन अब तिनलाई हिटलरका अनुहार पनि ।
ओ यस देशका 'महाशय'हरू !
सुन, तिमीलाई सिंहदरबार छिराउने पहाडहरू
तिमीलाई संसद् अनि सत्तामा पुऱ्याउने पनि पहाडहरू
नबिर्स बरु न्याय देऊ, विकास अनि समृद्धि देऊ
नत्र बाल्नेछन् राँको । ■



# हामी अब बुख्याँचा



◆ सिर्जना दुवाल




हामीले बनाएका मेसिनहरू
आज हामीलाई मेसिन बनाउन तुल्य छ
हाम्रा हातहरू सुस्ताएको छ
आँखाहरू निदाएका छन्
दिमागहरू गुगलका निर्देशन भित्र मात्रै चल्न
साँधुरिएको छ ।

किताब, कपी र कलम
चाहिँदैन रे नानीहरूलाई
ग्याजेट र इन्टर्नेटको पहुँच भए पुग्ने भो
गुरु र गुरुकुलको संस्कार त
एकादेशको कथामा
अचम्मको संस्कार भएर रुमल्लिने भो ।

सिक्न गुरु किन चाहियो
पढ्न स्कुल जानै किन पर्‍यो
चाडपर्वमा भान्सा चिरिच्याट्टै
कोठामा सँगै तर एक्लाएक्लै
एक क्लिकमै तयारी खाना
भनेकै ठाउँमा पुग्ने भो

यो इन्टर्नेट युग
यहाँ सबै जान्ने बुझ्ने
न त ठूलालाई मान सम्मान
न त केही राम्रा उत्पादन
सबै कलाकार, सबै नौटङ्की
राम्राका त दिन साँच्चै सकिने भो ।

खोइ त मेहनत, खोइ त निरन्तरता
विचौलिया संस्कृतिले
सबै ध्वस्त भए
मेसिनलाई हामीले होइन अब
हामीलाई मेसिनले चलाउँदैछ ।

अब हामी मान्छे होइन
मेसिनधारी, नकाबधारी
सक्कली होइन नक्कली
अवगुणले भरिएका
सीप, साधना हराएका
ठिङ्ग उभिएको बुख्याँचा हुँदैछौँ । ▪



# दुईवटैलाई जोडेर एउटै ‘मुनामदन’ पारौँ




विचार



◆ दधिराज सुवेदी



देवकोटाले आफ्नो ४४ पेजको `मुनामदन'को प्रारम्भ बैँसालु मुनालाई घरमा छाडेर धन कमाउन परदेश अर्थात् भोट जान लागेको प्रसङ्गबाट अगाडि बढाएका छन् भने रिजालले आफ्नो `मुना र मदन'मा मुनाका बाबुआमा चित्लाङबाट थानकोट बसाइँ जाने र छोरी मुनाको जन्मको प्रसङ्गदेखि प्रारम्भ गरेका छन् ।



वि.सं. १९९२ मा महाकवि लक्ष्मीप्रसाद देवकोटाले ‘मुनामदन’ खण्डकाव्य लेखेर नेपाली साहित्यलाई धन्य तुल्याए र आफूलाई पनि अमर बनाए। ठीक त्यसको ५२ वर्षपछि अर्थात् २०४४ सालमा जननीप्रसाद रिजालले विराटनगरबाट त्यस्तै शिल्प र शैलीमा त्यत्रै ‘मुना र मदन’ लेखेर लोकलाई प्रदान गरे। त्यसबेला रिजालको मुना र मदनले लोकमा खासै प्रभाव पारेजस्तो लागेन। किनभने म २०२३ सालदेखि निरन्तर विराटनगरमा बसोबास गर्दै आएको र उनका साहित्यिक सन्ततिहरूसँग पटक पटक भेटघाट र साहित्यिक चिन्तन–मनन गर्दा पनि जननीप्रसाद र उनको मुना र मदनको सन्दर्भ कहिल्यै चर्चामा आएन। लेखकको निधन भएको १७ वर्षपछि प्रकाशक सरलादेवी रिजाल, एकप्रति रु. ५/– र प्रकाशकमा भोमी प्रिन्टिङ प्रेस डिल्लीबजार, काठमाडौँ लेखिएको ४० पेजको मुना र मदन मेरै प्रयत्नले स्थापना भएको विराटनगरको सुविधा सम्पन्न ‘परोपकार सार्वजनिक पुस्तकालय’मा यसै वर्ष आइपुग्यो र मैले सर्वप्रथम यो कृति पढ्ने अवसर पाएँ।

देवकोटाले आफ्नो ४४ पेजको ‘मुनामदन’को प्रारम्भ बैँसालु मुनालाई घरमा छाडेर धन कमाउन परदेश अर्थात् भोट जान लागेको प्रसङ्गबाट अगाडि बढाएका छन् भने रिजालले आफ्नो ‘मुना र मदन’मा मुनाका बाबुआमा चित्लाङबाट थानकोट बसाइँ जाने र छोरी मुनाको जन्मको प्रसङ्गदेखि प्रारम्भ गरेका छन्। अर्थात् रिजाले आफ्नो मुना र मदनमा उनीहरूको जन्म, बाल्यकाल, परिवेश र विवाह भएसम्मका कुरा लेखेका छन्। रिजालको ठम्याइमा उनको कृति पूर्वार्द्ध र देवकोटाको उत्तरार्द्ध हो। उनले आफ्ना दुई शब्दमा लेखेका छन्–

“यो पैलो भाग मदन मुना सपना देखेर
लेखेको मैले स्वर्गीय महाकविलाई सोधेर” भन्दै रिजालले मुना–मदनको पहिलो भाग लेखेका छन् र देवकोटाकोलाई दोस्रो भाग ठहऱ्याएका छन्। भाषा, शैली, लय आदिको अनुसरण देवकोटाकै गरिएको छ। रिजाल लेख्छन्–

“नेपाली जन नेपाली मन नेपाली डाँडामा
गाउँदै हिँड्छन् नेपाली गीत सुसेली पारामा”

देवकोटा लेख्छन् –

“नेपाली गेडा, नेपाली दाना, नेपाली रसले
भिजेको मीठो रसिलो गीत नेपाली कसले”

यी दुवै उद्धरणका झ्याउरे लयभित्र नेपाल, नेपाली र नेपालीपनको बोध हुन्छ। यी पङ्क्तिहरू पढ्दा नेपाली मौलिकताको अनुभूति हुन्छ। यहाँ शब्द–ब्रह्मको उपस्थिति पाइन्छ। त्यसैले म वेदको अन्तिम वाक्य ‘अहम् ब्रह्मास्मि’लाई आत्मसात् गर्न पुग्दछु। यी दुवै उद्धरणमा राष्ट्रियता र मानवताको अनुभूति गर्न सकिन्छ। रिजाल र देवकोटाका दुवै ग्रन्थमा शिल्पसौन्दर्य, जीवन र जगत्को अनुभूति, मानवताको मर्म, निम्न वर्गीय नेपाली जनताले बेहोर्नुपरेको विपन्नता एवम् नेपाली संस्कार र संस्कृतिको चोखोपनको व्यापक प्रस्तुति पाइन्छ। रिजालका ‘मुना र मदन’ को सङ्क्षिप्त कथासार यस्तो रहेको छ–

काठमाडौँ उपत्यकाको पर भित्तालाई आजभोलि पनि 'काँठ' भन्ने चलन छ। त्यसै काँठको चित्लाङ भन्ने ठाउँमा चियाचमेनाको सानो गाउँले होटेल चलाएर गुजारा गर्दै आएका मुनाका बुबाआमा थानकोट सरेर त्यस्तै पसल गर्न थाल्छन् । एक दिन राति मुनाकी आमालाई सुत्केरी बेथाले च्याप्छ र बिहान बेहोस अवस्थामा नजिकैको माइतीघर पुऱ्याइन्छ र त्यहीँ मुनाको जन्म हुन्छ । सुत्केरी मुनाकी आमा ६ हप्तासम्म माइतमा बसेर शरीर तयार भएपछि छोरी च्यापेर पसल चलाउन फर्किन्छिन् । मुना बढ्दै गइन् । एकान्तको पसलमा मुनासँग खेल्ने केटाकेटी साथी नभएकाले मुनालाई मावलमा लगेर राखिन्छ । मुना वरिपरिका केटाकेटीसँग खेल्दै रमाइला दिन बिताउन थाल्छिन् । यस्तै परिस्थितिमा मुनाका बुबाआमाले चलाउँदै गरेको पसल लुटेराहरूले लुटेर पसलसमेत जलाइदिन्छन् । मुनाका आमाबुबा केही दिन माइतमा शरण दिएर डेरा खोज्दै कालिमाटी आइपुग्छन् । त्यहाँ आश्रय लिएको झुप्रो टुहुरो मदन र उसकी आमाको हुन्छ। त्यसै झुप्रोमा मदन र मुनाको बालक्रीडा अगाडि बढ्छ र प्रेमको मुना लहलहाउँछ । त्यसैबेला दमको रोगी मुनाका बाबुको मृत्यु हुन्छ र काकी आमाले मुना र उसकी आमालाई शरण दिन्छिन् ।







मुना पूर्णिमाको जूनजस्तै रूपलावण्य र बैँसले परिपूर्ण भइन् । त्यसैबेला मुनाकी आमाको पनि मृत्यु हुन्छ र मुनाका मामाले दोहोरो खर्च व्यहोर्ने केटो खोजी मुनाको बिहे गरिदिने अठोट गरे पनि मुना मान्दिन । मदनसँगै विवाह गर्ने प्रस्ताव अगाडि बढाउँछे । मामा मान्दैन र भन्छ–

"गरिबको छोरो मदन कठै झुप्राको बास छ

जागिर छैन, धन पनि छैन के गरी पाल्दछ" भन्दै अर्को केटो खोजेर विवाहको तयारीमा लाग्छ । मामाको जिद्दी देखेर मुना भन्छे–

"मदनबाहेक गर्दिन बिहे सात् जन्म पर्खन्छु

अरूलाई अब नदेऊ मामा विष खाई मर्दछु"

मुनालाई मदनको चिठी आयो । मुनाको अनुपस्थितिमा टीकोटालो भयो । काकीले मामाले खोजेको केटोलाई यथार्थबोध गराएर बेहुलो हुनबाट रोकिन् । त्यसैबेला मदन भेष बदलेर बेहुलो भएर आयो र बेहुली मुनालाई लिएर गयो । काकीको यो तारतम्य मामाले पनि चाल पाएनन् । मुना र मदनको जित भयो । यस कृतिको अन्तिममा कविले लेखेका छन्–

"खपेर दुःख मदन–मुना झरी र बतास

मिलायो जोडी दैवले भन्छ जननीप्रसाद"

यसरी नै महाकवि देवकोटाले पनि आफ्नो 'मुनामदन'को अन्त्य यसरी गरेका थिए–

"मनको बत्ती तनको बली स्वर्ग छ प्रसाद

कर्ममै पूज ईश्वर भन्छ यो लक्ष्मीप्रसाद"

कवि रिजाल देवकोटाको काव्यकलाको अर्थात् १९९२ मा लेखिएको 'मुनामदन'को अनुकरण गर्न ज्यादै सिपालु देखिएका छन् । त्यसैले उनी मुनामदनको पूर्वाद्ध लेख्न सफल भए ।

अन्त्यमा प्रस्तुत कृतिका लेखक जननीप्रसाद रिजाल (१९७२–२०६२) महाकवि देवकोटाका समकालीन ठहरिए । यिनले 'जिन्दगीका पानाहरू' (कविता सङ्ग्रह–२०६६) र 'इच्छापत्र' पनि लेखेको पाइन्छ । यिनले देवकोटाको 'मुनामदन' धेरै पढे, कण्ठ पारे र नै हुबहु अनुकरण गरेर २०४४ सालमा 'मुना र मदन' खण्डकाव्य लेखेर छपाए । आफूले लेखेको 'मुना र मदन'लाई पूर्वार्द्ध र देवकोटाले लेखेको 'मुनामदन'लाई उत्तरार्द्ध ठहऱ्याए । भाषा, शैली, लय, गेडा, दाना, विषय, विचार, नायक–नायिका र प्रस्तुति आदि विचार गरेर हेर्दा एउटै कृतिको दुई भाग देखिन आयो । यस्तो तारतम्य मिल्नुलाई गजबको संयोग मान्नुपर्छ ।

अब जननीप्रसाद रिजालका सुपुत्र साहित्यकार एवं गीतकार डा. भोलाप्रसाद रिजालले महाकवि लक्ष्मीप्रसाद देवकोटाका उत्तराधिकारीसँग सहमति लिएर दुवै कृतिलाई एकै ठाउँमा 'मुनामदन'का नामले छपाएर पूर्वार्द्धका लेखक जननीप्रसाद र उत्तरार्द्धका लेखक लक्ष्मीप्रसाद भनेर प्रष्ट पारिदिनुपर्छ । यसो गरियो भने दुवै लेखकप्रति अन्याय हुँदैन र पाठकप्रति पूर्ण न्याय भएको ठहरिने छ ।

तसर्थ यो ऐतिहासिक कार्य अविलम्ब सम्पन्न गरेर महाकवि देवकोटा, आफ्ना पिता जननीप्रसाद रिजाल हामी पाठक र नेपाली वाङ्मयप्रति न्याय गरिदिन डा. भोलाप्रसाद रिजालले अग्रसरता देखाइदिए उचित हुने थियो ।

**विराटनगर**

कृति परिचय

# समय साक्षी

■ जुनारबाबु बस्नेत

जीवनका भोगाइ ज्ञान र अनुभवका पत्रैपत्र हुन् । मानिसले ती भोगाइलाई आफूमै सीमित राख्दा ऊसँगै ती विलिन हुन्छन् । हाम्रा पुर्खाका कतिपय अमूल्य ज्ञान र अनुभव त्यसैगरी पुर्खासँगै विलन भए । यात्रा आफैँमा अनुभव र भोगाइ हो । त्यसको सङ्ग्रह र सूत्रीकरण पत्रहरू अरूहरूका निम्ति मीठो ज्ञान र आनन्दको साथी बन्छन् अनि आफ्नै निम्ति विगतको संस्थागत सम्झना । त्यसैले यात्रा र अनुभवलाई मानिसले कृतिमा रूपान्तरण गर्ने गर्छन् । यात्रानुभव साहित्यको समकालीन संसारमा विस्तारित विधाका रूपमा आयाम बढाउँदै छ । नेपाली साहित्यमा त यो विधाको क्षितिज हिजोभन्दा झनै फराकिलो हुँदै छ । पत्रकार एवं साहित्यकार बबिता बस्नेतको समय साक्षी यात्रा अनुभव र भोगाइ संस्मरणको नवीनतम कृति पाठक सामु आएको छ ।

विषयसूची नै यात्रा क्रम राखिएको यो कृतिमा झन्डै एक सय पुऱ्याउन खोजिएका ससाना यात्रानुभव समेटिएको छ । पत्रकारितासँगै सामाजिक अभियन्ताका रूपमा विश्वका दर्जनौँ देश र सहरका कथा र अनुभव छन् यहाँ । अनेकौँ सम्मेलनमा सहभागिताले बौद्धिक पाठकलाई आकर्षित गर्छ । बैठकका अनुभव छन् अनि सुन्दर दृश्यका मखमली वर्णन । यीलगायत अनेकौँ अनुभवका पत्र छन् समय साक्षीमा ।

पुस्तक सुरु हुन्छ, पासपोर्टको कथाबाट । देशबाहिर जान चाहिने पासपोर्ट अर्थात् राहदानीबाटै उहाँले समय साक्षीको श्रीगणेश गर्नुभएको छ । साढे दुई दशकअघि महिलाको निम्ति राहदानी सहज कुरा थिएन । अभिभावकले सिफारिस गरेपछि मात्र पाइन्थ्यो । अभिभावक गाउँमा भएकालाई यो सहज थिएन र अनेक गरेर लिनुभयो राहदानी । त्यो सङ्घर्ष नै थियो । उहाँ जस्ताहरूको सङ्घर्षकै प्रतिफल हुनुपर्छ, अहिले महिलालाई राहदानी लिन अभिभावकले नै सिफारिस अनिवार्य छैन । त्यो विगत भोगाइ समग्रमा आन्दोलन थियो । नयाँ पुस्ताका महिला त्यो पीडामा छैनन् तर पुरुष, महिला वा अरू कसैलाई राहदानी लिने झन्झटिलो तनाव अहिले पनि कम छैन । सामान्य सेवालाई राज्यले सहजीकरण गर्न सकेको छैन ।

पासपोर्टको कथाबाट सुरु भएको संस्मरण भारतीय जनसञ्चार संस्थान (आईआईएमसी)को प्रशिक्षण हुँदै अगाडि बढ्छ । त्यस क्रममा अमृता प्रितमसँगको भेटले अर्को शीर्षक दिएको छ । त्यही क्रममा हरिद्वारमा स्व. काकासँगको संवाद, कहाँ राजपरिवारको नातेदार हुनु ? राजपरिवारसँगको सम्बन्ध, राजकीय भ्रमणमा जाँदा आदि शीर्षकले उहाँका व्यावसायिक जीवनमा आरम्भिक दिनहरूलाई झल्काएको छ । कृतिका आरम्भमा देश र विदेशका अनुभव मिसिएका छन् । राजा ज्ञानेन्द्रको शासनकाल र त्यसपछिका अनुभव छन् । त्यस क्रममा राजासँग वन टु वन भेटले बेग्लै महत्त्व राख्छ । भारत भ्रमणमा जाँदा युवराज आएनन्को दोहोरो अर्थ राखेको




रमाइलो पक्ष छ ।

उहाँको सामाजिक अभियन्ताको परिवेश भने फिलिपिन्समा चाँदनी जोशीसितको भेटपछि अझ चम्किलो हुन्छ । यो अलग्गै शीर्षकसँगै विदेशमा तालिम लिएर फर्कंदा रेडियो नेपालको घटना र विचार कार्यक्रमबाट हात धुनु परेको भोगाइ छ । पर्यवेक्षकलाई कसरी भेट् नुहुन्छ ? ले श्रोताको चाखलाई विम्बित गर्छ । सिङ्गापुरमा देखियो सपनामा देखेको ठाउँ, सार्सले जुराएको चीन भ्रमणलगायत चीनका अनेकौँ अनुभवले केही शीर्षक लिएका छन् । भ्रमणका क्रममा नेपाली सहकर्मीहरूको पात्र र चरित्र, अनुभव रमाइला छन् । मसिना कुरा पनि मिलाएर संस्मरणले इतिहास निर्माण गरेको देखिन्छ ।

पहिलो पल्ट संयुक्त राष्ट्र सङ्घमा कृतिको बेग्लै अनुभवको पाटो हो । न्युयोर्कका रेस्टुरेन्टमा पोखिएका फ्रस्ट्रेसनले प्रवासी नेपाली पीडा बोलेको छ । अमेरिकामा पनि यस्तो हुन्छ र अनि ट्रेनमा भएको सकसले विकसित देशमा प्रविधि र विद्युत्बिना कसरी जनजीवन कठिन हुन्छ ? भन्ने देखिएको छ । यसै सेरोफेरोमा अमेरिकी अनुभवले धेरैवटा शीर्षकहरू लिएका छन् । अनेक पटक अमेरिका पुग्दाका निजी र सार्वजनिक जीवनका अनभुव छन् । पेन्टागनको भ्रमणदेखि 'लबी विलिसेसले, टिप्स जङ्गबहादुरले ?' शीर्षकले इतिहासलाई रमाइलो प्रस्तुति दिइएको छ ।

यात्रानुभवकै क्रममा अफ्रिकी मुलुकहरूका भ्रमणका अनुभव कठिन र बेग्लै छन् । तिनमा मानव जातिको पीडा र शोषणसमेत अभिव्यक्त छ । यात्राका क्रममा विमानले सुटकेस छुटाएको असजिलोदेखि यात्रा सुरक्षा, बेग्लै

संस्कृति र वेशभूषाले पारेका प्रभाव कृतिमा जोडिएका छन् ।

'दिल्ली दूर नही' भनेझैँ पुस्तकमा भारतीय सहरका अनुभव ठाउँठाउँमा छन् तर अलग अलग विषयवस्तुले मिठास थपेको छ । माओवादी द्वन्द्व तथा आसपासका बेला भारतमा भएका अनेक बैठक, सभासम्मेलन सहभागिताका परिघटना छन् र तीमध्ये एकमा उहाँलाई किन बोलाइयो ? भन्ने रोचक प्रश्न र उत्तरका अनभुवले नेपाली राजनीतिक पात्रको मनोवृत्ति झल्किएको छ । त्यसैगरी श्रीलङ्का, बङ्गालादेश, पाकिस्तान लगायतका अनेक सहरमा भएका बैठक, सभासम्मेलनका अनुभवले राजनीति, संस्कृति र समाज अध्ययनलाई समृद्ध बनाएको छ ।

पुस्तकमा एसिया र युरोपेली देशका विकासका अनेक चरणका समृद्धका आयामहरू समेटिएका छन् । तर देशको समृद्धि ठुल्ठूला भवन र धनी मानिसमा मात्र केन्द्रित हुँदैनन् । सामान्य सुविधाले समेत देशको संस्कृतिको पहिचान दिइरहेको हुन्छ । त्यसै क्रममा कोरियाको एउटा अनुभवमा भनिएको छ–

कोरियाको राजधानी सियोलस्थित इन्चेन एयरपोर्टमा झरेपछि इमिग्रेसनतर्फ लाग्दै गर्दा इमिग्रेसन फर्महरू राखिएको ठाउँमा आँखा पऱ्यो । फर्मसँगै डोरीमा बाँधेर विभिन्न पावरका चस्मा पनि राखिएका थिए । सादा सेतो रङका ती चस्माका पावर माइनस, प्लस के हुन् र कति हुन् भन्ने पनि स्पष्ट खुलाइएको थियो । प्रायः अन्य मुलुकमा फर्मसँगै लेख्नका लागि डोरीमा बाँधेर कलमचाहिँ राखिएका हुन्छन् । हाम्रो मुलुकमा चाहिँ त्यही कलम पनि राखिएको हुँदैन... (पृष्ठ ९२) ।

युरोप अनेक सहरका अनुभवसँगै नेपालको अन्तर ाष्ट्रिय प्रतिनिधित्वका अनुभवका अनेक विस्तारित आयामले पुस्तकलाई भरिलो बनाएको छ । युरोमा पुगेका नेपालीको कथा नेपालमा जति नराम्रो भयो हामीलाई त्यति राम्रो शीर्षकसमेत छ । त्यसमा बेल्जियमको ब्रसेल्समा रहेका नेपाली शरणार्थीको विषय मार्मिक छ । अनेक बहानाले युरोप पुगेका नेपाली शरणार्थी बन्ने गरेका छन् । खास गरी माओवादी द्वन्द्वका बेला बेल्जियममा रहेका शरणार्थी क्याम्पमा जाडोका बेला लगाउने सामान्य ज्याकेटबिना नै नेपाली बसेका थिए ।

अन्त्यमा यात्राका पश्चातापहरूमा २० भाटले दिएको दुःख, त्यो भोको अनुहार आँखालगायत मन हल्का बनाउन लेखिएको विषयवस्तुजस्तो देखिन्छ । पुस्तका कतिपय शीर्षक अति सङ्क्षिप्त छन्, तिनलाई केही विस्तार र खँदिलो बनाउन सकिने भए पनि लामो नहोस् भन्ने लेखकीय मनशाय देखिन्छ ।

विषयवस्तुमा व्यक्ति, सहर, व्यवहार आदिले प्रशस्त ठाउँ पाएका छन् । त्यो राम्रो हो तर सँगसँगै अन्तर्राष्ट्रिय सभासम्मेलन तथा बैठकमा नेपाली प्रतिनिधित्व गरेको हिसाबले नेपालमा तिनको प्रभाव समीक्षासमेत भइदिएको भए पाठकले खुराकसमेत पाउने थिए । हुन त थप कृतिहरूमा त्यस्तो समीक्षासमेत आउन सक्ने ठाउँ छ । भाषा सरल छ तर कतिपय नेपालीकृत गर्न सक्ने विषयहरू अङ्ग्रेजीमा देखिएको छन् । ▪

कृति : समय साक्षी
विधा : यात्रा संस्मरण
लेखक : बबिता बस्नेत
प्रकाशक : बुक हिल
प्रकाशन : २०७९
पृष्ठ : ११६
मूल्य : रु. ५००।–

कविता

# प्रेम गङ्गा



◆ पूर्णिमा प्रतिविम्ब

वर्तमान हामी
बगे पनि, जमे पनि
बाफिए पनि, वर्षिए पनि
हाम्रो अस्तित्व एउटै हो !
तिमी पनि पानी, म पनि पानी

बाफ बनेर उड्दै गर्दा आकाशमा
कहिलेकाहीँ सुटुक्क भेटौँला
झरौँला सँगसँगै
सिञ्चित गरेर मायाका बस्तीहरूलाई
चुमेर सुक्खा बगरहरूलाई
अनि बगौँला आफ्नो–आफ्नै दिशातर्फ

ठिकै छ, तिमी मेची बनेर बग्नु
म महाकाली बनेर बगौँला
घुम्दै–फिर्दै भविष्यमा
जसरी सुरु भएथ्यो, मायाको भूल
त्यसैगरी दुवै मिलेर
बनाउँला एउटा प्रेम गङ्गा
तिमी पनि पानी, म पनि पानी । ▪

# शिर उचालिएका कविता

■ तुलसीहरि कोइराला

रोल्पा !
ओ रोल्पा !
केही त राख्नु थियो चिनो ।
युद्धका घाइतेले घाउ सिलाएका शय्याहरू
अथवा तिनका रगतले लत्पतिएका कम्ब्याटहरू, हतियारहरू
या शहीद भएका वीरहरूको नाम लेखेको समाधि
गोठमै जलेका गाईवस्तुको किलोदाम्लो
सधैँसधैँ त कोही पनि सम्झिरहने यन्त्र हुन सक्दैन
त्यो अभिलेख दिनु थियो
इतिहास सधैँ यादमा आइरहन सक्दैन
इतिहास बताइदिन कोही सदैव जीवित रहँदैन
रोल्पा ! केही त राख्नु थियो चिनो ।

समकालीन पुस्तामा अलग्गै छवि बनाएकी कवयित्री ज्योति जङ्गलको पछिल्लो कवितासङ्ग्रह 'आधा शिर उचालेर' यतिबेला साहित्यिक वृत्तमा चर्चामा रहेको छ । 'रोल्पा ! ओ रोल्पा !' शीर्षकको कविताको प्रस्तुत अंशले दसवर्षे त्रासदीपूर्ण समयलाई सम्झाउँछन् ।

ज्योतिको पछिल्लो कविताकृति 'आधा शिर उचालेर'भित्र मूलतः नारी केन्द्रित विषय–सन्दर्भले नै महत्त्व पाएका देखिन्छ । स्त्री–पुरुष एक रथका दुई पाङ्ग्रा, नारी–पुरुष बराबरी, आधा आकास, जस्ता शब्दले पुकारिए पनि व्यवहारमा अझै पनि यस्तो नदेखिएको कवयित्रीको ठहर छ । 'घाँस काटिरहेकी ऊ' शीर्षकको कवितामा प्रयोग भएको लाइन 'आधा शिर उचालेर'बाट सिङ्गो पुस्तकको नामकरण गरिएको देखिन्छ । जम्मा ४३ वटा कवितासङ्गृहीत यस कृतिलाई नारीप्रधान कविताकृति भन्दा पनि हुने देखिन्छ । पहिलो कविता 'मेरा प्रिय'मा उनले श्रीमान्‌ले श्रीमतीलाई गर्ने व्यवहारप्रति कटाक्ष गरेकी छिन् । जीवित छँदा उसका दुःखमा साथ नदिने, उसको खुसीको मुहान बन्द गरिदिने तर मरेपछि उसको गुणगान र अभाव विलाप गाउँदै शोककाव्य लेख्ने साहित्यिकवृत्तको प्रवृत्तिप्रति उछित्तो काढेकी छिन् । घरलाई धेरै स्रष्टाले आआफ्नो दृष्टिले हेरेका छन्, लेखेका छन् । ज्योतिले पनि घरलाई कैदखानादेखि जीवनको सर्वस्वसम्म पनि भनेकी छिन् ।

पहाड, मधेश, जन्मस्थल, समुद्र, आकाश, चन्द्रमा, माटो, भूकम्प, सुख–दुःख, चाडपर्व, आफ्नाहरू, अग्रजहरू, सबै विषय र सन्दर्भहरू कवितामा अटाएका छन् । बाढीको वितण्डालाई सर्लक्क उतारेकी छिन्, जुन पढ्दा पाठक मन भक्कानिन्छ । विदेश जानेका परिवारका पीडा, छाउगोठको परिदृश्य कवितामा जुन रूपले बिम्बित छ, त्यसले पाठकको मन–मस्तिष्कलाई पक्कै पनि बिथोल्ने छ ।

कृतिका आधाजसो कवितामा लैङ्गिक चेतना र विद्रोही आवाज मुखरित भएको पाइन्छ । लैङ्गिक विभेदको विरुद्धमा नारीप्रधान भाव र शैलीका कविता भएर पनि शालीन र लालित्यपूर्ण बुनोटका कारण ज्योतिलाई कुनै किसिमको 'जेन्डर बायस'को आरोप लाग्ने अवस्था देखिँदैन ।




जीवनसँगको प्रेम गाढा छ तर बिथोलिएको समय र परिस्थितिले गाँजेर थिलथिलो पारेको छ जिन्दगीलाई । समय र सङ्घर्षको मल्हम लगाएर आफैँ थिगार्नुपर्छ भन्ने साहस कविले अनेक भावमा व्यक्त गरेको पाइन्छ ।

आधा शिर उचाल्नु भनेको परिस्थिति र परिदृश्यप्रति सचेत दृष्टि पुऱ्याउन आग्रह गरिएको पनि हो । हिजोको पस्थितिबाट मुक्त भएर पनि वर्तमानसँग त पौँठेजोरी खेल्नु नै छ । यसका लागि अग्रसर हुन ज्योतिका कवितामा तमाम नारीलाई आग्रह गरिएको छ । उनी देशप्रेमको ढोङ रच्ने, मायाको लोलोपोतो गर्ने, नाता–सम्बन्धको ख्याल नगर्ने सरमछाडा प्रतिनिधि पात्र बादशाहको ओठ सिलाउने साहस गर्न आह्वान गर्छिन् । 'ओ आइमाई ! शीर्षकको कवितामा त पुरुषलाई कायलनामासमेत गराएकी छिन् । यद्यपि उनले नारी स्वयंलाई पनि सचेत रहन र स्वधर्म पालनमा नचुक्न सम्झाएकी छिन् । सङ्ग्रहको अन्तिम कविता 'साँझमा नआउनू मेरो घर'मा उनले यस्तो भाव पस्किएकी छिन् ।

ज्योति जङ्गलको प्रस्तुत कविता सङ्ग्रहले उनलाई उम्दा कविको रूपमा उभिल्याएको छ । ■

कृति : आधा शिर उचालेर (कविता सङ्ग्रह)
लेखक : ज्योति जङ्गल
प्रकाशक : साङ्ग्रिला मिडिया ग्रुप प्रालि
प्रकाशन : २०७९ कात्तिक
पृष्ठ : ११०
मूल्य : रु. २५०।–

# नियात्रा र संस्मरण मिश्रित सुन्दर फूल

■ पुष्पराज जोशी

उर्वर विधा नियात्राको लहरमा एउटा अर्को रोचक र ज्ञानवर्द्धक नियात्रा र संस्मरणको सङ्ग्रह थपिएको छ– विजय चालिसेको 'मरुभूमिको फूल'। मूलतः कथाकारको रूपमा सुपरिचित चालिसेका यसअघि विविध विषयका छ दर्जन पुस्तक प्रकाशित छन्।

कृतिको पहिलो खण्डमा नियात्रा र दोस्रो खण्डमा संस्मरण छन्। अवसर र साधन–सामर्थ्यले भ्याएसम्म घुम्नु, लेख्नु र विगतका सम्झनाहरूलाई सुरक्षित राख्ने प्रयास गर्नु मेरो रुचिको विषय हो भन्ने लेखकको भनाइलाई मनन गर्दा साँच्चै नै उहाँमा यो रुचि अद्भूत देखिन्छ। कृतिको पहिलो नियात्रा 'श्रीभावर लेकमा मृत्युस्पर्श'ले यसको पुष्टि पनि गर्छ। सुदूरपश्चिम जिल्लाका हिमाच्छादित तारेभीरको यात्रा कम रोमाञ्चक छैन। हिउँमा कहीँ चार हातखुट्टा र कहीँ बुट्यान समात्दै ज्यान जोगाएको प्रसङ्ग आउँदा पाठकको मन नै सिरिङ्ग हुन्छ। २८ वर्षअघि २८ वर्षकै उमेरमा गरिएको यो रोमाञ्चक यात्रासँगै त्यो बेलाको बझाङी समाजको सम्भ्रान्त दम्भ पनि लेखकले उदाङ्गो पारिदिनु भएको छ। यसैगरी राष्ट्रिय विकास सेवामा डोटी गएर डोटेली समाजको आर्थिक–सामाजिक तथा लोकसंस्कृति र साहित्यबारे मिहिन ढङ्गले अध्ययन गर्न पाएको प्रसङ्ग 'मेरो सम्झनामा डोटी' नियात्रामा रहेको छ।

पुष्पलाल स्मृति पार्कमा निर्माण गरिने गोपालप्रसाद रिमालको सालिक शिलान्यासका साथै कथाकार नवराज शर्मा तिमिल्सिनाको कथासङ्ग्रह 'मट्याइलो सुगन्ध'को लोकार्पणमा हेटौँडा गएको वृत्तान्त 'हेटौँडामा क्रान्तिद्रष्टाको सालिक'मा छ। यस्तै मुक्तिनाथ जाँदा श्रीमतीलाई लेक लागेर हावाईजहाजबाट फर्कनुपरेको तर आफू सवार हवाईजहाजको कम्पनीले पैसा तिरेपछि पनि टिकट नदिएर देखाएको गैरजिम्मेवारीको चरम रूप 'टिकटबिनाको रोमाञ्चक यात्रा'मा प्रकट भएको छ। 'चितवनको चिसो रात'मा पत्रकारिताको तालिम कार्यक्रम उद्घाटनमा प्रमुख अतिथिका रूपमा चितवन पुग्दा आयोजकको व्यवहारले भोग्नुपरेको दुःखका साथै जाडोले थरथर काम्नुपरेको विवशता छ।

कृतिका तीनवटा विदेश यात्रामध्ये 'मरुभूमिको फूल' नियात्रा माउन्ट अबुको यात्रामा आधारित छ। भारतको राजस्थान प्रान्तमा पर्ने माउन्ट अबुका तलाउ, मन्दिर, उद्यान, चट्टान निर्मित संरचना आकर्षणका केन्द्र बनेका छन्। लाहोरको पार्क, उद्यान हेर्दा नेपालको धुले रत्नपार्क झल्झली सम्झिनुभएको छ– 'म लाहुरेको लाहोर यात्रा'मार्फत। यस्तै 'शान्तिगीत गाइरहेछ हिरोसिमा'मार्फत युद्धप्रति घृणा र र शान्तिप्रति प्रेमभाव जगाउन हिरोसिमा शान्तिस्मृति सङ्ग्रहालयले विश्वभरि याचना गरिरहेको छ। यी नियात्राहरूमा लेखकले पाठकलाई सँगै डोर्‍याएर आफू पुगेको ठाउँ शब्दको माध्यमद्वारा घुमाउन सफल हुनु भएको छ।




कृतिको संस्मरण खण्डमा भने बाह्रवटा संस्मरण छन्। 'सम्झनाको तरेलीमा तीन दशकीय कथायात्रा', 'गुरु गोरखापत्रको गौरव', 'मेरो चित्रपटमा बौद्ध', 'बिदाइ जीवनको लामो कालखण्डसँग' आदि रहेका छन्। यी संस्मरणहरूमा लेखकको बालापन र स्कुले जीवन बितेको काठमाडौँको आरुबारी र चाबहिल क्षेत्रको मीठो/तीतो दुवै सम्झना छ। यस्तै कथा लेख्न प्रेरणा दिने व्यक्ति, घटना र प्रसङ्गको चर्चा विशद रूपमा गरिएको छ। जीवनको ऊर्जाशील समय बिताएको स्थल गोरखापत्र संस्थान र पशुपति क्याम्पससँगको सम्बन्ध भावनात्मक रूपमै प्रकट भएको छ। बहत्तर सालको भूकम्पको त्रासदीलाई पनि मिहिन ढङ्गले उतारिएको छ। संस्मरणको नाममा झिँजो लाग्ने गन्थन कहीँ कतै छैन। बरु तत्कालीन समयको सामाजिक, आर्थिक, भौगोलिक, सांस्कृतिक पक्षकाबारेमा यी संस्मरणले जानकारी दिन्छन्।

नियात्रा तथा संस्मरण दुवैमा देशको राजनीतिक विसङ्गति, प्रशासनिक विकृति, सामाजिक पछौटेपन, अन्धविश्वास, छुवाछूत, योजनाविहीन सहरीकरण आदिमाथि प्रहार छ। भाषा, शैली रोचक र आकर्षक छन्। त्यसैले यो कृति नियात्रा र संस्मरण मिश्रित सुन्दर फूलका रूपमा नेपाली साहित्यमा रहिरहने छ। ■

कृति : मरुभूमिको फूल
विधा : नियात्रा/संस्मरण
प्रकाशन : २०७७
प्रकाशक : बी.एन. पुस्तक संसार प्रालि.
मूल्य : २५०/–

# हत्केलामा पृथ्वी लिएर उभिएको मान्छे

■ गीता त्रिपाठी

कवि विमला तुम्खेवाका कवितामा जीवनको सूक्ष्म अनुभूति विधिवत्भन्दा अनायास प्रकट भएको पाइन्छ । उनका सतचालीस थान कविताहरूको सँगालो 'हत्केलामा पृथ्वी लिएर उभिएको मान्छे'भित्रका कविताले जीवन भोगाइका कैयौँ विशिष्ट अनुभूतिहरूलाई आकर्षक शैलीमा सामान्यीकरण गरिदिएका छन् । कविता लेख्नु भनेको जीवनका हरेक टुक्रालाई ऐनामा हेर्न लालायित हुनुजस्तै रहेछ । छर्लङ्ग हेर्ने चाहना र धमिलो मात्र देखिनुबीचको अनुभूति नै तुम्खेवाका कविताको प्रस्तुत र अप्रस्तुत भाव सौन्दर्य हो ।

नारीस्वर मुखर छ, यस कृतिमा तर सबैले भन्दै आएका भन्दा फरक गरी पितृसत्ताको भन्दा पनि पुँजीबजारका अतिसयोक्तिहरूलाई उदाङ्गो पारेका छन् उनका कविताले; मानवीय संवेदनालाई अर्थ दिएका छन् उनका चेतनाहरूको यस वैश्विक प्रकाशनले । जेठी सुब्बेनीको चरित्र र स्वभावलाई चित्रकारले जस्तै उभ्याउने तुम्खेवाले जीवनको सम्पूर्णतालाई यही एउटा कवितामै सर्लक्क उतारेकी छन् । उनले चयन गरेका शब्दहरूको तरलताले कविताको स्वाद मौलिक बनेको छ । उनका कविताको शक्ति भनेकै पाठकलाई विदितबाट अविदितको सौन्दर्यमा पुऱ्याउनु हो ।

श्रमका योगले नथाकेको शरीरकथामा रोगले थलिनु जीवन शास्त्रको अन्तिम अध्याय हो र यसपछि गीतको अस्तित्व सुरु हुन्छ, चाहे त्यो वियोगान्त होस् वा संयोगान्त ! हाम्रा संस्कार गीतका प्रतिध्वनिमा तिनै धाननाचको झल्को फुल्ने सुगरले गालेका आँखाभित्रका आँसुको आभा टल्किएको हुन्छ । किराँत आइमाई अर्थात् प्रकृतिकी देवी सनातन जीवन बाँच्दाबाँच्दै आएको आगन्तुक रोगलाई देशमा पसेको परदेशीलाई झैँ झर्को मान्छिन् किनकि त्यो परदेशी पाहुना होइन, उनको शरीरको अस्तित्व समाप्त पार्न आएको लुटेरा हो ।

कवि तुम्खेवाले यसरी नै पालो, संसारका तानाशाहलाई खुलापत्र, मेरो कथाको पनि कविता लेख्नु है, सहरको यौटा बदनाम कथा, छोरी, साडी, अनागरिक, सच्याऊ यो इतिहास, खेल, सेतो गुलाफको फूल, अन्तिम भेट, अठोट, जोसँग सम्बन्धित छ, जीवन पुतली खेलजस्तो हुन्न, अस्तित्व, सम्बोधनको एउटा सवाल, त्रासदी, नेपालको नक्सामा किनिमाको तिहुनजस्ता सत्र थान कवितामा नारी विषयका पीडादायी कथ्यमा विद्रोहको नयाँ ढाँचा संयोजन गरेकी छन् । उनका कविताले शरीरभन्दा मानस अस्तित्वको प्रश्न उठाएको छ । यसरी नै तुम्खेवाका पात्रहरू कवितामा केही विशेष खोजमा रहेका भेटिन्छन् । भोक र विसङ्गतिका कविताबाट देशको नक्सा फेरिन नसकेकाप्रति उनका कवितामा विद्रोह छ ।




प्रस्तुतिको यो मौलिकता विमलाका कवितामा निकै ठाउँमा भेटिन्छन् । उनका कवितामा देश र माटोको चिन्तनमा जनताका विशिष्ट स्वरूप र संस्कृति सँगसँगै आएका छन् । किनिमा र अकबरे खुर्सानीको आदिवासी स्वाद देशको राष्ट्रियताभित्रै छ । नेपाल भन्ने देशको नक्सामा आदिवासी स्पर्श गरेको छ उनको बुढीऔँलाले । ठाउँ कुठाउँ ल्याप्चे ठोक्ने यही औँलामा देशको अस्तित्व र आयतन देख्नु निकै ठूलो विद्रोह र व्यङ्ग्य हो । तुम्खेवा इतिहास सच्याउन कविताले हत्केलामा पृथ्वी उठाएर नेतृत्वको सामु उभिएकी कवि–योद्धा हुन् । र, फरक यति छ योद्धाहरू तरबार लिन्छन्, उनी कलम ।

मैनजस्तै पग्लेर सकिने जीवनमा उज्यालोजस्तो सम्झना पनि मिसिएको हुन्छ । कविले प्रेमलाई कविताभन्दा निकै माथिल्लो स्थान दिएकी छन् । प्रेमले लेखिएका कविता सुन्दर हुने भाव प्रकट गरेर उनले आफ्नो कवि व्यक्तित्वको अर्थ स्थापित गरेकी छन् । वास्तवमा कवि मानिनु कविताको सामर्थ्य हो । कविका नामबाट कविता चिनिनुमा भन्दा कविताको शीर्षकबाट चिनिएका कविको खोजी छ उनका कवितामा । विमला तुम्खेवाको कवि प्रेमपथको सहयात्री हुन चाहन्छ; प्रतिरोधको धुनमार्फत सहभावको सन्देश दिन चाहन्छ । ■

कृति : हत्केलामा पृथ्वी लिएर उभिएको मान्छे
विधा : कविता सङ्ग्रह
कवयत्री : विमला तुम्खेवा
प्रकाशक : साङ्ग्रिला बुक्स
पृष्ठ : ८४
मूल्य : रु. २५०।–